ई-पुस्तकालयलाई उपहार

२०७०।०९।१६

# पाल्पाको इतिहास तथा संस्कृति

कर्णबहादुर बानियाँ, पीएच.डी.

प्रकाशकः



पुरकोट सन समाज, गुल्मी

# प्रकाशकीय

इतिहासको अध्ययन र उत्खनन गर्ने कार्यको महत्ता सर्वकालिक छ । उत्पत्ति, विकास र विस्तृति या संकुचनमार्फत घटित हुने स्थापन वा विस्थापनका प्रक्रियाहरु सतत् रुपमा अपेक्षित छन् । विषयवस्तु र अस्तित्व या विलयनको खोजी अधिकत्तर विज्ञानसम्मत हुने गर्दछ र कैयन् सन्दर्भहरुमा विज्ञानका स्थापित सीमाहरु खस्कनु, भत्कनु र अतिक्रमित हुनु पनि उत्तिकै अपेक्षित छन् । यस अर्थमा इतिहासको कुनै सन्दर्भ वा कालखण्डको सकल स्वरुप अनावरण गर्ने कार्य भनेको गहन अन्वेषण कार्य हो । यो तथ्यहरुको आधारमा अनुप्रसायुक्त सार खिच्ने इमान्दार प्रयत्न पनि हो । नेपालको पश्चिम क्षेत्रमा पर्ने पाल्पा क्षेत्रको इतिहास अध्ययन गर्ने र यो रुपमा प्रस्तुत गर्ने जो प्रयत्न डा. कर्ण बहादुर बानियाँ ज्यूले गर्नुभएको छ त्यो तसर्थ पनि प्रशंसनीय छ र स्तुत्य छ । त्यसमा थप संस्कृतिको पाटो समेत अन्योन्याश्रित रुपले संश्लिस्ट भएर आउनुले यसमा अझ गुरुत्व थपिएको छ । कुनै पनि संस्कृतिको अध्ययन सामान्य जस्तो लाग्ने अर्को असामान्य गतिविधि हो । यस सँगालोमा अध्येता डा. बानियाँ पाल्पाको साँस्कृतिक इतिहासको समेत सन्धान गर्ने कार्यमा आश्चर्यजनक ढंगले सुस्पष्ट र सबल देखिनुभएको छ, जस्ले गर्दा पाल्पाको सन्दर्भित समय बाँचेको जीवशैली प्रखर रुपमा मुखरित भएर आएको छ । यस्तो अनुसन्धानात्मक कृति प्रकाशनको अभिभारा पूरा गर्न पाउँदा पुरकोट सेन समाज, गुल्मी, गौरवान्वित छ । यस समाजका हरेक सदस्यहरुको पुस्तैनी साइनो गाँसिएको पाल्पा अथवा पालपाको बारेमा अध्ययन अनुसन्धान गरी यस्तो विशद महत्वको सँगालो तयार पार्नुहुने श्रद्धेय विद्धान डा. कर्णबहादुर बानियाँज्यू प्रति पुरकोट सेन समाजको तर्फबाट हार्दिक कृतज्ञता ज्ञापन गर्दछौं । यो कृति विषयगत क्षेत्रका विज्ञ एवं शोधार्थी/अध्ययनार्थीहरु लागि महत्वपूर्ण त रहने नै छ, आम पाठकहरुका लागि समेत रुचिकर बौद्धिक खुराक हुने कुरामा हामी विश्वस्त छौं ।

**पुरकोट सेन समाज, गुल्मी**

# कृतज्ञताज्ञापन

पाल्पा नेपालको पश्चिमाञ्चलमा पर्ने लुम्बिनी अञ्चलका छ जिल्ला मध्येको एक पहाडी जिल्ला हो । यो जिल्ल्ला यस क्षेत्रमा पाइने विविध चिज बस्तु वा प्राकृतिक मनोरम दृश्यका साथै ऐतिहासिक महत्वको स्थलका रूपमा पनि देश तथा विदेशमा समेत चर्चित छ । तर उपयुक्त पाठ्य सामग्रीको अभावमा यस क्षेत्रको ऐतिहासिक महत्व ओझेलमा परेको छ । यही कुरा महसुस गरेर संक्षिप्त रूपमा भएपनि पाल्पाको इतिहास तथा संस्कृतिको बारेमा जानकारी गराउने उद्देश्यले यो पुस्तक तयार गरिएको छ ।

हुनत यस पुस्तकलाई तिथ्यावलीको आधारमा अध्याय विभाजन गरेर सिलसिलेवार रूपमा प्रस्तुत गर्न सकेको भए अति बेश हुने थियो । तर त्यसको लागि केही कठिनाइहरू थिए । पाठकहरूको चाहना एउटै पुस्तकमा पाल्पाका बारेमा जान्नुपर्ने समस्त कुरा आओस भन्ने थियो ।  त्यसका लागि तिथ्यावलीको आधारमा सिलसिलेवार ग्रन्थ तयार गर्दा एउटै पुस्तकमा धेरै कुरा समेट्न सकिने थिएन । त्यसका लागि कि त बृहत् आकारको ग्रन्थ तयार गर्नु पर्दथ्यो कि त छोटकरीमा सबै कुरा समेट्नु पर्दथ्यो । ठूलो आकारको ग्रन्थ तयार गर्न विभिन्न कठिनाइहरू थिए भने सानो आकारको पुस्तकमा सबै कुरा समेट्न सकिने थिएन जसबाट पाठकहरूको चाहना पूरा हुन सक्दैनथ्यो । त्यसकारण यो पुस्तकलाई विभिन्न लेखको सङ्ग्रहको रूपमा प्रस्तुत गरिएको छ । यो पुस्तकलाई अलगअलग लेखहरूको सङ्गालोको रूपमा प्रस्तुत गरिएको हुँदा कतिपय प्रशंगहरू दोहोरिएका हुन सक्दछन् । सम्बन्धित लेखको पुष्टि र प्रशंग मिलाउन ती कुरा राख्न आवश्यक छ । तर अघिल्लो लेखमा उल्लेख गरिएका कुरा पछिल्लो लेखमा पनि दोहोरिएर आउँदा पाठकहरूलाई झर्को लाग्न सक्दछ तापनि यसलाई बाध्यता मानिदिनुहुन अनुरोध छ ।

पाल्पाको भूगोलको कुरा आउँदा पाठक अलमलमा पर्नसक्ने देखिन्छ । त्यसकारण पाल्पाको भू-भागलाई समयानुकुल बुझ्न आवश्यक छ । त्यसको मतलव सेनकालीन पाल्पा, एकीकृत नेपालमा विलय भएको पाल्पा र वर्तमान पाल्पा भन्ने हो । सेनकालीन पाल्पा पूर्वमा देवघाट, उत्तरमा भोट, पश्चिममा रिडी र दक्षिणमा तराइको मैदानसम्म फैलिएको पाइन्छ भने एकीकृत नेपालमा गाभिएपछि पाल्पा पश्चिमतिरको प्रशासनिक केन्द्रको रूपमा रहेको देखिन्छ । एकीकृत नेपालमा वर्तमान धवलागिरि र लुम्बिनी अञ्चलको पहाडी इलाकासम्म पाल्पा गौंडाको प्रशासन रहेको पाइन्छ । अतः यस पुस्तकमा पाल्पाको उल्लेख गर्दा वि.सं. १८६१ सम्म सेनवंशको शासन चलेको हुनाले सो समयभन्दा अघिको अवधीलाई सेनकाल, त्यसपछि वि.सं. २०२२ सम्म पाल्पा

गौँडाको प्रशासन रहेकोले सो अवधीलाई विस्तृत पाल्पा र त्यसपछि वर्तमान भूगोलभित्र रहेको पाल्पा जिल्लाको रूपमा चित्रण गरिएको छ ।

यो ग्रन्थ तयार गर्नका लागि आवश्यक सामग्री सङ्कलनमा थुप्रै महानुभावहरूले अमूल्य सहयोग दिनु भएको छ । प्रत्यक्ष र अप्रत्यक्ष रूपमा सहयोग पुऱ्याउने सबैप्रति कृतज्ञताज्ञापन गर्नु म आफ्नो मुख्य कर्तब्य ठान्दछु ।

यस पुस्तकका लागि आवश्यक पर्ने सामग्री सङ्कलनमा विभिन्न संघसंस्थाबाट अमूल्य सहयोग प्राप्त भएको छ । सामग्री सङ्कलनमा सौहार्द रूपमा सहयोग दिने ती संस्थाहरूप्रति आभार प्रकट गर्नु मेरो परम कर्तब्य हो । ती संघसंस्था मध्ये राष्ट्रिय अभिलेखालय, नेपाली सेनाको जङ्गी अड्डाको पुस्तकालय, त्रिभुवन विश्वविद्यालयको केन्द्रीय पुस्तकालय, केशर पुस्तकालय, नेपाल र एशियाली अनुसन्धान केन्द्रको पुस्तकालय, पुरातत्व विभागको पुस्तकालय, राष्ट्रिय पुस्तकालय, मदन पुस्तकालय, त्रिभुवन बहुमुखी क्याम्पसको पुस्तकालय र मालपोत कार्यालय पाल्पाबाट प्राप्त सहयोगको लागि आभार प्रकट गर्दछु । यस पुस्तकमा समावेश गरिएका कतिपय लेखहरू गरिमा, पाल्पा दर्पण, पाल्पा दर्शन, पाल्पा मिलन, प्रतिभा, प्राज्ञिक प्रवाह र भ्वाइस अफ हिस्ट्री नामक पत्रिकामा प्रकाशित भएका थिए जसलाई परिमार्जन गरी यस पुस्तकमा प्रकाशित गरिएको छ । ती लेखहरू प्रकाशित गरिदिएकोमा माथि उल्लेखित पत्रिकाहरूप्रति आभारी छु ।

यस कृतिलाई आफ्नो मुहार देखाउनका लागि प्रकाशकको आवश्यकता थियो जसको प्रबन्ध आदरणीय सूर्यबहादुर सेनले गरिदिनु भएको छ । यो अमूल्य गुणका लागि म उहाँप्रति सदा ऋणी रहने छु । यस प्रकारको सत् कार्यका लागि उहाँप्रति आभारी छु । यस पुस्तकको प्रकाशनको जिम्मेवारी लिइदिनु भएकोमा ............ धन्यवाद छ ।

अध्ययन अनुसन्धानमा निरन्तर लागि रहनका लागि अनुकुल वातावरण सिर्जना गरिदिएकोमा श्रीमती विष्णुदेवी बानियाँलाई धन्यवाद छ । साथै सामग्री सङ्कलन तथा टाइपिङमा सहयोग पुऱ्याएकोमा छोराहरू रोशन र किरण, छोरी दीपा तथा बुहारी सहनशीलाका साथै जुवाईं चन्द्रप्रकाश खड्कालाई पनि धन्यवाद छ ।

यो ग्रन्थ मुद्रण गरिदिएकोमा नविन सेन, पुरकोट अफसेट प्रेसलाई पनि धन्यबाद दिन चाहन्छु ।

२०७० जेठ
कर्णबहादुर बानियाँ
तानसेन, पाल्पा

# विषयसूची

# १. 'पाल्पा' नामकरण सम्बन्धी केही अवधारणाहरू : एक ऐतिहासिक विवेचना

## १. विषय प्रवेश

नेपालको पश्चिमी क्षेत्रमा अवस्थित पाल्पाको गरिमा विशिष्ट प्रकारको छ । त्यसकारण पाल्पाको बारेमा धेरै नै शोधखोज भएका छन् । पाल्पाको बारेमा खोजअनुसन्धान गर्दा 'पाल्पा' शब्दको उत्पत्ति कसरी भयो ? यो शब्द कहिलेदेखि प्रचलनमा आयो ? यो शब्दको ऐतिहासिक तथ्यसँग के कस्तो सम्बन्ध छ ? भन्ने बारेमा तर्कवितर्क गर्न आवश्यक छ । केही पूर्ववर्ती विद्वानहरूले यस बारेमा केही तर्क प्रस्तुत गरेका छन् । तर ती तर्कहरू युक्तिसङ्गत नलागेको हुनाले त्यस सम्बन्धी अवधारणाहरूको विवेचना गरी सही निष्कर्षमा पुग्ने ध्येयले यो लेख तयार गरिएको छ ।

## २. 'पाल्पा' नामकरण सम्बन्धी केही अवधारणाहरू

आजकाल पाल्पा भन्नाले लुम्बिनी अञ्चलको एक पहाडी जिल्ला भन्ने बुझिन्छ तर यसको ऐतिहासिक पृष्ठभूमि अध्ययन गर्ने हो भने यो शब्दले निकै व्यापकता पाएको देखिन्छ । मध्यकालमा यस क्षेत्रमा 'पाल्पा' एक समृद्ध र सबल राज्य थियो जसको भौगोलिक क्षेत्र पूर्वमा बराह क्षेत्र, पश्चिममा रुरुक्षेत्र, उत्तरमा मुक्तिक्षेत्र र दक्षिणमा हरिहरक्षेत्रसम्म फैलिएको थियो । नेपालको एकीकरणको सिलसिलामा पाल्पा राज्य नेपालमा गाभिएपछि पनि पाल्पा गौंडा नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा रहेको पाइन्छ ।

मध्यकालमा एक सबल राज्य र आधुनिककालमा नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा रहेको पाल्पाको नामकरण सम्बन्धमा विभिन्न विद्वानहरूले आ-आफ्नै किसिमका तर्क दिएका छन् । यस सम्बन्धमा विद्वान नारायणप्रसाद श्रेष्ठले 'पाल्पाको...सम्झना गर्दा' भन्ने लेखमा पाल्पा शब्दको उत्पत्ति बारे इटालियन विद्वान प्रोफेसर जोसेफ टुचीको भनाई भनी यस्तो तर्क पेश गरेका छन्–

> "मंगोलियाका यी मगरहरूले भोट तिब्बतदेखि लिएर मध्य नेपालसमेत कब्जा गरेका थिए । नेपालको यस भागलाई मगरात भनिन्थ्यो । यिनीहरू घोडचढिका रूपमा त खप्पिस थिए तर कला, कौशल, सभ्यता वा संस्कृतिमा भने अलि

पछि परेका थिए। त्यो मगराँत राज्य पछि गएर टुक्रियो अलग्गियो अनि यसलाई मंगोलवासीहरूले बालवा भन्ने नामले बोलाउन थाले। मंगोलियन भाषामा बालवाको अर्थ शीप, कला वा कालीगढ हुन्छ। मध्य एसियाबाट तल दक्षिणतिर ओरालो लाग्ने यी मंगोल जातिहरूले आफूभन्दा कला र संस्कृतिमा धनि भएकोले मगराँत देशलाई बालवा भनेका हुन र बालवाको अपभ्रंशबाट नै पाल्पा भन्ने नाम चलेको हो।" [१]

श्रेष्ठको यस तर्कलाई पुष्टि गर्ने प्रमाणहरू प्राप्त गर्न सकिएको छैन। साथै प्राचीन समयमा हिमालयको काखमा रहेको कामरूप(आसाम)देखि कर्तृपुर(कुमाउ)सम्मको भू-भागलाई 'नेपाल मण्डल' भनिन्थ्यो भन्ने कुरा सर्वविदितै छ। त्यसकारण त्यसबखत नेपालको कुन भागलाई 'बालवा' भनिन्थ्यो भन्ने कुरा जिज्ञासाको विषय बनेको छ। साथै नेपाल कहिल्यै पनि मंगोलिया वा भोटको अधिनमा परेको देखिँदैन। अर्कोतिर पाल्पा भन्ने नाम सेनवंशको शासनकाल अर्थात् विक्रमको सोह्रौं शताब्दीको उत्तरार्द्धपछि मात्र प्रचलनमा आएको पाइएकोले यो शब्दको उत्पत्ति प्राचीनकालमा नै भएको हो भन्ने कुरामा पनि आशंका अभिव्यक्त हुन्छ। त्यसकारण श्रेष्ठको अभिमतलाई सहजै स्वीकार गर्न सकिँदैन।

यस सिलसिलामा अर्का विद्वान विष्णुप्रसाद घिमिरेले **पाल्पा राज्यको इतिहास भाग-१** भन्ने पुस्तकमा पाल्पा शब्दको उत्पत्ति शीर्षक दिएर यस्तो विचार अभिव्यक्त गरेका छन्–

"भोटबर्मेली भाषा-परिवारमा 'बासस्थान' वा 'घर'को अर्थमा 'पालपा' शब्द प्रयोग हुन्थ्यो। यसै भाषा परिवारका मगरहरूले आफ्नो बासस्थानलाई 'पालपा' भनेका र त्यस क्षेत्रमा सेनहरूको प्रवेश भएपछि ब्राह्मणहरूले आफ्नै भाषाबाट उक्त 'पालपा' शब्दलाई हेर्न थाले, अनि 'पालपा' शब्दको मूल प्रकृति 'पार्पर' वा 'पार्परा' मान्दै यिनको विश्लेषणको रूपमा 'पार्परीय' शब्द पनि यदाकदा प्रयोग गर्न थाले, तैपनि जनजिब्रोमा बढी 'पालपा' शब्द प्रयोग हुँदै आयो र पछि पालपा शब्दबाट 'पाल्पा' बन्न गएको हुन सक्छ।" [२]

घिमिरेको यो तर्क झन् आफैमा विवादास्पद र द्विविधायुक्त छ। किनकि उनले एकातिर पाल्पा शब्दको उत्पत्ति संस्कृत शब्द 'पार्पर' बाट भएको हो कि भन्ने शंका गरेका छन् भने अर्कोतिर यो शब्द भोटबर्मेली भाषा परिवारको हो कि भन्ने अनुमान

गरेका छन् । साथै 'पाल्पा' शब्दको अर्थ मगर भाषामा 'घर' वा 'बासस्थान' हुन्छ भनेका छन् जुन कुरा मिल्दैन । किनभने मगर भाषामा घर वा बासस्थानलाई 'इम' र गाउँलाई 'लाङ्घा' भनिन्छ ।[३]

यसरी नै अर्का विद्वान योगी नरहरिनाथले **देवभूमि भारत एवं आध्यात्मिक नेपाल** नामक ग्रन्थमा 'पाल्पा' शब्दको उत्पत्ति बारे यस्तो तर्क प्रस्तुत गरेका छन्–

"पल्लवा ये जनपदा : महाभारत वर्णिता :
पालानाम पालने जाता : पालवा पालपालित:
आदिपालादय : पाला : जाता : सहज पालत : ॥२२॥" [४]

योगीको भनाइअनुसार महाभारतमा सक, यवन र किरातकासाथै पल्लवहरूको पनि उल्लेख छ । पल्लवहरूलाई 'पाल' भनिन्थ्यो र पालहरूद्वारा शासित क्षेत्र हुनाले यसलाई पाल्पा भनिएको हो । यो भनाइअनुसार प्राचीनकालमा यो क्षेत्रमा पाल वंशको शासन भएको देखिन्छ तर ती पाल वंशी को थिए र उनीहरूले कहिले शासन गरे ? भन्ने कुराको जानकारी पाउन सकिन्न । इसाको आठौँ शताब्दीदेखि बाह्रौँ शताब्दीसम्म (वि.सं.७५७-११५७) कुर्माञ्चलमा (केदारखण्डदेखि हिमवत्खण्डसम्म) कत्युँरी वंशका शासकहरूको प्रभाव भएको र यिनै कत्युरी वंशका एकथरी शासकले आफूलाई पाल वंश भन्ने गरेको पाइन्छ ।[५] यिनीहरूले खस राजा नागराजको अधिनमा पर्नुभन्दा पहिलेसम्म कर्णाली प्रदेशमा शासन गरेको देखिन्छ ।[६] तर प्राचीनकालमा मगराँत क्षेत्रमा पाल वंशको शासन भएको कुनै प्रमाण पाउन सकिँदैन । यसरी ऐतिहासिक तथ्यले मेल नखाएको हुनाले योगीको विचारसँग पनि सहमति जनाउन मिल्दैन ।

### ३. 'पाल्पा' नामकरण सम्बन्धी ऐतिहासिक विवेचना

विभिन्न विद्वानहरूले गरेका तर्कहरू युक्तिसंगत नलागेपछि पाल्पा शब्दको उत्पत्ति कसरी भएहोला भनेर घोत्लिनुपर्ने हुन्छ । इतिहासकारहरूले प्राचीनकालमा नेपाल आसामदेखि कुमाउँसम्मको विशाल भूभागमा फैलिएको कुरा उल्लेख गरेका छन् । त्यतिखेर केन्द्रबाट सोझै शासन गर्न कठिनपर्ने भएकोले मुलुकलाई विभिन्न एकाइमा विभक्त गरिएको हुन्थ्यो जसलाई 'विषय' भनिन्थ्यो । गण्डकी प्रदेशमा स्थानीय स्तरको प्रशासन चलाउन गण्डीगुल्म, धवलस्रोत, मंवर र लमजुङ्ग नामका विषयहरू थिए भन्ने उनीहरूको भनाइ छ ।[७] रिडीखोलादेखि पश्चिमपट्टिको इलाकालाई गण्डीगुल्म, धवलागिरि हिमालको काखमा रहेको भूभागलाई धवलस्रोत र मर्स्याङ्दी

नदीदेखि पश्चिमको इलाकालाई लमजुङ विषय भनिन्थ्यो । मर्स्याङ्दीदेखि पश्चिम राप्ती नदीसम्म, धवलस्रोतदेखि दक्षिण र गण्डीगुल्मदेखि पूर्वोत्तरको इलाकालाई 'मंग्वर विषय' भन्ने गरेको पाइन्छ । यो इलाकालाई मध्यकालमा 'मगरांत क्षेत्र' भनिन्थ्यो । मगर जातिमा प्रचलित छोरी बांधा राख्ने प्रथा उन्मुलन गर्दा जारी गरिएको वि.सं. १८९३ को आदेशमा मर्स्याङ्दीदेखि पश्चिम प्युठानसम्मको इलाकालाई मगरांत भनिएको छ ।[८] पाल्पा मर्स्याङ्दीदेखि पश्चिम र प्यूठानदेखि पूर्वको भूभागमा पर्ने हुनाले मध्यकालको पूर्वार्द्धमा यो क्षेत्र मगरांत क्षेत्र अन्तर्गत भएको देखिन्छ ।

विक्रमको बाह्रौं शताब्दीमा विशाल नेपाल राज्य टुक्रिसकेपछि कर्णाली प्रदेशमा खस राज्य स्थापना भयो भने दक्षिण-पूर्वी क्षेत्रमा सिम्रौनगढ नामक राज्यको उदय भयो । त्यसपछि नेपाल मण्डल नामको राज्य काठमाडौं उपत्यकामा मात्र सीमित हुन पुग्यो । कर्णाली प्रदेशमा नागराजले स्थापना गरेको खस राज्य विस्तारैविस्तारै पूर्वतिर फैलिंदै गयो र तेह्रौं शताब्दीसम्ममा सो राज्यको पूर्वी सीमाना गण्डकी प्रदेशसम्म पुग्न गयो ।[९] गण्डकी प्रदेशमा खस राज्यको प्रभाव जमेको बेला मगरांत क्षेत्र पनि सो राज्यअन्तर्गत थियो भन्ने कुरा निम्न लिखित तथ्यहरूबाट सावित हुन्छ-

(१) गोरखाको ताघवाइ गुम्बामा रहेको आदित्य मल्लको वि.सं. १३७८ र पुण्य मल्लको वि.सं. १३८५ को ताम्रपत्र अनुसार खस राज्यको प्रभाव त्रिशुली नदीसम्म थियो ।[१०] कर्णाली प्रदेशदेखि पूर्व त्रिशुली नदीभन्दा पश्चिमको इलाकालाई मगरांत भनिने हुनाले सो क्षेत्र खस राज्यको अधिनमा रहेको कुरा स्वत : सिद्ध हुन्छ ।

(२) लुम्बिनीको अशोक स्तम्भमा 'श्री रिपुमल्लश्चिरञ्जयतु :' भन्ने वाक्यांश कुंदिएको छ[११] जसले खस साम्राज्यको उत्कर्षकालमा मगरांत र त्यसको आसपासको क्षेत्र सो राज्यअन्तर्गत थियो भन्ने कुराको पुष्टि गर्छ ।

(३) खस राजा पृथ्वी मल्लको समयमा उनका अमात्य देव वर्मा छत्यालले दाउन्ने पहाडमा शैलदुर्ग निर्माण गराएका थिए ।[१२] यो कुराले पनि त्यतिखेर मगरांत क्षेत्र खस साम्राज्यको अधिनमा रहेको देखिन्छ ।

(४) मगरांत क्षेत्रका अधिकांश गाउंठाउंको नाम मगरभाषामा रहने गरेकोमा खसहरू सो क्षेत्रमा बस्न थालेपछि त्यो क्षेत्रका केही गाउंठाउंको नाम खसभाषामा रहन थालेको पाइन्छ । आजकाल पाल्पा जिल्ला भनेर चिनिने मगरांत क्षेत्रका खस्यौली, देउराली, खानीछाप, पोखराथोक, मदनपोखरा, पिपलडांडा, रामपुर आदि गाउंठाउंका नाम

त्यसरी नै रहन गएको पाइन्छ । नेपाली बृहत् शब्दकोशमा दिइएको अर्थ अनुसार खसहरूको बसोबास भएको क्षेत्रलाई 'खस्यौली' भनिन्छ ।[13] यस्तो नाम गरेको ठाउँ वर्तमान पाल्पा जिल्लाको पश्चिममा पर्ने भैरवस्थान नजिकमा छ ।

खस साम्राज्यको विस्तार भएपछि विशाल भूभागमा फैलिएको राज्यमा केन्द्रबाट मात्र प्रशासन चलाउन कठिन पर्ने भएकोले स्थानीय स्तरमा प्रशासन सञ्चालनका लागि राज्यलाई विभिन्न  एकाइमा बाँडिएको थियो जसलाई विषय भनिन्थ्यो । त्यस्ता विषयहरू के कति थिए भन्ने कुराको यकिन नभएतापनि गोह(गर्ज्याङ्कोट), भुमकर(तिब्रीकोट) र मगरांत विषयहरूमा महिपाल र विश्वपाल नाम गरेका पाल वंशका सामन्तहरूले विषयपतिको रूपमा शासन गरेको पाइन्छ । कर्णाली प्रदेशका पुराना शासक पालहरूलाई आफ्नो अधिनमा पारी नागराजले खस राज्यको स्थापना गरेका थिए । त्यतिखेर उनले पालहरूलाई यथावत् रूपमा स्थानीय शासनको जिम्मा दिएको देखिन्छ ।[14] खस साम्राज्यको प्रभाव उत्कर्षमा पुगेका बेला अन्य स्थानमा जस्तै मगराँत क्षेत्रमा पनि पाल वंशका प्रशासक(विषयपति) नियुक्त हुने गरेको पाइन्छ । ती विषयपतिले मगराँत क्षेत्रको रिडीखोला नजिकमा रहेको सिलाङथोक नामक थुम्कामा (वर्तमान पाल्पा जिल्लाको भैरवस्थान नजिक) कोट निर्माण गरी आफ्नो मुकाम खडा गरेको देखिन्छ । पाल वंशका शासकले आफ्नो मुकाम छाडेपछि सो स्थानलाई 'पालपा' भन्ने गरेको पाइन्छ ।[15]

मध्यकालको पूर्वार्द्धसम्म कर्णाली प्रदेशमा पाल वंशको शासन थियो । सूर्य पालको समयमा वि.सं.११५७ तिर नागराजले पाल वंशलाई आफ्नो अधिनमा पारी कर्णाली प्रदेशमा आफ्नो राज्य स्थापना गरेका थिए ।[16] वि.सं.१४६१ मा खस साम्राज्य विघटन भएपछि सो राज्यअन्तर्गतका सम्पूर्ण स्थानीय सामन्तहरू स्वतन्त्र भए ।[17] त्यसपछि मगराँत क्षेत्रमा पनि स्थानीय मगर मुखियाहरूका  स-साना थुम राज्य पुनर्स्थापना भएका थिए । ती थुम राज्यहरूलाई मासेर गण्डकी प्रदेशमा चौबीसी राज्य स्थापना भएको देखिन्छ । गण्डकी प्रदेशमा स्थापना भएका अधिकांश नयाँ राज्यहरूको नाम नौलो भएको पाइन्छ । मगराँत क्षेत्रको पहाडपर्वतले घेरिएको निसीभूजी इलाकामा रहेको मगर मुखियाको थुम राज्य मासेर वि.सं. १४९३ मा रुकुमका राजकुमार आनम्मले नयाँ राज्य स्थापना गरेपछि सो राज्यको नाम 'पर्वत' राखिएको थियो ।[18] त्यस्तै कालीगण्डकी र आँधीखोलाको बीचमा पर्ने बौघा, बिर्घा, लसर्घा र खिलुङ्का मगरको थुम राज्य मासेर वि.सं. १५५८ तिर भूपाल राव (जैन खान) ले नयाँ राज्य स्थापना गरेपछि सो राज्यको नाम 'भीरकोट' राखिएको थियो ।[19] यसरी नै रिडीखोलादेखि

पश्चिम र कालीगण्डकीदेखि दक्षिणमा रहेका मगर मुखियाका थुम राज्य मासेर वि.सं. १५५० मा रिप्दीकोटका सामन्त शासक रुद्रसेनले पनि नयाँ राज्य स्थापना गरेका थिए । उनले स्थापना गरेको नयाँ राज्यको राजधानी खस साम्राज्यका विषयपति 'पाल वंश'का सामन्तले निर्माण गरेको पुरानोकोटलाई बनाइएको थियो । पुरानोकोटलाई 'पाल्पापत्तन' भनिने हुँदा सोही नामबाट रुद्रसेनले स्थापना गरेको नयाँ राज्यको नाम पनि 'पाल्पा' रहन गएको देखिन्छ । भवदत्तकृत **सेनवंशावलीमा** रुद्रसेनलाई 'पाल्पापत्तन' विजय गर्ने र नागजातिको ऐश्वर्य पाएर सुशोभित भएको दुर्गाधिश भनी प्रशंसा गरिएको छ ।[२०] मगराँत क्षेत्रका अधिकांश बासिन्दा मगर थिए । उनीहरूलाई 'नागजाति' पनि भनिन्थ्यो । नागवंशीहरूले निर्माण गरेको थातथलोमा आफ्नो राज्य स्थापना गरेकोले नै रुद्रसेनलाई नागजातिको ऐश्वर्यले सुशोभित भएका भन्ने प्रशंसा गरिएको हुनुपर्दछ । पाल्पा राज्यको राजधानी तीन शताब्दीसम्म 'पाल्पापुरी' नामक थुम्कामा रहेको थियो । वि.सं.१८४२ मा महादत्त सेनले त्यसलाई तानसेनको शीरमा रहेको श्रीनगरमा सारेका थिए ।[२१] रुद्रसेनले स्थापना गरेको राज्य मणि मुकुन्द सेनको पालामा पूर्वमा बराहक्षेत्र, पश्चिममा रुरुक्षेत्र, उत्तरमा मुक्तिक्षेत्र र दक्षिणमा हरिहरक्षेत्रसम्म विस्तार हुँदैगएपछि 'पाल्पा' भन्ने नामले पनि ब्यापकता पाउँदै गयो । नेपालको एकीकरण अभियानमा पाल्पा राज्य नेपालमा गाभिएपछि पाल्पा नेपालको पश्चिमी क्षेत्रको जङ्गी, निजामती तथा न्याय प्रशासनको केन्द्र बन्न गयो त्यतिखेर पनि 'पाल्पा' शब्दले ब्यापकता पाएको थियो ।[२२]

कुनैपनि गाउँ, ठाउँ वा नदीनालाको नामकरण कुनै न कुनै ऐतिहासिक तथ्यको आधारमा गरिएको हुन्छ । अतः पाल्पा शब्दको उत्पत्ति पनि कुनै न कुनै जातिको इतिहास र संस्कृति झल्काउने प्रतिकको रूपमा भएको हुनुपर्दछ । नेपाली बृहत् शब्दकोशमा यो शब्दको उत्पत्ति भारोपेली परिवारको संस्कृत शब्द 'पाल' र भोटबर्मेली परिवारको 'पा' शब्द मिलेर (पाल्पा-ना.सं.पाल+भो.ब.पा) बनेको मानिएको छ ।[२३] **स्थाननाम कोशमा** कुनै पनि शब्दको भाषिक ब्याख्या कसरी गर्ने भन्ने सम्बन्धमा सो शब्दको अन्तमा जोडिएको प्रत्ययलाई आधार मान्नु पर्ने कुरा उल्लेख गरिएको छ ।[२४] माथि उल्लेखित शब्दकोशहरूको भनाइ मान्ने हो भने 'पाल्पा' शब्द भारोपेली भाषा परिवार र मगर भाषा परिवारबाट आएको मान्नुपर्ने हुन्छ । किनकि यस शब्दका पहिला दुई अक्षर 'पाल' लाई भारोपेली मानिएको छ र अन्त्यको एक अक्षर 'पा' लाई मगर भाषाको शब्द मानिएको छ । यस शब्दमा प्रयुक्त अलगअलग भाषा परिवारका दुई शब्दलाई विन्याश गरेर अर्थ लगाउँदा 'पाल'को अर्थ भारोपेली भाषामा ठकुरीको एक थर भन्ने बुझिन्छ ।[२५] **स्थाननाम कोश** अनुसार 'पा' को अर्थ खाम र मगर भाषामा

'छुटेको' भन्ने बुझिन्छ । **मेचीदेखि महाकाली** नामक ग्रन्थमा पनि 'पा' को अर्थ खाम र मगर भाषामा 'छुटेको' हुन्छ भन्ने कुरा उल्लेख गरिएको छ ।[२१] हाल नेपालको राप्ती अञ्चलमा पर्ने 'रोल्पा' को नामकरण सम्बन्धमा छलफल हुँदा खाम मगर भाषा बारे जानकारी राख्ने विद्वानले सो शब्द खाम मगर भाषाबाट आएको हो भनेका छन् । साथै 'रोल' को अर्थ पालो र 'पा' को अर्थ छुटेको अर्थात् 'रोल्पा'को अर्थ 'एकथरी शासकको पालो छुटेर अर्कोले राज्य लिएको' भन्ने अर्थ लाग्दछ भनेका छन् ।[२२] त्यही प्रशङ्गमा 'पाल्पा' शब्दलाई लिने हो भने 'पाल वंशको पालो छुटेर अर्को वंशले सो ठाउँ लिएको' भन्ने अर्थ निस्कन्छ ।

कर्णाली प्रदेशमा नागराजले स्थापना गरेको 'चल्ल वंश'को खस राज्य राजा आदित्य मल्लको समयमा टुटेको थियो । किनकि उनका छोरा कल्याण मल्लको बाबुको जीवनकालमा नै निधन भएको थियो र उनका नाति प्रताप मल्लले राजकाज सम्हाल्न नचाहेर बौद्ध भिक्षु बनेका थिए । त्यसकारण आदित्य मल्लको निधनपछि उनका छोरी जुवाईं 'पाल वंश'का पुण्य मल्ल खस राज्यका शासक बनेका थिए । यसरी पुण्य मल्लको पालाबाट खस राज्यमा 'पाल वंश'को शासन चलेको थियो[२४] र यस वंशका अन्तिम शासक अभय मल्लको शासनकालपछि खस राज्यको विघटन भएको थियो । त्यसपछि मगरात क्षेत्रमा पाल वंशको शासन टुटेकोले उनीहरूले छाडेको ठाउँलाई स्थानीय बासिन्दाहरूले 'पालपा' भनेका हुन सक्दछन् । साथै नागराजले स्थापना गरेको खस राज्यमा चल्ल र पाल वंशका शासक मिलेर शासन सञ्चालन गर्ने गरेको र यस क्षेत्रमा स्थानीय प्रशासकको रूपमा 'पाल वंश'का शासक रहने गरेकोमा[२५] खस राज्यको विघटनपछि यस क्षेत्रमा उनीहरूको शासन टुटेकोले स्थानीय बासिन्दाहरूले यस क्षेत्रलाई पाल वंशको शासन टुटेको अर्थमा 'पालपा' भन्ने गरेको हुन सक्ने सम्भावना छ ।

## ४. निष्कर्ष

मध्यकालमा मगरात क्षेत्र खस साम्राज्यको अधिनमा थियो । त्यतिखेर यो क्षेत्रमा 'पाल' वंशका स्थानीय प्रशासक अर्थात् विषयपति खटिने गरेका थिए । उनले आफ्नो क्षेत्रको रेखदेखकालागि रहनेबस्ने मुकाम हालको पाल्पा जिल्लामा पर्ने भैरवस्थान गा.वि.स.को सिलाङथोक (पुरानोकोट) भन्ने ठाउँलाई बनाएका थिए । खस साम्राज्यको पतनपछि मगरात क्षेत्रका प्रशासक बनेका पालहरू पनि यो क्षेत्र छाडेर गए । त्यसपछि यहाँ पुन : मगर मुखियाहरूको थुम राज्य चल्न थाल्यो । त्यतिखेर मगरहरूले यो ठाउँलाई पालहरूले छाडेको भन्ने अर्थमा 'पालपा' अर्थात् 'पालको पालो छुटेको'

भनेर चिन्न थाले। रिप्दीकोटमा शासन गर्ने रुद्र सेनले वि.सं.१५५० मा यो क्षेत्र आफ्नो अधिनमा लिएपछि यसै स्थानलाई राजधानी बनाई शासन सञ्चालन गर्नुकासाथै आफूले आर्जेको नयाँ राज्यको नामसमेत 'पालपा' राखेपछि यो शब्दले ब्यापकता पाएको देखिन्छ।

सारांशमा 'पाल्पा' शब्दको उत्पत्ति भारोपेली भाषाको 'पाल' र भोटबर्मेली भाषाको 'पा' शब्दको समायोजनबाट भएको हो। यसको अर्थ 'पालहरूले छाडेको ठाउँ' भन्ने हो। पालहरूले छाडेको ठाउँमा सेनवंशका शासकहरूले आफ्नो राज्य स्थापना गरेर सो राज्यको नाम 'पाल्पा' राखेको देखिन्छ। पाल्पा राज्य विस्तृत भूभागमा फैलिएपछि सो नामले पनि ब्यापकता पायो। अत : पाल्पा शब्दलाई ब्यापक बनाउनमा सेनवंशको महत्वपूर्ण योगदान रहेको छ।

## टिप्पणी

[१] नारायणप्रसाद श्रेष्ठ,"पाल्पाको...सम्झनागर्दा",**मधुपर्क**, वर्ष १७, अंक १, वि.सं.२०४१, पृ.१९–२०।

[२] विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग–१, चितवन : पदमा घिमिरे, वि.सं. २०४५, पृ.२२–२३।

[३] हर्षबहादुर बुढा मगर(सम्पा.), **मगर–रोमन–नेपाली–लिम्बु, अंग्रेजी संक्षिप्त शब्दकोश**, काठमाडौं : पुष्पावती बुडा मगर, वि.सं.२०५०, पृ.४ र ५६।

[४] योगी नरहरिनाथ, **देवभूमि भारत एवं आध्यात्मिक नेपाल**, काठमाडौं : वि. सं. २०३८, पृ.६९।

[५] एस. रामेश र वृन्दा रामेश, **कुमाउँ : ज्वेल्स अफ हिमालयज**, न्यू दिल्ली : यु बी एस पब्लिशर्स डिस्ट्रीब्यूटर्स लि., सन् २००१, पृ.८-९।

[६] सूर्यमणि अधिकारी, **द खश किङडम**, जयपुर : निराला पब्लिकेशन्स, सन् १९८८, पृ.३६।

[७] तुलसीराम वैद्य र भद्ररत्न बज्राचार्य, **मध्यकालीक नेपालको प्रशासनिक इतिहास** (८७९–१७६९), कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५५, पृ.११।

[८] चित्तरञ्जन नेपाली, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३५, पृ.१९१।

[९] अधिकारी, **पूर्ववत्**, टि.नं. ६, पृ.४२।

[१०] मोहनप्रसाद खनाल, **मध्यकालीन अभिलेख**, काठमाण्डू : लेखक स्वयं, वि.सं. २०३०, पृ.१–१२।

[११] योगी नरहरिनाथ, **इतिहास प्रकाश**, अंक २, भाग १, काठमाडौं : इतिहास प्रकाशक संघ, वि. सं. २०१३, पृ.८१ ।

[१२] योगी नरहरिनाथ, **हाम्रो देशदर्शन**, काठमाडौं : लेखक स्वयं, वि. सं.२०३२, पृ.३३ ।

[१३] बालकृष्ण पोखरेल र अन्य (सम्पा.) **नेपाली बृहत् शब्दकोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं.२०४०, पृ.२९३ ।

[१४] अधिकारी, **पूर्ववत्**, टि.नं.६, पृ.३५-३७ ।

[१५] शंकरमान राजवंशी(सम्पा.) **सेन बंशावली**, काठमाडौं : श्री ५को सरकार पुरातत्व र संस्कृति विभाग, वि.सं.२०२०, पृ.२३ ।

[१६] अधिकारी, **पूर्ववत्**, टि.नं.६, पृ.३५-३७ ।

[१७] उही, पृ. ५७-५९ ।

[१८] टेकबहादुर श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रुपरेखा**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ.३२–३४ ।

[१९] बाबुराम आचार्य, **श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी**, नेपाल : श्री ५ महाराजाधिराजका प्रेस सचिवालय, वि.सं.२०२४, पृ.२ र ४५–५३ ।

[२०] राजवंशी, **पूर्ववत्**, टि.नं.१५, पृ.२३ ।

[२१] घिमिरे, **पूर्ववत्**, टि.नं.२, पृ.५१–७१ ।

[२२] कर्णबहादुर बानियाँ क्षत्री, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पब्लिकेशन एण्ड डिष्ट्रिब्यूटर्स प्रा.लि.,वि.सं.२०६३,पृ.२२२–२४ ।

[२३] पोखरेल र अन्य, **पूर्ववत्**, टि.नं. १३, पृ.८१९ ।

[२४] कृष्णप्रकाश श्रेष्ठ(सम्पा.) **स्थाननाम कोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, वि.सं. २०४४, पृ.ग–घ ।

[२५] आर.डी."प्रभास" चटौत, **डोट्याली बृहत् शब्दकोश**, काठमाडौं : बेलु–विश्व स्मृति प्रतिष्ठान, वि.सं. २०५८,पृ.४८६ ।

[२६] (क) श्रेष्ठ, **पूर्ववत्**, टि.नं. २४, पृ.१३६ ।
(ख) **मेचीदेखि महाकाली**, भाग–४, काठमाडौं : श्री ५ को सरकार सञ्चार मन्त्रालय सूचना विभाग, वि.सं. २०३१, पृ. ९१ ।

[२७] नेपाल मगर संघका महासचिव रोल्पा निवासी श्री वसन्त घर्ती मगरसँग मिति २०६७ श्रावण ३ गते भएको वार्ता ।

[२८] अधिकारी, **पूर्ववत्**, टि.नं. ६, पृ.४४-४५ र ५६ ।

[२९] उही, पृ.३५-३७ ।

# २. राजनीतिक तथा प्रशासनिक इतिहासको दृष्टिमा पाल्पा

## १. विषय प्रवेश

नेपालको वर्तमान प्रशासनिक विभाजनअनुसार पाल्पा पश्चिमाञ्चल विकास क्षेत्रमा पर्ने लुम्बिनी अञ्चलअन्तर्गतको एक पहाडी जिल्लाको रूपमा परिचित छ । यो जिल्लाको पूर्वमा नवलपरासी, पश्चिममा अर्घाखाँची र गुल्मी, उत्तरमा गुल्मी, स्याङ्जा र तनहुँ अनि दक्षिणमा रुपन्देही जिल्ला पर्दछन् । मध्यकालमा पाल्पा विस्तृत भूभागमा फैलिएको एक शक्तिशाली राज्य थियो । यो राज्य नेपालमा गाभिएपछि पश्चिमी क्षेत्रको सैनिक तथा प्रशासनिक केन्द्र बन्न गयो । वि.सं.२०१८ मा नेपाललाई ७५ जिल्लामा विभाजन गरिएपछि पाल्पा लुम्बिनी अञ्चलको एक पहाडी जिल्लाको रूपमा मात्र रहन गएको छ । अत : मध्यकालमा एक सबल राज्यको रूपमा रहेको र सो राज्य एकीकृत नेपालमा गाभिएपछि पश्चिमतिरको प्रशासनिक केन्द्रको रूपमा रहेको पाल्पाको ऐतिहासिक गौरव गाथा के हो त भन्ने बारेमा चर्चा गर्नु यो लेखको उद्देश्य रहेको छ ।

## २. बृहत् नेपाल राज्यअन्तर्गत पाल्पा

नेपाल विश्वमानचित्रमा एसिया महादेशको दक्षिणमा चीन र भारत नामक विशाल मुलुकहरूको बीचमा अवस्थित छ । वर्तमान नेपालको यो भौगोलिक क्षेत्र मुख्यत : सुगौली सन्धि (सन् १८१६) र केही भू-भाग वि.सं १९१७ (सन् १८६०) पछि कायम हुन आएको हो । सुगौली सन्धिले नेपालको पश्चिमी तराईक्षेत्र ब्रिटीस भारतको अधिनमा पारेको थियो भने नेपालको एकीकरण अभियान चलिरहेको बेला यस मुलुकको भौगोलिक क्षेत्र पूर्वमा टिष्टा नदीसम्म र पश्चिममा काँगडा किल्लासम्म विस्तार भएको पाइन्छ । प्राचीनकालमा हिमालय पहाडको काखमा नेपाल नामक एक राज्य थियो भन्ने कुरा गोपालराजवंशावलीबाट ज्ञात हुन्छ ।[१] त्यतिखेर नेपाल नामक मुलुक कुमाउँ(कर्तृपुर)देखि पूर्वपट्टि र आसाम (कामरुप)देखि पश्चिमपट्टिको भू-भागमा अवस्थित थियो भन्ने कुरा समुद्र गुप्तको प्रयागमा रहेको शिलालेखबाट थाहा पाउन सकिन्छ ।[२] विशाल भू-भागमा फैलिएको नेपाल राज्यमा केन्द्रबाट मात्र सोभै प्रशासन सञ्चालन गर्न कठिन पर्ने हुनाले मुलुकलाई विभिन्न विषयहरूमा (जिल्लाहरू) विभाजन गरिएको थियो । स्थानीय स्तरमा प्रशासन सञ्चालन गर्न स्थापना गरिएका त्यस्ता

विषयहरू गण्डीगुल्म, धवलस्रोत, मंग्वर, लमजुङ्ग, उदयपुर, जिग्लोदम, पन्नग, पञ्चायत देशीय, पर्नपिंग आदि थिए ।[३] ती विषयहरू मध्ये गण्डीगुल्म, धवलस्रोत, मंग्वर र लमजुङ्ग गण्डकी प्रदेशमा पर्दथे । पाल्पा गण्डकी प्रदेशमा पर्ने हुनाले बृहत् नेपालभित्र यो क्षेत्र पनि पर्दथ्यो भन्ने कुरा स्पष्ट नै छ ।

प्राचीनकालमा विशाल भू-भागमा फैलिएको नेपालको अस्तित्व मध्यकालमा रहन सकेन । लिच्छवीवंशको अन्त्यपछि उक्त राज्य टुक्रिँदै गयो र विक्रमाब्द बाह्रौं शताब्दीको पूर्वार्द्धमा बृहत् नेपाल खस राज्य, नेपाल मण्डल र सिम्रौनगढ नामक तीनवटा राज्यमा विभाजित हुन पुग्यो । नेपालको पश्चिमी क्षेत्र कर्णाली प्रदेशमा नागराजले 'खस राज्य' स्थापना गरे ।[४] यो राज्य करीब तीन शताब्दीसम्म चल्यो । विक्रमाब्द पन्ध्रौं शताब्दीको उत्तरार्द्धमा विशाल भू-भागमा फैलिएको खस राज्यको बिघटन हुनगएपछि कर्णाली प्रदेशमा बाइसी र गण्डकी प्रदेशमा चौबीसी राज्यको उदय हुन गयो । यसरी नै दक्षिणतिरबाट आएका नान्यदेवले वि.सं. ११५४ मा नेपालको दक्षिण-पूर्वी तराई भेकमा सिमरौनगढ नामक राज्य स्थापना गरेका थिए ।[५] सो राज्य पनि चौधौं शताब्दीको अन्त्यतिर बिघटन भयो ।

### ३. मगराँत क्षेत्रअन्तर्गत पाल्पा

प्राचीनकालमा बृहत् नेपाल राज्य विशाल भू-भागमा फैलिएको र यातायात तथा सञ्चारको अभावले केन्द्रबाट सोझै प्रशासन सञ्चालन गर्न कठिन पर्ने हुनाले राज्यलाई विभिन्न जिल्लाहरूमा विभाजन गरिएको थियो जसलाई 'विषय' भनिन्थ्यो । त्यतिखेर अस्तित्वमा रहेका सामन्त शासित जिल्लाहरू मध्ये एउटा 'मंग्वर विषय' पनि थियो । 'मंग्वर' शब्द 'मगर' सँग मिल्दोजुल्दो भएको र मगर जातिको बसोबास स्थल नेपालको मध्यपश्चिमी क्षेत्र (गण्डकी प्रदेशको दक्षिणपश्चिमी इलाका) हुनाले मंग्वर विषय यही क्षेत्र हुनुपर्छ भन्ने विद्वान्हरूको तर्क छ ।[६] वि.सं. १८९३ को एक रुक्का अनुसार मर्स्यांदीदेखि पश्चिम प्यूठानसम्मको इलाकालाई 'बाहृ मगराँत' भनिन्थ्यो भन्ने ज्ञात हुन्छ ।[७] पाल्पालाई 'मगराँत क्षेत्र' भन्न सकिने आधारहरू यस प्रकार छन्-

(१) एकीकरणपछि जारी भएका विभिन्न आदेश, लालमोहर आदिमा मर्स्यांदीदेखि प्यूठानसम्मको क्षेत्रलाई मगराँत भनिएको छ र पाल्पा उक्त इलाकाको बीचमा पर्दछ ।

(२) पाल्पा राज्यको उदय हुनुभन्दा अघि यस क्षेत्रमा मगरहरूको राज्य थियो जसलाई

रूद्रसेनले पराजित गरी पाल्पा राज्यको स्थापना गरेका थिए ।[८]

(३) यस क्षेत्रको बलिहाङ (बल्ढेङगढी) भन्ने ठाउँमा विक्रमाब्द अठारौं शताब्दीको अन्त्यसम्म मगरहरूको राज्य थियो जसलाई गन्धर्व सेनको शासनकालमा (वि.सं.१७५०-१८०९) पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, धुर्कोट र मुसीकोट राज्य मिलेर पराजित गरी उक्त राज्य आपसमा भागवण्डा गरेका थिए ।[९]

(४) यस क्षेत्रका कतिपय गाउँ, ठाउँ, नदीनाला आदिको नामकरण मगर भाषाबाट भएको छ; जस्तै : बलिहाङ, मसिहाङ, रिडी, राङदी, तानसिङ, बराङ्डी, माडी, हुलाङडी, निस्डी, केलाडी आदि । विद्वानहरूको भनाइ अनुसार जहाँ जुन जाति वा समुदायको बाहुल्य हुन्छ त्यहाँका गाउँ, ठाउँको नामकरण त्यही जातिले बोल्ने भाषाबाट भएको हुन्छ ।[१०] यसबाट स्पष्ट हुन्छ कि पाल्पामा प्राचीनकालदेखि नै मगरहरूको बस्ती थियो ।

## ४. खस राज्यअन्तर्गत पाल्पा

बृहत् नेपाल राज्यको विघटनपछि कर्णाली प्रदेशमा खस राज्य स्थापना भएको कुरा माथि उल्लेख भइसक्यो । खस राज्यका राजा अशोक चल्लको शासनकाल (वि.सं.१३१२-३५)मा खस सेनाहरूले गण्डकी प्रदेशका कैयौं इलाकाहरू विजय गर्दै उक्त राज्यको पूर्वी सिमाना गण्डकी प्रदेशको त्रिशुली नदीसम्म पुऱ्याएका थिए ।[११] खस राज्य गण्डकी प्रदेशसम्म फैलिएको र पाल्पा पनि यही क्षेत्रमा पर्ने हुनाले मध्यकालमा पाल्पा पनि उक्त राज्यअन्तर्गत पर्दथ्यो भन्ने कुरा स्वतः सिद्ध हुन्छ । यो कुराको पुष्टि गर्ने तथ्यहरू यस प्रकार छन्-

(१) गोरखाको ताघबाई गुम्बामा रहेको आदित्य मल्लको वि.सं. १३७८ को र पुण्य मल्लको वि.सं. १३८५ को ताम्रपत्र अनुसार खस राज्यको पूर्वी सिमाना त्रिशुली नदी मानिएको छ ।[१२] राप्तीदेखि पूर्व त्रिशुली नदीसम्मको क्षेत्रलाई गण्डकी प्रदेश मानिने र पाल्पा यही प्रदेशमा पर्ने हुनाले पाल्पा विक्रमाब्द पन्ध्रौं शताब्दीसम्म खस राज्यअन्तर्गत थियो भन्ने भनाइ युक्तिसंगत देखिन्छ ।

(२) लुम्बिनीको अशोक स्तम्भमा सम्राट अशोकले कुँदाएको अभिलेखभन्दा माथि 'श्री रिपुमल्लश्चिरञ्जयतु' भनी खस राजा रिपु मल्लको नाम अँकित गरिएकोले लुम्बिनी, कपिलवस्तु र यसको आसपासका क्षेत्र (पाल्पा समेत) उनको अधिनमा भएको ज्ञात हुन्छ ।[१३]

(३) पाल्पा क्षेत्रमा खस राज्यको आधिपत्य भएको बेला खस जातिका मानिसहरूले यस क्षेत्रमा बसोबास गर्न थालेको र उनीहरूका बस्ती भएका गाउँ, ठाउँ, नदीनाला

आदिको नाम उनीहरूकै भाषाबाट रहन गएको पाइन्छ; जस्तै : खसेउली, देउराली, कुसुमखोला, खानी गाउँ, खानीछाप, पोखराथोक मदनपोखरा, पिपलडाँडा, रामपुर आदि । शब्दार्थ अनुसार खसहरू बसेको ठाउँलाई खसेउली भनिन्छ ।[१४] खसेउली नाम गरेका ठाउँहरू पश्चिमी पाल्पाको भैरवस्थान नजिक र रुपन्देही जिल्लाको बुटवलमा छन् ।

## ५. स्वतन्त्र राज्यको रूपमा पाल्पा

कृष्ण गण्डकीको दक्षिणमा अवस्थित पाल्पा खस राज्यको विघटनपछि स्थापित चौबीसी राज्य मध्ये एक हो । उक्त राज्यको स्थापना रिप्दीकोटका शासक रूद्र सेनले वि.सं. १५५० मा गरेका थिए भन्ने विद्वानहरूको भनाइ छ ।[१५] पाल्पा जिल्लाको प्रभास भन्ने ठाउँमा रहेको शिवालय जिर्णोद्वार गर्दा पाइएको एक शिलालेखमा वि.सं. १५४९ मा रूद्र सेन राजा भएको देखिएको छ जसले उपर्युक्त भनाइलाई पुष्टि गर्छ ।[१६] यस राज्यमा सेनवंशका राजाहरूले तीन शताब्दीसम्म शासन गरेको पाइन्छ । मुकुन्द सेन प्रथमको शासनकालमा यो राज्यको भौगोलिक क्षेत्र विशाल भू-भागमा फैलिएको थियो । 'गण्डकी महात्म्य' मा यस राज्यको सिमाना पूर्वमा बराह क्षेत्र, पश्चिममा रूरु क्षेत्र, उत्तरमा मुक्तिक्षेत्र र दक्षिणमा हरिहर क्षेत्रसम्म फैलिएको कुरा उल्लेख गरिएको छ । मुकुन्द सेन प्रथमको निधनपछि पाल्पा राज्य टुक्रिन गइ यसको भौगोलिक क्षेत्र दक्षिण-पूर्वमा देवघाट, उत्तरमा कालीगण्डकी, पश्चिममा रिडी र दक्षिणमा बुटवलसम्म मात्र कायम भएको थियो । पाल्पाका राजा त्रिलोक सेन निसन्तान भएकोले उनको निधनपछि विनायकपुरका राजा अमर सेनले दुवै राज्य गाभेर शासन गर्न थालेपछि पाल्पा राज्यको दक्षिणी सिमाना पुनः मैदानी इलाकातिर बढ्न गएको थियो ।[१७] गन्धर्व सेनको शासनकालमा बलिहाङ (बल्ढेङ्गढी) राज्य कब्जा गरेपछि पाल्पा राज्यको दक्षिण पश्चिमी सिमाना विस्तार भएको थियो । महादत्त सेनको शासनकालमा नेपालको एकीकरण कार्यमा सघाउ पुऱ्याए वापत पाल्पाले गुल्मी, अर्घा र खाँची राज्य पाउँदा यो राज्यको सिमाना रिडीभन्दा पश्चिमतिर पनि विस्तार भएको थियो भन्ने विद्वानहरूको भनाइ छ ।[१८] पाल्पा राज्यको भौगोलिक क्षेत्र बेलावखतमा फैलिँदै र खुम्चिँदै गएर नेपालमा गाभिनुभन्दा अघि दक्षिण-पूर्वमा देवघाट, पश्चिममा प्यूठान, उत्तरमा कालीगण्डकी र दक्षिणमा अवध राज्यको उत्तरी सिमातक कायम भएको थियो ।[१९]

मुकुन्द सेन प्रथमको शासनकालमा पाल्पा राज्यको समृद्धि, ख्याति र उन्नति चरम उत्कर्षमा पुगेको थियो । उनको समयमा भएको पाल्पा राज्यको भौगोलिक क्षेत्र विस्तार तथा सभ्यता र संस्कृतिको उन्नतिले उक्त कुराको पुष्टि गर्छ । यक्ष मल्लको

निधनपछि नेपाल उपत्यकाको मल्ल राज्य भक्तपुर, कान्तिपुर, ललितपुर आदि विभिन्न राज्यहरूमा विभाजित हुन पुग्यो । ती राज्यका राजाहरूले आपसी खिचातानीका कारण नेपाल खाल्डोभन्दा बाहिरका इलाकाहरूमा आफ्नो आधिपत्य कायम राख्न सकेनन् । त्यसै मौकामा पाल्पाका राजा मुकुन्द सेन प्रथमले गण्डकी प्रदेशको गोरखासम्म आफ्नो अधिकार जमाउन सफल भएका थिए भन्ने विद्वानहरूको कथन छ ।[२०] एक स्रोतमा उल्लेख भए अनुसार कान्तिपुरका राजा रत्न मल्ललाई कुकुनाम र देवान नाम गरेका भोटेका जमातले दुःख दिंदा उनले गुहार मागेकोले पाल्पाका राजा मुकुन्द सेन प्रथमले आफ्ना सैनिकहरूको मद्दतले रत्न मल्लको उद्धार गरेका थिए ।[२१] नेपाल उपत्यकामा मल्ल राजाहरूको राजनैतिक स्थिति खस्किँदै गएको मौका छोपी मुकुन्द सेन प्रथमले नेपाल खोल्डामा पटक पटक आक्रमण गरेका थिए । पाल्पाली सेनाहरूले उक्त आक्रमणको बेलामा मछिन्द्रनाथको जात्रामा निकाल्ने गरेको भैरवको मूर्ति समेत उखेलेर पाल्पा लगेको कुरा भाषा वंशावलीमा लेखिएको छ ।[२२] पाल्पाली सेनाले सालिन्दा नेपाल खाल्डोमा आक्रमण गर्दा त्यहाँको जन-जीवन अस्तव्यस्त भएको थियो । वि.सं. १५८२ मा आक्रमण गर्दा उनीहरूले इटुंबहालमा किल्ला जमाइ बसेका थिए र सो बहालका 'दिपंकर तथागत' लाई मुकुन्द सेन प्रथमले धर्मछत्र चढाएका थिए भन्ने कुरा विद्वानहरूले उल्लेख गरेका छन् ।[२३] कैयौं चोटी आक्रमण गर्दा पनि नेपाल खाल्डोमा अधिकार जमाउन नसकेपछि पाल्पाली सैनिकहरू लोहाङ्ग सेनको नेतृत्वमा पूर्वतिर लागि मकवानपुर आसपासका क्षेत्र कब्जा गर्दै पाल्पा राज्यको सिमाना दूधकोशीसम्म पुऱ्याउन सफल भएका थिए भन्ने हेमिल्टनको भनाइ छ ।[२४] मुकुन्द सेन प्रथमको निधनपछि उनका छोरा, भतिजाहरूले पाल्पा राज्यलाई भागवण्डा गरे । सेन वंशावली अनुसार मुकुन्द सेन प्रथमको निधनपछि उनका छोराहरू माणिक्य सेनले पाल्पा, विनायक सेनले बुटवल, भृंगी सेनले तनहुँ र लोहाङ्ग सेनले मकवानपुरमा अलगै राज्य स्थापना गरेका थिए भने रिसीङमा राम सेन, राजपुरमा कुवेर सेन र मदरियामा खड्ग सेनले स्वतन्त्र रूपमा शासन सञ्चालन गर्न थालेका थिए ।[२५] यसरी मुकुन्द सेन प्रथमको समयमा विशाल भू-भाग ओगट्न पुगेको पाल्पा राज्य उनको निधनपछि स-साना राज्यमा विभाजित हुन पुगेको थियो ।

पाल्पाको इतिहासमा राजा गन्धर्व सेनको शासनकाल पनि चर्चित छ । उनको पालामा पाल्पा, गुल्मी, अर्घा, खाँची, धुर्कोट, इश्मा र मुसिकोट राज्य मिलेर पाल्पाको दक्षिण पश्चिममा पर्ने बलिहाङ (बल्ढेङ्गढी) राज्यका मगर राजालाई पराजित गरी उक्त राज्य भागवण्डा गर्दा पाल्पा राज्यको दक्षिण पश्चिमी सिमाना केही बढेको थियो

भन्ने विद्वानहरूको भनाइ छ ।[२५] पाल्पा राज्यको उत्थानमा मुकुन्द सेन द्वितीयको पनि महत्त्वपूर्ण योगदान छ । उनले अवध राज्यका नवावसँग मित्रता कायम गरेर गण्डकीको पश्चिमपट्टिका राजपुर र तिलपुर क्षेत्र प्राप्त गरेका थिए । साथै आफ्नो बाहुबलले गुल्मी राज्यका केही क्षेत्र समेत दखल गरेका थिए भन्ने कुरा सेन वंशावलीमा उल्लेख छ ।[२७] यिनी प्रभावशाली व्यक्ति भएकोले पाल्पा, गजरकोट, रिसिङ, घिरिङ, अर्घा, खाँची र गुल्मी राज्यलाई मिलाएर एक गठबन्धन तयार गरेका थिए जसको उद्देश्य गोरखालीले आक्रमण गरेमा प्रतिरक्षा गर्नु थियो । त्यतिबेला चौबीसी राज्यहरूले आपसी खिचातानीमा आफ्नो पक्ष सबल बनाउन स-साना गुट निर्माण गरेका थिए जसको नेतृत्व पाल्पा, पर्वत, लमजुङ, भीरकोट र प्यूठानले गरेका थिए । मुकुन्द सेन द्वितीयको निधनपछि वि.सं. १८३९ मा महादत्त सेन पाल्पाका राजा भए । अवधका नवावसँग भएको पाल्पाको सम्बन्धलाई यिनले अझै मजबुत बनाएका थिए । त्यसकारण अवधका नवाव आसफुद्दौला उनीसँग मैत्री सम्बन्ध बढाउन कैयौं पटक पाल्पाको तराई क्षेत्रमा शिकार खेल्न आएका थिए । अवधका नवावसँगको राम्रो सम्बन्धका कारण पाल्पा राज्यले तराईको उब्जाउशील जमिन सस्तो दर भाउमा आवाद गर्न पाएको थियो भन्ने हेमिल्टनको भनाइ छ ।[२८]

पाल्पा चौबीसी राज्यहरू मध्ये निकै शक्तिशाली हुनुका साथै गोरखाको पुरानो मित्र थियो । यही कुरा विचार गरेर बहादुर शाहले महादत्त सेनकी छोरी विद्यालक्ष्मीसँग विवाह गरी मैत्री सम्बन्धलाई अझै दरिलो बनाए । त्यसपछि महादत्त सेनसँग नेपालको पश्चिम विजय अभियानमा साथ दिएमा विजित प्रदेश आपसमा भागवण्डा गर्ने गरी सम्झौता पनि गरेका थिए भन्ने विद्वानहरूको भनाइ छ ।[२९] उक्त सम्झौता बमोजिम पाल्पाले पश्चिमी नेपालको विजय अभियानमा गोरखाली सेनालाई सहयोग गरेको हुनाले चौबीसी राज्यहरूका साथै कर्णाली प्रदेशका बाइसी राज्यहरू विजय गरी नेपाल अधिराज्यको सिमाना गढवालसम्म पुऱ्याउन गोरखाली सेनालाई सजिलो भएको थियो । यस अभियानमा सघाउ पुऱ्याए वापत पाल्पाले गुल्मी, अर्घा र खाँची राज्य पायो । पाल्पा राज्यका अन्तिम राजा पृथ्वीपाल सेनले समय र परिस्थितिका कारणले जीवनभर अनेकौं समस्याको सामना गर्नु पऱ्यो । यिनी पाल्पा राज्यको राजगद्दीमा बसेको एक वर्ष भित्रै वि.सं. १८५१ मा रणबहादुर शाहले गुल्मी राज्य पाल्पाको अधिनबाट खोसेर स्वतन्त्र राज्य घोषित गरी आफ्ना जेठान सिद्धिप्रताप शाहलाई त्यहाँको राजा बनाएका थिए ।[३०] त्यसपछि सोझो प्रकृतिका राजा पृथ्वीपाल सेनले पटक पटक रणबहादुर शाहको षडयन्त्रमा परी धेरै सास्ती पाए ।

एक स्रोतका अनुसार रणबहादुर शाहले आफ्नी रानी कान्तीवतीको जिद्दी टार्न नसकी डेढ वर्षका छोरा गीर्वाणयुद्धलाई राज्यारोहण गराउने भएपछि त्यसको मान्यता दिलाउनका लागि शक्तिशाली राज्य पाल्पाका राजा पृथ्वीपाल सेनको हातबाट राजतिलक लगाईदिने प्रबन्ध मिलाएका थिए ।[३१] उक्त शुभकार्यमा काठमाडौं पुगेका पाल्पाली राजामाथि शंका गरेर रणबहादुर शाहले उनलाई नजरबन्द गर्न लगाएका थिए। वि.सं.१८६१ मा रणबहादुर शाह बनारसबाट फर्केपछि पृथ्वीपाल सेनकी बहिनीसँग विवाह गर्ने बहानामा उनलाई पुन : काठमाडौं झिकाएर नजरबन्द गरियो भने दलभञ्जन पाँडे र अमरसिंह थापाको नेतृत्वमा गएको गोरखाली फौजले पाल्पा कब्जा गरेको थियो ।[३२] नेपाल दरबारमा चलेको आपसी द्वन्द्वका कारण वि.सं. १८६३ वैशाख १४ गते रणबहादुर शाहको हत्या भएपछि उनका विरोधीहरूलाई सखाप पार्ने सिलसिलामा पाल्पाका राजा पृथ्वीपाल सेन समेत अठार जना पाल्पालीहरूको पनि हत्या गरियो ।[३३] त्यसपछि पाल्पा राज्य पूर्णरूपमा नेपालको अधिनमा गयो । यसरी मध्यकालमा गण्डकी प्रदेशको एक सबल चौबीसी राज्यको रूपमा रहेको पाल्पा वि.सं. १८६१ पछि एकीकृत नेपालको एक एकाई बन्न गयो ।

## ६.प्रशासकीय गौंडाको रूपमा पाल्पा

पाल्पा राज्यको पतनपछि शुरुमा यो क्षेत्र नेपालको एक सानो प्रशासनिक एकाइको रूपमा रहन गएको कुरा वि.सं. १८६२ वैसाखमा काजी दलभञ्जन पाँडे समेतका भारदारहरूको नाममा जारी भएको एक सवालबाट ज्ञात हुन्छ । उक्त सवालमा ती भारदारहरूलाई पाल्पा, गुल्मी, अर्घा र खाँची इलाकामा पर्ने जग्गा जाँच गर्ने आदेश दिइएको छ ।[३४] केही वर्षपछि पाल्पा नेपालको सम्पूर्ण पश्चिमी क्षेत्र अर्थात् कालीगण्डकीदेखि पश्चिम कुमाउँ-गढवालसम्मको इलाकाको प्रशासनिक केन्द्रको रूपमा रहेको देखिन्छ । यसको उदाहरणका लागि वि.सं. १८६७ मा नालापानीबाट अमृतसिंह थापाले मुख्तियार भीमसेन थापालाई पठाएको पत्रलाई लिन सकिन्छ । यस पत्रमा नेपालको पश्चिममा पठाउने सैनिक पाल्पाका तैनाथवाला काजी अमरसिंह थापा मार्फत पठाउने गरेको कुरा उल्लेख छ ।[३५] त्यस्तै हस्तदल शाहीले डोटीबाट पाल्पाका प्रशासक काजी अमरसिंह थापालाई पठाएको एक पत्रमा डोटी इलाकाको हिसाब किताबको तेरिज र नेपालको पश्चिमी क्षेत्रको सैनिक गतिविधि बारे जानकारी गराइएको छ ।[३६] यसैगरी पाल्पाबाट उजिरसिंह थापा समेतका सेनापतिहरूले वि.सं. १८७२ वैशाखमा जनरल भीमसेन थापा र काजी रणध्वज थापालाई काठमाडौंमा पठाएको एक पत्रमा

नेपालको पश्चिमी क्षेत्रका सैनिकहरूको खटनपटन सम्बन्धमा राय-सल्लाह दिइएको छ ।[३७]

यसरी पाल्पा नेपालमा विलय भएदेखि नै नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा रहेको देखिन्छ तापनि त्यतिखेर पाल्पाका प्रशासकलाई कुन कुन क्षेत्रसम्मको प्रशासन हेर्ने अधिकार दिइएको थियो भन्ने कुरा स्पष्ट छैन । राणाशासनकालमा वि.सं. १९०६ मा कर्णेल खड्गबहादुर कुँवर राणालाई पाल्पा मुहुडाको अख्तियारी दिंदा स्पष्ट रूपमा कालीनदीदेखि पश्चिम महाकाली नदीदेखि पूर्वका मधेश, पहाड, रुकुम, थाकसम्मको भौगोलिक क्षेत्रमा पर्ने खानी, टक्सार, तहबिल, अदालतका कारिन्दाको रेखदेख गर्ने र जङ्गी बन्दोबस्त गर्ने अधिकार दिइएको छ ।[३८]

राणाशासनकालमा निजामती तथा जङ्गी बन्दोबस्त सम्बन्धी काम गर्ने स्थानीय निकायको सदरमुकामलाई पहाडमा 'गौंडा', पूर्व १ देखि ४ नं. र पश्चिम १ देखि ४ नं. तथा मधेशका सदरमुकामलाई 'गोश्वारा' एवं भित्री मधेशका सदरमुकामलाई 'गढी' भनिन्थ्यो भन्ने अग्रवालको भनाइ छ ।[३९] विद्वानहरूको भनाइ अनुसार त्यतिखेर नेपालको पूर्वी पहाडमा धनकुटा र पश्चिमी पहाडमा पाल्पा गौंडा मुख्य मानिन्थे । पश्चिमी पहाडमा रहेको डोटी गौंडा पनि पाल्पा गौंडाकै अधिनमा थियो ।[४०]

एक स्रोत अनुसार राणा शासनकाल पूर्वका प्रशासकहरूलाई पाल्पाको प्रशासन सञ्चालन सम्बन्धी अख्तियारी दिंदा पाल्पालाई 'मुहुडा' भनिएको छ ।[४१] राणा शासनकालमा भने पाल्पालाई स्पष्ट रूपमा 'पाल्पा गौंडा' भनिन्थ्यो भन्ने कुरा जङ्गी अड्डाको एक अभिलेखबाट ज्ञात हुन्छ ।[४२] शाब्दिक अर्थमा 'गौंडा' भन्नाले किल्ला, गढ वा दुर्ग भन्ने बुझिन्छ तर प्रशासनिक दृष्टिले हेर्दा 'गौंडा' बृहत् भौगोलिक क्षेत्रमा विभाजित जिल्लाहरूको प्रशासनिक केन्द्र थियो जहाँ प्रधामन्त्रीका नजिकका नातेदारले प्रशासन चलाउँथे ।[४३] राणा शासनकालकमा 'गौंडा' भन्नाले गभर्नरको मातहतमा रहेको जिल्ला प्रशासनको बृहत् एकाई भन्ने बुझिन्थ्यो जस अन्तर्गत थुप्रै जिल्ला र राज्य शासित इलाका हुन्थे ।[४४]

**नेपाली बृहत् शब्दकोशमा** गौंडाको अर्थ यसरी दिइएको छ- 'प्राचीन राज्य व्यवस्थामा सुरक्षाको बन्दोवस्त मिलाउन ठाउँ ठाउँमा सेना र हातहतियार तैनाथ गरिएको हुन्थ्यो जसलाई 'गढ' भनिन्थ्यो । कालान्तमा गढी बनाएको ठाउँलाई गौंडा भन्न थालियो । वर्तमान प्रशासनिक व्यवस्थाभन्दा पहिले बडाहाकिम बस्ने र जिल्लाभरको

शान्ति सुरक्षा सम्बन्धी काम गर्ने प्रशासनिक अड्डालाई 'गोश्वारा' भनिन्थ्यो । पहाडी इलाकामा गोश्वारा सरहको काम गर्ने अड्डा जस्तै धनकुटा, पाल्पा गौंडा आदि र त्यस अड्डाका मातहतको इलाकालाई 'गौंडा' भनिन्थ्यो ।[४५]

पाल्पा नेपालमा गाभिनासाथ पश्चिमी क्षेत्रको सैनिक र प्रशासनिक केन्द्रको रूपमा रहेको र विस्तारै सो क्षेत्रको मुख्य गौंडाको रूपमा स्थापित भएको देखिन्छ । पाल्पा नेपालमा बिलय भएपछि यसलाई नेपालको पश्चिमी क्षेत्रको सैनिक केन्द्रको रूपमा विकसित गर्दै लगिएको थियो । राणा शासनकाल पूर्व सैनिक र प्रशासनिक केन्द्रलाई 'मुहुडा' भनिन्थ्यो र राणा शासनकालमा 'गौंडा' भन्न थालियो । यसरी वि.सं. १८६१ मा पाल्पा राज्य नेपालमा गाभिएपछि यो क्षेत्र पाल्पा गौंडाको रूपमा स्थापित भयो । कम्याण्डरी किताबको अभिलेख अनुसार रणोद्दीपसिंहको शासनकालमा पाल्पाको प्रशासक भई आउने भुपेन्द्रजङ्ग राणा र अम्बरजङ्ग राणालाई कालीगण्डकीदेखि पश्चिमका नौ जिल्लाको मात्र रेखदेख गर्ने अखितयारी दिइएको थियो ।[४६] ती नौ जिल्ला कुन कुन थिए भन्ने सम्बन्धमा तत्कालीन अभिलेखमा पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट, धुर्कोट, गलकोट र पर्वत गरी पुराना नौवटा राज्य पर्दथे भन्ने कुरा उल्लेख गरिएको छ । रणोद्दीपसिंहको शासनकालमा गरिएको नयाँ प्रशासनिक व्यवस्था अनुसार नेपालको तराईलाई १४ जिल्ला र पहाड (पर्वत)लाई २४ तहसिलमा विभाजन गरिएको थियो । सो विभाजन अनुसार पाल्पा तहसिल अन्तर्गत माथि उल्लेखित नौ जिल्ला पर्दथे ।[४७]

## ७. जिल्लाको रूपमा पाल्पा

प्रशासनयन्त्रलाई सर्वसुलभ बनाउने उद्देश्यले वीर शमशेरको पालामा वि.सं १९५२ (सन् १८९५) मा नेपाललाई ३५ जिल्लामा विभाजन गरिएको थियो । त्यतिखेर काठमाडौं उपत्यका भित्रका जिल्लालाई केन्द्रीय प्रशासन अन्तर्गत राखिएको थियो भने पहाडी इलाकालाई तहसिल र तराई इलाकालाई जिल्ला भन्ने प्रचलन थियो । पहाडी इलाका तहसिलभित्र स-साना धेरै जिल्ला हुन्थे भन्ने सतिशकुमारको भनाइ छ ।[४८]

यस अघि पाल्पा तहसिल अन्तर्गत रहेका नौ जिल्लालाई यो विभाजनमा पाल्पा, गुल्मी र बाग्लुङ गरी तीन इलाकाभित्र राखिएको थियो जुन यस प्रकार छ-

(१) पाल्पा : पाल्पा
(२) गुल्मी : गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट र धुर्कोट
(३) बाग्लुङ : पर्वत र गलकोट ।[४९]

हुनत यो प्रशासनिक विभाजनबाट यस क्षेत्रमा अलगअलग तीन इलाका कायम हुन आएका थिए तर तीनवटै इलाकाको जङ्गी तथा निजामती बन्दोबस्त सम्बन्धी सम्पूर्ण काम पाल्पा गौँडाबाट नै हुन्थ्यो भन्ने कुरा एक स्रोतबाट ज्ञात हुन्छ ।[५०] किनकि गुल्मीको वामी टकसारमा माल अड्डा मात्र राखिएको थियो जसलाई गुल्मी समेत आठ जिल्ला माल भनिन्थ्यो भने बाग्लुङमा छोटी गौँडा र अदालत मात्र स्थापना गरिएको थियो । ती अड्डाले गुल्मी र बाग्लुङ इलाका मातहतमा रहेका आठ जिल्लाको राजश्व सङ्कलन र न्याय प्रशासन सम्बन्धी काम गर्दथे भन्ने विद्वानहरूको भनाइ छ ।[५१]

एक शताब्दीभन्दा लामो जहानिया र निरंकुश राणा शासनका विरुद्ध चलेको बिद्रोह वि.सं. २००७ सालमा सफल भयो । त्यसपछि नेपालको केन्द्रीय शासन व्यवस्थामा परिवर्तन भयो जसको फलस्वरूप स्थानीय प्रशासनमा पनि केही फेरबदल भयो । पाल्पाको अधिनमा रहेका गुल्मी र बाग्लुङ अलगै स्वतन्त्र इलाकाको रूपमा रहन थाले । राणा शासनकालमा यी दुई इलाकाको प्रशासन पाल्पा गौँडाको मातहतमा चल्थ्यो । बाग्लुङमा वि.सं. १९८५ मा छोटी गौँडा स्थापना गरिएको थियो तापनि यसले आठ जिल्लाको जङ्गी तथा निजामती बन्दोवस्तको काम पाल्पा गौँडाको मातहतमा रहेर गर्नुपर्दथ्यो । वि.सं. २००९ सालमा गुल्मीमा पनि छुट्टै छोटी गौँडा स्थापना भयो ।[५२]

वि.सं. २००७ सालको राजनैतिक परिवर्तनपछि प्रशासनलाई सर्वसुलभ बनाउनका लागि जिल्ला जिल्लामा केही नयाँ अड्डा खोल्ने, पुन : संरचना गर्ने र जनसङ्ख्या, मालपोत एवं ऐतिहासिक महत्त्व समेतको बिचार गरी जिल्लाहरूलाई तीन श्रेणीमा विभाजन गर्ने काम भएको थियो । उक्त वर्गीकरण अनुसार पाल्पालाई 'क' र गुल्मी तथा बाग्लुङलाई 'ग' श्रेणीमा राखिएको कुरा विभिन्न स्रोतबाट ज्ञात हुन्छ ।[५३] गुल्मी र बाग्लुङ जिल्लाको छुट्टै अस्तित्व कायम भएपछि पाल्पा गौँडाको भौगोलिक क्षेत्र पहिलेको भन्दा निकै नै साँघुरिन गइ पूर्वमा देवघाट, पश्चिममा रिडी, उत्तरमा कालीगण्डकी र दक्षिणमा चुरे पहाडको घाँचको पुरानो बटौली बजारसम्म कायम हुन पुग्यो । वि.सं.२०१८ सालमा नेपाल राज्यलाई १४ अञ्चल र ७५ विकास जिल्लामा बाँड्दा पाल्पा जिल्लाको दक्षिणी सिमाना चुरे डाँडाको शीर र चिडियाखोला कायम भयो ।[५४] नयाँ किसिमको प्रशासनिक विभाजनअनुसार १४ अञ्चलमा अञ्चलाधिश राख्ने व्यवस्था भएतापनि पुराना ३५ जिल्लामा बडाहाकिम नै रहने व्यवस्था थियो । यसरी दोहोरो प्रशासन भएकोले कसको अधिकार क्षेत्र कुन कुन हो भन्ने बारेमा अन्योल थियो । त्यसकारण अञ्चलको सदरमुकाम पर्ने जिल्लाहरूमा वि.सं.२०२० सालदेखि

वडाहाकिम नरहने अञ्चलाधिश मात्र रहने व्यवस्था गरिएको थियो ।[५५] तर सो पद नयाँ भएकोले वडाहाकिमको दाँजोमा प्रभावशाली हुन सकेन । त्यसकारण २०२२ सालमा 'स्थानीय प्रशासन व्यवस्था ऐन' जारी गरी गौंडा, गढी र गोश्वारा खारेज गर्नुकासाथै वडाहाकिम पदसमेत खारेज गरियो ।[५५] त्यसपछि वडाहाकिम रहने गरेका जिल्लामा सहायक अञ्चलाधीश रहने व्यवस्थाअनुसार पाल्पामा पनि लुम्बिनी अञ्चलाधीशको एक नम्बर शाखा रहने व्यवस्था भएको थियो ।[५६] वि.सं.२०२५ सालपछि मात्र पाल्पामा प्रमुख जिल्ला अधिकारी रहने व्यवस्था भएको हो ।

## ८. निष्कर्ष

मध्यकालमा गण्डकी प्रदेशमा स्थापना भएका चौबीसी राज्यहरू मध्ये पाल्पा पनि एक स्वतन्त्र राज्य थियो । नेपालको एकीकरणको सिलसिलामा यो राज्य नेपालमा विलय भयो । पाल्पा आर्थिक र सैनिक दृष्टिकोणले सवल राज्य हुनुका साथै यसको अवधका नवावसँग पनि राम्रो सम्बन्ध भएकाले यो राज्य दखल गर्न ठूलो सङ्ख्यामा सैनिक तैनाथ गरिएको थियो । यो राज्य नेपालमा विलय भएदेखि नै यस राज्य अन्तर्गतका बुटवल र स्यूराजको विषयमा विवाद उठेकोले नेपाल र अङ्ग्रेजकाबीच युद्ध भयो । त्यतिबेला पनि पाल्पाको प्रशासनिक क्षेत्रमा ठूलो सङ्ख्यामा सैनिक तैनाथ गर्नु पर्ने जरुरत पऱ्यो । नेपाल-अङ्ग्रेज युद्धको समाप्तिपछि नेपालको प्रशासनिक व्यवस्था मिलाउने सिलसिलामा सामरिक दृष्टिकोणले महत्त्वपूर्ण जिल्लामा बढी सङ्ख्यामा सैनिक तैनाथ गरियो र त्यस्ता जिल्लालाई 'गौंडा' भन्न थालियो । पाल्पा राज्य नेपालमा गाभ्दादेखि नै सो राज्यको प्रशासनिक क्षेत्र सामरिक दृष्टिकोणले महत्त्वपूर्ण मानिएकोले यसलाई पनि 'गौंडा' भन्न थालियो । यसरी 'पाल्पा गौंडा' को स्थापना भयो ।

नेपाल-अङ्ग्रेज युद्धका बेलादेखि पाल्पा गौंडा नेपालको पश्चिमी क्षेत्रको सैनिक केन्द्र थियो तापनि वास्तविक रूपमा यो गौंडाको मातहतमा जङ्गी तथा निजामती प्रशासन चलेको भौगोलिक क्षेत्र कालीगण्डकीदेखि पश्चिमका पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट, धुर्कोट, गलकोट र पर्वतसमेत नौ जिल्लाले चर्चेको भू-भाग थियो । वि.सं. २००७ सालभन्दा अघिसम्म पाल्पा नेपालको पश्चिमी क्षेत्रको सैनिक तथा निजामती प्रशासनको केन्द्र थियो । त्यसपछि पाल्पाको अधिकार क्षेत्र घट्दैगयो । वि.सं.२०१८ सालमा नेपाललाई ७५ विकास जिल्लामा विभाजन गरिएपछि त पाल्पा लुम्बिनी अञ्चलको एक पहाडी जिल्लाको सदरमुकाम मात्र रहन गयो तैपनि यसको ऐतिहासिक र सांस्कृतिक महत्व भने घटेको छैन

## टिप्पणी

१ धनबज्र बज्राचार्य र कमलप्रकाश मल्ल, **द गोपालराजवंशावली**, काठमाडौं : नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स, सन् १९८५ पृ. ७३-७५ ।

२ धनबज्र बज्राचार्य **लिच्छवीकालका अभिलेख**, (द्वितीय संस्करण), कीर्तिपुर : नेपाल र एसियाली अनुसन्धान केन्द्र वि.सं. २०५३, पृ. २० र २८ ।

३ तुलसीराम वैद्य र भद्ररत्न बज्राचार्य, **मध्यकालीक नेपालको प्रशासनिक इतिहास** (८७९-१७६९ ई.), (प्रथम संस्करण), कीर्तिपुर : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५५, पृ. ११ ।

४ योगी, नरहरिनाथ, **इतिहास प्रकाश**, अंक २, भाग १, काठमाडौं : इतिहास प्रकाशक संघ, वि.सं. २०१३, पृ. ५९, ६२ ।

५ सी.पी.एन. सिन्हा, **मिथिला अण्डर द कर्नाटज**, पटना : जानकी प्रकाशन, सन् १९७९, पृ.३१-३२ ।

६ महेशराज पन्त र ऐश्वर्यधर शर्मा, **द टू अर्लिस्ट कपर प्लेट इन्सक्रिप्सन फ्रम नेपाल**, काठमाण्डौं : नेपाल रिसर्च सेन्टर, सन् १९७७, पृ. ६-७ र २१ ।

७ चित्तरञ्जन नेपाली, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, (तेस्रो संस्करण) काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३५, पृ. १४४ ।

८ विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**,भाग १,चितवनः पदमा घिमिरे, वि.सं. २०४५, पृ.३१ ।

९ फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किङ्गडम अफ नेपाल**, (रिप्रिन्ट) न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिस, सन् १९८६, पृ. १७१ ।

१० कृष्णप्रकाश श्रेष्ठ (सम्पा.), **स्थाननाम कोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४४, पृ. ग-घ ।

११ सूर्यमणि अधिकारी, **पश्चिम नेपालको खश अधिराज्य**, कीर्तिपुर : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि. सं. २०५३, पृ. २५-४४ ।

१२ मोहनप्रसाद खनाल, **मध्यकालीन अभिलेख**, काठमाण्डु : लेखक स्वयं, वि.सं. २०३०, पृ. १-१३ ।

१३ योगी, **पूर्ववत्**, टि.नं. ४, पृ. ८१ ।

१४ बालकृष्ण पोखरेल र अन्य (सम्पा.), **नेपाली बृहत् शब्दकोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४०, पृ. २९३ ।

१५ घिमिरे, **पूर्ववत्**, टि.नं. ८, पृ. २९ ।

[16] कर्णबहादुर बानियाँ, "तानसेनका मठ, मन्दिर, चैत्य तथा विहारहरूको कलाकौशल र गुठी व्यवस्था", त्रि.वि. शिक्षाध्यक्षको कार्यालय, अनुसन्धान महाशाखामा पेश गरेको लघु अनुसन्धान, वि.सं. २०५६, पृ. १११ ।

[17] घिमिरे, **पूर्ववत्**, टि.नं. ८, पृ. १०–११ ।

[18] लुड्विग एफ. स्टिलर, **द राइज अफ द हाउस अफ गोरखा**, (सेकेन्ड एडिसन), पटना : जेसुइट सोसाइटी, सन् १९७५, पृ. १८३ ।

[19] घिमिरे, **पूर्ववत्**, टि.नं. ८, पृ. ११ ।

[20] दिनेशराज पन्त, **गोरखाको इतिहास**,पहिलो भाग,काठमाडौँ: लेखक स्वयं, वि.सं.२०४१,पृ.२२-२३ ।

[21] धनबज्र बज्राचार्य र अन्य (सम्पा.) **इतिहास संशोधनको प्रमाण प्रमेय**, पहिलो भाग, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०१९, पृ. १८१ ।

[22] देवीप्रसाद लंसाल (सम्पा.), **भाषा वंशावली**, भाग २, श्री ५ को सरकार शिक्षा मन्त्रालय, पुरातत्व विभाग, नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. २७-२८ ।

[23] महेशराज पन्त र दिनेशराज पन्त, "नेपाल खाल्डोमा पाल्पाली राजा मुकुन्द सेनको हमला", **पूर्णिमा**, वर्ष १२, अंक १, पूर्णाङ्क ४५, वि.सं. २०३७, पृ. १२-१३ र १९ ।

[24] हेमिल्टन, **पूर्ववत्**, टि.नं. ९, पृ. १३२-३६ ।

[25] शंकरमान राजवंशी (सम्पा.), **सेन वंशावली**, काठमाडौँ : श्री ५ को सरकार, पुरातत्व र संस्कृति विभाग, वि.सं. २०२०, पृ. ३-१८ ।

[26] हेमिल्टन, **पूर्ववत्**, टि.नं. ९, पृ. १७१ ।

[27] राजवंशी, **पूर्ववत्**, टि.नं. २५, पृ. २८ ।

[28] हेमिल्टन, **पूर्ववत्**, टि.नं. ९, पृ. १७१ - ७३ र २३९ ।

[29] स्टीलर, पूर्ववत्, टि.नं. १८, पृ. १७७ ।

[30] हेमिल्टन, **पूर्ववत्**, टि.नं. ९, पृ. १७३–१७४ ।

[31] धनबज्र बज्राचार्य (सम्पा.) **पण्डित सुन्दरानन्द विरचित त्रिरत्न सौन्दर्य गाथा**, काठमाडौँ : नेपाल सांस्कृतिक परिषद्, वि.सं. २०१९, पृ. १५३ ।

[32] हेमिल्टन, पूर्ववत्, टि.नं. ९, पृ. १७४-७६ ।

[33] योगी नरहरिनाथ, **इतिहास प्रकाशमा सन्धिपत्र संग्रह**, भाग १, दाङ : आध्यात्मिक सम्मेलन, वि.सं. २०२२,पृ. ४१०-११ ।

३४ "पाल्पा, गुल्मी, अर्घा र खाँची राज्यमा जग्गा जाँच गर्नु भन्ने काजी दलभंजन पाँडे समेतका नाममा जारी भएको वि.सं. १८६२ वैशाख वदी १० को सवाल" माइक्रोफिल्म रिल नं. ई २३९२/१, पृ. ५६८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

३५ धनवज्र बज्राचार्य र ज्ञानमणि नेपाल (सम्पा.), **ऐतिहासिक पत्र संग्रह**, काठमाडौं : नेपाल सांस्कृतिक परिषद, वि.सं. २०१४, पृ. १०१-१०३ ।

३६ शंकरमान राजवंशी (सम्पा.), **शाहकालीन ऐतिहासिक चिठ्ठीपत्र संग्रह**, भाग १, श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, वीर पुस्तकालय, वि.सं. २०२३, पृ. १७९-८१ ।

३७ **उही**, पृ. ११६-१९ ।

३८ कृष्णकान्त अधिकारी, **नेपाल अण्डर जंगबहादुर** १८४६-१८७७, भोलुम १, काठमाण्डू : बुकु, सन् १९८४, पृ. २६०-६१ ।

३९ हेमनारायण अग्रवाल, **द एडमिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल**, न्यू दिल्ली : विकास पब्लिशिङ हाउस प्रा.लि., सन् १९७६, पृ. ७७-७८ ।

४० तुलसीराम वैद्य र त्रिरत्न मानन्धर, **आधुनिक नेपालको प्रशासनिक इतिहास (सन् १७६८-१९५१)**, नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ. १८९ ।

४१ "वि.सं.१९०० मा चौतरिया गुरुप्रसाद शाह र खड्गविक्रम शाहलाई पाल्पा अड्डा मोहडाको अख्तियारी दिइएको लालमोहर" मा.फि.रिल नं. डि एन ए १३/९६, राष्ट्रिय अभिलेखालय,काठमाडौं ।

४२ "मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी भएको खड्ग निशाना रुक्का" सि.नं. ११८ (१०५), तेश्रो भाग किताब, शाही नेपाली जंगी अड्डा पुस्तकालय, काठमाडौं ।

४३ अधिकारी, **पूर्ववत्**, पा.टि.नं. ३९, पृ. ३४८ ।

४४ एड्रियान सेभर, **नेपाल अण्डर द राणाज**, न्यू दिल्ली : अक्सफोर्ड एण्ड आइबिएच पब्लिशिङ् कं. प्रा.लि. सन् १९९३, पृ. ४८० ।

४५ पोखरेल, **पूर्ववत्**, पा.टि.नं. १४, पृ. ३२० र ३५९ ।

४६ "कम्याण्डरी किताब, १९३७ र १९४० साल, पूर्व पश्चिम पहाड गौंडा", सि.नं. १०९ र १२५, मू.नं. २१ र २४, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४७ इडेन भेन्सिटार्ट, **द गुर्खाज**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३, पृ. १८३–२०४ ।

४८ सतिश कुमार, **राणा पोलिटी इन नेपाल : ओरिजिन एण्ड ग्रोथ**, बम्बई : एशिया

पब्लिशिङ् हाउस, सन् १९६७, पृ.१०८ ।

[४९] खड्गमान मल्ल, **नेपालको भूगोल**,(आठौं संस्करण), नेपालः ने.भा.प्र.स.,वि.सं.२०१०,पृ. ३६-३८ ।

[५०] "रिपोर्ट अन रिअर्गनाइजेशन अफ डिस्ट्रीक्ट एडमिनिस्ट्रेशन इन नेपाल, सन् १९५६", पृ. ५-६ ।

[५१] रामजी उपाध्याय, **नेपालको इतिहास अर्थात् दिग्दर्शन**, बनारस : होमनाथ केदारनाथ, सन् १९५०, पृ. १७-१८ ।

[५२] **नेपाल गजेट**, २००९ साल फाल्गुण ५ गते ।

[५३] **नेपाल गजेट**, २०१० साल आषाढ २ गते ।

[५४] **गोरखापत्र**, २०१८ साल कार्तिक १६ गतेदेखि मार्ग १ गतेसम्म ।

[५५] **गोरखापत्र**, २०२० साल जेष्ठ २ गते ।

[५६] **नेपाल गजेट**, २०२२ साल चैत्र १० गते ।

[५७] **गोरखापत्र**, २०२२ साल पौष ६ गते ।

# ३. नेपालको एकीकरण अभियान र पाल्पा राज्य

## १. विषय प्रवेश

मध्यकालमा नेपालमा बाइसी, चौबीसी र अन्य विभिन्न स-साना राज्यहरू थिए । ती राज्यहरूलाई एउटै राज्यको रूपमा परिणत गर्ने कार्यलाई नेपालको एकीकरण भनिन्छ । यस अभियानमा गण्डकी प्रदेशमा रहेको गोरखा राज्यले अगुवाई गरेको थियो । यद्यपि यस कार्यमा गोरखाको प्रमुख भूमिका भएपनि प्रत्यक्ष अप्रत्यक्ष रूपमा अन्य राज्यले पनि सहयोग पुऱ्याएका थिए । नेपालको एकीकरण अभियानमा पाल्पा राज्यले पनि सहयोग पुऱ्याएको थियो । त्यसकारण गण्डकी भेकमा रहेका अन्य राज्यहरू दखल गरिसक्दा पनि पाल्पा राज्य स्वतन्त्र नै थियो । नेपालको सीमाना पूर्वमा टिष्टा र पश्चिममा काँगडा पुगिसकेपछि मात्र बि.सं. १८६१ मा पाल्पा राज्यलाई नेपालमा विलय गराइयो । यो राज्यलाई बृहत् नेपालमा विलय गराउँदा के कस्ता घटनाहरू भए भन्ने बारेमा जिज्ञासा हुनु स्वभाविकै हो । त्यही कौतुहलता मेटाउने उद्देश्यले यो लेख तयार गरिएको छ ।

## २. नेपालको एकीकरण अभियान

मध्यकालको उत्तरार्द्धमा नेपालमा कर्णाली प्रदेशमा बाइसी, गण्डकी प्रदेशमा चौबीसी, काठमाडौं उपत्यकामा रहेका कान्तिपुर, ललितपुर र भक्तपुर तथा पूर्वी नेपालका मकवानपुर, विजयपुर र चौदण्डी गरी करीब पाँच दर्जन स-साना राज्यहरू अस्तित्वमा थिए । यस्तै परिस्थितिमा गोरखा राज्यले आफ्नो अस्तित्व रक्षा गर्दै राज्य विस्तार गर्ने जुन प्रयास गऱ्यो त्यो कार्य नै नेपालको एकीकरण अभियानमा परिणत भयो । द्रव्य शाहले गोरखा राज्यको जग बसालेपछि उनका सन्ततीहरूले उक्त राज्यको सीमा विस्तार कार्यलाई निरन्तरता दिएका थिए । यही परम्पराको फलस्वरूप राम शाहको समयसम्ममा गोरखाको पूर्वी सिमाना त्रिशुली नदीसम्म पुगेको र त्यसभन्दा पूर्व पुऱ्याउन नरभूपाल शाहले वि.सं. १७९२ मा नुवाकोटमा आक्रमण गरेको देखिन्छ ।[१] नरभूपाल शाहको निधनपछि वि.सं. १७९९ मा पृथ्वीनारायण शाह गोरखाको राजगद्दीमा बसे । आफू राजा भएपछि उनले सर्वप्रथम नुवाकोटमा आक्रमण गर्ने योजना बनाई विराज थापालाई उक्त कार्यमा खटाए तर नुवाकोटको पहिलो आक्रमणमा जस्तै यस पटक पनि गोरखालीहरू सफल हुन सकेनन् । नुवाकोटको युद्धमा पराजित भएपछि पृथ्वीनारायण शाहले लरतरो युद्धले काठमाडौं उपत्यका विजय गर्न नसकिने ठानेर हातहतियारको

व्यवस्था गर्न तिर्थयात्राको निहुँ पारी बनारसतिर गए ।[२] बनारसबाट फर्केपछि आन्तरिक चाँजोपाँजो मिलाएर उनले वि.सं. १८०१ मा नुवाकोटमा आक्रमण गरे । सुनियोजित तरिकाले आवश्यक तयारी पूरा गरी पृथ्वीनारायण शाह स्वयं सरिक भएर गरिएको युद्ध हुनाले यस पटकको युद्धमा गोरखालीहरू नुवाकोट विजय गर्न सफल भए । नुवाकोटको विजयबाट हौसला पाएका गोरखालीहरूले काठमाडौँ उपत्यका आसपासका स-साना इलाकाहरू कब्जा गर्दै वि.सं. १८१४ मा मल्ल राजाहरूको पश्चिमी किल्ला मानिएको कीर्तिपुरमा आक्रमण गरे तर सफल हुन सकेनन् ।[३]

एकोहोरो युद्धमा होमिएर मात्र नेपाल उपत्यका उपर विजय हासिल गर्न संभव छैन; त्यसका लागि कुटिल चाल चल्नु पर्दछ भन्ने कुरा महसुस गरेर पृथ्वीनारयण शाहले आर्थिक नाकाबन्दीको नीति अवलम्बन गरे । यो नीतिले उपत्यकामा दैनिक आवश्यक वस्तुको अभाव सिर्जना गर्नेछ र अभावग्रस्त जनतालाई आफ्नो पक्षमा मिलाएर मल्ल शासकहरूलाई निकम्मा सावित गरी काठमाडौँ उपत्यकामा आक्रमण गरेमा उक्त क्षेत्र विजय गर्न सजिलो पर्नेछ भन्ने उनले सोचेका थिए ।[४]

आर्थिक नाकाबन्दी सफल पार्न र दिग्बन्धन सेनको शेषी झार्न मकवानपुरमा आक्रमण गर्न आवश्यक थियो । अतः गोरखालीहरूले महोद्दामकीर्ति शाहको नेतृत्वमा वि.सं. १८१९ मा उक्त राज्यमा आक्रमण गरी सो राज्य दखल गरे । मकवानपुर गुमेपछि त्यहाँका राजा दिग्बन्धन सेन र दिवान कनकसिंह बानियाँ बंगालका नवाबसँग गुहार माग्न पुगे । नवाबले गुरगीन खाँको नेतृत्वमा पठाएको बंगाली फौजसँग गोरखालीहरूको घमासान युद्ध भएतापनि विजय भने गोरखालीहरूले नै प्राप्त गरे । यस युद्धमा गोरखालीहरूलाई केही हातहतियार समेत प्राप्त भयो ।[५]

आर्थिक नाकाबन्दीलाई अझै कडा पार्न कीर्तिपुर कब्जा गर्न आवश्यक ठानी गोरखालीहरूले उक्त क्षेत्रमा दिर्घकालीन घेराबन्दी लगाउनुका साथै त्यस क्षेत्रका रक्षक धनवन्तलाई आफ्नो पक्षमा मिलाउने कोशिस गरे । धनवन्त आफ्नो पक्षमा मिलेकोले वि.सं.१८२२ मा बिना युद्ध रातिको समयमा कीर्तिपुरमा प्रवेश गर्न उनीहरू सफल भए ।[६] कीर्तिपुर कब्जा गरेपछि गोरखालीहरूले आफ्नो राज्य ताक्दैछन् भन्ने आशंकाले जयप्रकाश मल्लले अङ्ग्रेजसँग सहयोग मागे । अङ्ग्रेजहरू पनि कुनै निहुँ पाएमा नेपालमा प्रवेश गर्न चाहन्थे । त्यसैले जयप्रकाश मल्ललाई सहयोग गर्न कप्तान किनलकको नेतृत्वमा अङ्ग्रेज फौज नेपालतिर रवाना भयो । यो कुरा थाहा पाएर उक्त

फौजलाई रोक्न वंशराज पाँडे, वंशु गुरुङ र पारथ भण्डारीको नेतृत्वमा गोरखाली फौज खटियो । वि.सं. १८२४ मा नेपाली र अङ्ग्रेजी फौजबीच सिन्धुली गढीमा भएको युद्धमा विजय गोरखाली पक्षको भयो । यस युद्धमा उनीहरूले तीन सय जति अङ्ग्रेजी आधुनिक हातहतियार पनि प्राप्त गरे । त्यसपछि गोरखालीहरूले वि.सं. १८२५ मा इन्द्रजात्राको अवसर पारेर कान्तिपुरमा आक्रमण गरे । उनीहरूले भीमसेनस्थान, नरदेवी र टुँडीखेलतिरबाट बसन्तपुर दरबारलाई घेरेका थिए जसमा नरदेवीतिरबाट आउने फौजको नेतृत्व स्वयं पृथ्वीनारायण शाहले गरेका थिए । जयप्रकाश मल्ल इन्द्रजात्राको उत्सवमा रमाइरहेका हुनाले गोरखालीहरू सजिलैसँग कान्तिपुर कब्जा गर्न सफल भए । कान्तिपुर दखल गरेको दश दिनपछि ललितपुर र एक वर्षपछि भक्तपुर पनि उनीहरूको अधिनमा आए ।[७]

काठमाडौं उपत्यका विजय गरेपछि पृथ्वीनारायण शाहले गोरखादेखि पश्चिमतिरका चौबीसी राज्यहरू दखल गर्ने विचार गरी काजी वंशराज पाँडे र सरदार केहरसिंह बस्न्यातको नेतृत्वमा सो क्षेत्रतिर फौज पठाए । उक्त फौजले कालीगण्डकी पूर्वका राज्यहरू कब्जा गर्दै सतहुँमा पुगेका बखत वि.सं. १८२८ पौषमा पर्वत र सतहुँका संयुक्त सेनासँग शीरबारी भन्ने ठाउँमा भीडन्त भयो । यो युद्धमा केहरसिंह बस्न्यात सहित पाँच सय जना गोरखाली सेना हताहत भए भने वंशराज पाँडे पर्वते सेनाद्वारा पक्राउ परी बेनी शहरमा थुनामा परे । यसरी आफ्ना मुख्य सेनापति नै थुनामा परेकोले पृथ्वीनारायण शाहको पश्चिमी विजय अभियान सफल हुन सकेन ।[८] नेपालको पश्चिमतिरको सैनिक अभियान असफल भएपछि गोरखालीहरूको ध्यान पूर्वतर्फ गयो । अभिमानसिंह बस्न्यात र रामकृष्ण कुँवरको नेतृत्वमा गएको गोरखाली फौजले वि.सं. १८३१ मा चौदण्डी र विजयपुर राज्य कब्जा गऱ्यो ।[९] यसरी गोरखा राज्यको पूर्वी सिमाना निकै विस्तार भएतापनि पश्चिमी सिमाना विस्तार हुन नसकेकोले पृथ्वीनारायण शाहको पालासम्म पाल्पा राज्य स्वतन्त्र नै थियो ।

पृथ्वीनारायण शाहको निधनपछि उनका उत्तराधिकारीहरूले नेपालको एकीकरण अभियानलाई निरन्तता दिँदै वि.सं. १८३४ मा तनहुँको अधिनमा रहेका उपरदाङ गढी, कविलासपुर र सुमेश्वर गढी दखल गरे ।[१०] राजेन्द्रलक्ष्मीको नायबीकालमा चौबीसीहरू मिलेर गोरखाउपर पटकपटक आक्रमण गरी हैरान पारिरहेका र कास्की राज्यसँग भएको सम्झौता अनुसार सो राज्यको सुरक्षाका लागि त्यसको आसपासका क्षेत्र कब्जा गर्न आवश्यक ठानी दलमर्दन शाह, वंशराज पाँडे र अमरसिंह थापाको नेतृत्वमा दुई हजार

जति सेनालाई लमजुङ हान्न खटाइयो । अमरसिंह थापाले कास्कीको देउरालीमा आड बनाएर बसेका पर्वतका सैनिकलाई त्यहाँबाट धपाएर लमजुङलाई घेरामा पारेका थिए भने दलमर्दन शाहको नेतृत्वमा रहेको फौजले वि.सं. १८३९ कार्तिकमा लमजुङको तार्कु भन्ने क्षेत्र दखल गरेको थियो । यस घटनाबाट डराएर लमजुङका राजा वीरमर्दन शाह र तनहुँका राजा हरकुमारदत्त सेन आफ्नो राज्य छाडी भागेर रामनगर पुगे ।[११]

## ३. पाल्पामा पहिलो आक्रमण : बाकुम गढीको युद्ध

पाल्पाका राजा महादत्त सेनले आफ्ना सगोत्री तनहुँका राजाको राज्य फिर्ता गराउने इरादाले चितवनको सुरक्षा गरी बसेका रामकृष्ण कुँवरलाई आफ्नो पक्षमा मिलाउन प्रलोभन दिई वि.सं. १८४० भाद्रमा एक पत्र लेखे । यो कुरा थाहा पाएपछि नेपाल दरबार महादत्त सेनसँग रिसाएर पाल्पा उपर आक्रमण गर्न काजी अभिमानसिंह बस्न्यातको नेतृत्वमा पाँच कम्पनी फौज पठायो ।[१२] उक्त फौज वि.सं. १८४० चैत्रमा कालीगण्डकीको जँघार तरी गैंडाकोटतिरबाट पाल्पाको पूर्वी क्षेत्रमा प्रवेश गरी दर्छा, सिलुवा, पिलुवा कब्जा गर्दै बीरकोट पुग्यो ।[१३] पूर्वी पाल्पाको बीरकोट र तनहुँको बीचमा पर्ने बाकुम गढी भन्ने ठाउँमा पाल्पाली सेना तैनाथ थिए । सरदार अमरसिंह थापा सहितको दुई कम्पनी फौज पूर्व खोलाको बाटो ताहुँ पुगेर त्यताबाट र काजी अभिमानसिंह बस्न्यातको नेतृत्वमा रहेको फौजले बीरकोटतिरबाट बाकुम गढीमा आक्रमण गर्दा पाल्पाली सेना चेपुवामा पऱ्यो ।[१४] पाल्पाको सदरमुकामदेखि करीब ३२ कि.मि. पूर्वमा ताहुँ र हेक्लाङ गाउँकोबीचमा बाकुम गढी रहेको छ । मध्यकालमा पाल्पाबाट तनहुँ, लमजुङ र गोरखातिर जाने पैदल मार्ग यही गढीको बाटो भएर जान्थ्यो । त्यसकारण चौबीसी राज्यहरूबाट हुनसक्ने आक्रमण रोक्न सेन राजाहरूले यो गढी निर्माण गराएका थिए । बाकुम गढी ढुङ्गाको परखाल लगाएर बनाइएको थियो । गढीको मध्यभागमा सेना र हतियार राख्ने ठाउँ बनाइएको थियो । उत्तर र दक्षिण पाखा भीरालो भएकोले प्राकृतिक रूपले नै सुरक्षित थियो भने पूर्व र पश्चिमतिर निस्कन सकिने बाटो बनाइएको थियो ।[१५] गोरखालीहरूले पाल्पाउपर आक्रमण गर्दैछन् भन्ने थाहा पाएर पाल्पाली सेना बाकुम गढीमा एकत्रित भएका थिए तर युद्ध कलामा पारङ्गत भएका गोरखाली सेनाका सामुन्ने पाल्पाली सेना टिक्न सक्ने कुरै भएन । गोरखाली सेनाले बाकुम गढी कब्जा गरेपछि ताहुँ, हुमिन, प्रभासहुँदै तानसेनमाथि आक्रमण गर्न अग्रसर भयो । त्यतिखेर पाल्पा राज्यको राजधानी पुरानोकोट अर्थात् अहिलेको भैरवस्थानमा थियो जुन ठाउँ तानसेनबाट १४ कि.मि. मात्र टाढा थियो । गोरखाली सेना आफ्नो

राजधानीको नजिकमा आइपुगेको थाहा पाएर राजा महादत्त सेन त्यहाँबाट भागेर अर्घा राज्यमा पुगे । त्यतिखेर चौबीसी राज्यमध्ये पाल्पा र पर्वत निकै शक्तिशाली मानिन्थे । पाल्पा गोरखालीले जित्न सकेमा पर्वत राज्यउपर पनि खतरा उत्पन्न हुन्थ्यो । त्यसकारण पर्वतका राजा कीर्तिबम मल्लले कास्कीका राजा सिद्धिनारायण शाहलाई आफ्नो पक्षमा मिलाई लमजुङमा आक्रमण गरे । चौबीसीहरू एकगठ भएर लमजुङमा आक्रमण गर्दैछन् भन्ने खबर पाएपछि पाल्पा हान्न गएका काजी अभिमानसिंह बस्न्यात र काली पूर्वका चौबीसी राज्य दखल गर्दै पर्वत राज्य हान्न गएका नरू शाहको नेतृत्वको गोरखाली फौज आफूले जितेका प्रदेश छाडी लमजुङ बचाउन मकैडाँडामा पुगे । गोरखाली सेना पाल्पा छाडेर लमजुङतिर लागेकोले पाल्पा पुनः स्वतन्त्र हुन गयो । वि.सं. १८४१ आषाढ १२ गते कास्की, पर्वत र अन्य चौबीसी राज्यहरूका संयुक्त सेनासँग लमजुङको मकैडाँडामा भएको युद्धमा विजय गोरखालीकै भयो ।[२७] कास्कीका राजा सिद्धिनारायण शाहले गोरखासँग भएको सम्झौता तोडी मकैडाँडाको युद्धमा चौबीसीको पक्ष लिएको हुनाले राजेन्द्रलक्ष्मीले दलजित शाह र स्वरूपसिंह कार्कीको नेतृत्वमा कास्की दखल गर्न फौज पठाइन् जसले वि.सं. १८४२ आषाढमा कास्की कब्जा गऱ्यो । त्यस्तै अभिमानसिंह बस्न्यातको नेतृत्वमा रहेको फौजले वि.सं. १८४२ आषाढमा कालीगण्डकी पूर्वका सतहुँ राज्य र अरू ससाना इलाकाहरू दखल गऱ्यो ।[२८]

## ४. एकीकरणको पश्चिमी अभियान

राजेन्द्रलक्ष्मीको देहान्तपछि बहादुर शाह नायब भए । आफूले शासन सत्ता सम्हालेपछि उनले नेपालको एकीकरण अभियान तिव्रगतिमा अघि बढाउने बिचार गरे । उक्त कार्यलाई पूर्णता दिनका लागि उनले केही महत्वपूर्ण नीति अबलम्बन गरे जुन यस प्रकार छन् :

(१) नेपालको पश्चिमी क्षेत्र विजय गर्न बाइसी र चौबीसी राज्यहरूलाई फुटाली आफूपट्टि मिल्न आउने राज्यलाई प्रोत्साहन दिने,

(२) आश्रित भइसकेका भीरकोट, सतहुँ जस्ता राज्यहरूको सुरक्षाको प्रबन्ध गर्ने,

(३) आत्मसमर्पण नगर्ने राज्यउपर आक्रमण गर्ने तर लडाईबाट जितिएका र जितिने राज्यका जनताप्रति राम्रो व्यवहार गर्ने ।[२९]

वास्तवमा बहादुर शाहको यही नीतिले गर्दा नै नेपालको पश्चिमी विजय अभियान पूर्ण सफल हुनुका साथै एकीकरण कार्य दिगो पनि भएको हो । पाल्पा र पर्वत चौबीसी राज्यहरू मध्ये सबल राज्य थिए । त्यसमा पनि धन, दौलत र अवधसँगको

सम्बन्धका कारण पाल्पा अझै बलवान थियो । यिनै कुराको बिचार पुऱ्याएर बहादुर शाहले पाल्पा राज्यसँग मैत्री सम्बन्ध स्थापना गरे । त्यस अनुसार बहादुर शाहको विवाह महादत्त सेनकी छोरी विद्यालक्ष्मीसँग हुनुका साथै दुई राज्यबीच एक सम्झौता भयो जस अनुसार नेपालको पश्चिमी विजय अभियानमा पाल्पाले सैनिक सहयोग दिने र त्यस वापत विजित प्रदेश आपसमा बराबरी भागवण्डा गर्ने कुरा तय भयो ।[१९] आवश्यक तयारी पूरा गरिसकेपछि बहादुर शाहले नेपालको पश्चिमी क्षेत्र विजय गर्न गोरखाली सेना पठाए जसलाई पाल्पाली सेनाले पनि सहयोग गरेको थियो । काजी जीव शाह, काजी शीवनारायण खत्री, सरदार पारथ भण्डारी, सरदार अम्बरसिंह राना र सुब्बा जोगनारायण मल्लको नेतृत्वमा गएको फौजले कालीगण्डकी तरी गुल्मी दखल गऱ्यो ।[२०] त्यसपछि अम्बरसिंह रानाको नेतृत्वमा गएको फौजले चन्द्रकोट कब्जा गऱ्यो भने जोगनारायण मल्लको मातहतमा रहेको सैनिक टोलीले खाँची कब्जा गऱ्यो । पर्वतका राजा कीर्तिबम मल्लले पर्वत, गुल्मी, अर्घा, खाँची, मुसिकोट, इश्मा, धुर्कोट र गलकोटलाई मिलाएर नयाँ गठबन्धन बनाएकोले उक्त गठबन्धनको संयुक्त सेनासँग अर्घातोषमा गोरखाली सेनाको घमासान युद्ध भयो तर विजयश्री भने गोरखालीले नै प्राप्त गरे ।[२१] वि.सं. १८४३ आश्विनको पहिलो सातामै गुल्मी, अर्घा, खाँची र चन्द्रकोट सजिलैसँग हात पारेपछि सोही महिनामा नै धुर्कोट, इश्मा, मुसिकोट र गलकोट गोरखालीहरूले नेपालमा गाभ्न सफल भए ।[२२] त्यसपछि चौबीसी मध्येको सबल राज्य पर्वत कब्जा गर्न दामोदर पाँडे, अभिमानसिंह बस्न्यात, शिवनारायण खत्री, जगजीत पाँडे र प्रबल रानाको नेतृत्वमा दुईतिरबाट सैनिक परिचालन गरियो । दामोदर पाँडे र जगजीत पाँडे उत्तरपूर्वतिरबाट श्रीनाथ र कालीदत्त पल्टनका साथ दुर्लुङ कब्जा गरी कालीनदी तरेर बेनी शहरमा दाखिल भए । अर्कोतिर जीवशाह र शीवनारायण खत्रीले नेतृत्व गरेको फौज पनि दक्षिणतिरबाट बाग्लुङ कब्जा गरी पर्वतको राजधानी बेनीशहरमा पुग्यो ।[२३] गोरखाली फौज त्यहाँ पुग्दानपुग्दै पर्वतका राजा कीर्तिबम मल्ल भागीसकेका हुनाले वि.सं. १८४३ आश्विन १४ गते सो राज्य पनि नेपालमा समाहित भयो ।[२४]

गण्डकी प्रदेशमा रहेका चौबीसी राज्यहरूमा आफ्नो आधिपत्य जमाइसकेपछि गोरखालीहरूको ध्यान बाइसी राज्यतिर गयो । गोरखाली सेनापतिहरू दामोदर पाँडे, जगजीत पाँडे, प्रबल राना र फौदसिंहको नेतृत्वमा गएको फौजले वि.सं. १८४३ मार्गमा रोल्पा क्षेत्रका खुँग्री, भिंग्री राज्य दखल गरी दाङ राज्य विजय गरेपछि नेपालको पश्चिमी सिमाना भेरी नदीसम्म पुग्यो ।[२५] बाइसी राज्य मध्येको सबल जुम्ला राज्य दखल गर्न काजी शीवनारायण खत्री र सरदार प्रबल रानाको नेतृत्वमा गोरखाली फौज परिचालन

भएको थियो सो फौजले दुई वर्षको लगातार युद्धपछि वि.सं. १८४६ आश्विन ३ गते उक्त राज्य विजय गऱ्यो । जुम्ला पछि दुल्लु र दैलेख पनि नेपालमा गाभिएकोले नेपालको सिमाना कर्णाली नदीसम्म पुग्यो ।[२६] त्यसपछि बझाङका राजाले नेपालको आश्रय स्वीकार गरेकोले गोरखाली फौजले डोटीमा आक्रमण गऱ्यो । त्यहाँको राजा दीप शाही भागेर भारतको पिलभित भन्ने ठाउँमा पुगेपछि वि.सं. १८४७ मा डोटी राज्य पनि नेपालमा गाभियो । त्यस्तै अछाम आक्रमण गर्न गएको गोरखाली फौजले त्यहाँका राजा देवीचन्द्र भागेपछि बिना युद्ध उक्त राज्य हात पाऱ्यो । डोटी, अछाम र बझाङ विजय गरेपछि नेपालको सिमाना महाकाली नदीसम्म पुग्यो ।[२७]

सम्पूर्ण बाइसी र चौबीसी राज्यहरूउपर विजय प्राप्त गरिसकेपछि बहादुर शाहको हर्षको सीमा रहेन । उनको शान निकै बढ्यो । उनले काठमाडौंमा ठूलो विजय उत्सवको आयोजना गरे । उक्त कार्यक्रममा पाल्पाली राजा महादत्त सेन लगायत सम्पूर्ण आश्रित राज्यका राजाहरू सम्मिलित थिए । यो उत्सवमा उपहारको आदानप्रदान भयो । नेपालको पश्चिमी क्षेत्र विजय गर्ने कार्यमा सघाए वापत पाल्पालाई गुल्मी, अर्घा र खाँची राज्यहरू पुरस्कार दिइयो ।[२८] यसरी नेपालको एकीकरणको सिलसिलामा सम्पूर्ण बाइसीचौबीसी राज्यहरू नेपालमा विलिन भएतापनि पाल्पा राज्य भने स्वतन्त्र नै थियो ।

## ५. पाल्पा राज्यको विलय

रणबहादुर शाहले बनारसमा छँदा आफूलाई नेपाल फर्काउन मद्दत गर्न भनी धेरै जनासँग सहयोग मागेका थिए । ती मध्ये पाल्पाका राजा पृथ्वीपाल सेन र गढवालका राजा प्रद्युम्न शाह पनि थिए । ती दुवै राजाले रणबहादुर शाहको पत्रको कुनै जवाफ दिएका थिएनन् । पाल्पा र गढवाल आफूपट्टि मिल्न नआएकोले रणबहादुर शाह उनीहरूसँग रिसाएका थिए । त्यसकारण उनले बनारसबाट काठमाडौं फर्केपछि ती दुवै राज्यउपर आक्रमण गर्ने बिचार गरे तर पाल्पा शक्तिशाली हुनाले लरतरो युद्धबाट विजय गर्न कठिन थियो । यो कुरा बिचार गरेर पाल्पाउपर छलकपटको नीति शुरु भयो । त्यसअनुसार वि.सं. १८६१ वैशाखमा गढवाल हान्नका लागि हस्तदल शाह र वडाकाजी अमरसिंह थापालाई खटाइयो । यो युद्धमा सहयोग मागेकोले पाल्पाका सरदार शशीधर टण्डन खत्रीको नेतृत्वमा पाल्पाली सेना पनि गढवालतिर पठाइएको थियो । पाल्पाली र गोरखाली मिश्रित संयुक्त सेनाले सजिलैसँग गढवाल राज्य विजय गऱ्यो ।[२९] पाल्पाली सेना गढवालतिर पठाएको मौका पारी पाल्पाका राजा पृथ्वीपाल सेनलाई उनकी बहिनीको विवाह रणबहादुर शाहसँग गराउने बहाना बनाएर काठमाडौं

बोलाइयो । उक्त बोलावट अनुसार पृथ्वीपाल सेन वि.सं. १८६१ वैशाखमा काठमाडौं पुग्दा नपुग्दै आफ्ना अनुयायीहरू सहित पक्राउ परे र नेपालको राजा हुने षड्यन्त्र गरेको आरोपमा ललितपुरको एक राजभवनमा नजरबन्द गरिए । यसरी पाल्पालाई नेतृत्व विहिन बनाउनुका साथै सैनिक शक्तिबाट पनि कमजोर पार्ने षडयन्त्र पूरा भएपछि वि.सं. १८६१ जेठमा काजी दलभञ्जन पाँडे, काजी अमरसिंह थापा र काजी वीरभद्रको नेतृत्वमा एक फौज पाल्पा दखल गर्न पठाइयो । यो कुराको चाल पाएर गुल्मीका राजा सिद्धिप्रताप शाह भागीसकेका थिए ।[३०] गोरखाली सेना आफ्नो राज्यमा प्रवेश गरेको थाहा पाएपछि पाल्पाका चौतारा सुरवीर सेन, दिवान समरबहादुर सेन तथा पृथ्वीपालकी रानी र छोरा समेत रातारात भागेर तिलपुरको मधुवनी भन्ने ठाउँमा पुगे ।[३१] तीन शताब्दीभन्दा लामो समयसम्म स्वतन्त्र राज्यको रूपमा रहेको पाल्पा नेपालमा विलिन भयो । साथै गुल्मी, अर्घा र खाँची पनि नेपालमा गाभिए । पाल्पा राज्य नेपालमा कहिले विलय भयो भन्ने बारेमा विद्वान्हरूबीच मत भिन्नता छ तापनि परराष्ट्र मन्त्रालय, जैसी कोठामा प्राप्त एक कागज अनुसार वि.सं. १८६१ जेष्ठमा उक्त राज्य नेपालमा गाभिएको कुराको पुष्टि हुन्छ । यो कागजमा यस्तो लेखिएको छः

> "आगे काजि दलभंजन पाँडे काजि अमरसिंह थापा काजि विरभद्रप्रति पाल्पाका बाजे रकमका आम्दनि मध्ये. वमोजिम तपसिलका साराजाम सुवेदार हस्ते भरिदेउ ताहाको आम्दानी षर्चको कागज बुझ्दा मोजरा पर्ला ।...
>
> इति सम्बत् १८६१ साल मिति जेष्ठ सुदि ८ रोज ६ शुभम्" [३२]

पाल्पामा आफ्नो भलाई नदेखेपछि त्यहाँको प्रशासक भइबसेका चौतारा सुरवीर सेनले सम्पूर्ण राजपरिवारलाई मधुवनीमा पुऱ्याए । त्यसपछि बुटवलदेखि तलको मैदानी इलाकामा आफ्नो हक जमाउने प्रयत्न गर्न थाले । यस कार्यका लागि उनले अङ्ग्रेजसँग गुहार माग्न थाले । 'बुटवलदेखि तलको मैदानी इलाका खासगरेर तिलपुर र राजपुर पाल्पाका राजाले अवध राज्यबाट जमिन्दारीमा पाएका हुन् । अवध र पाल्पा दुवै राज्यको पतन भएपछि उक्त क्षेत्रमा सेन वंशको मात्र एकलौटी हक रहन्छ' भन्ने उनको दलिल थियो जुन कुरा उनले अङ्ग्रेजलाई पनि बताएका थिए ।[३३] यो कुराको चाल पाएर अङ्ग्रेजहरू पनि चनाखा हुन थालेका थिए र उनीहरूले सुरवीर सेनलाई गोरखपुरको एक भवनमा सुरक्षा दिइ दैनिक गुजाराका लागि पेन्सन समेत दिएर राखेका थिए । आफ्नो राज्य गुमेको मर्मले छटपटिएका पाल्पाका पूर्व भारदारहरूले अङ्ग्रेजको मद्दतले आफ्नो

गुमेको सत्ता फिर्ता लिने दाउमा थिए । अङ्ग्रेजहरू पनि नेपालमा प्रवेश गर्न यहाँको आन्तरिक विवाद, इतिहास, संस्कृति, राजनीति, भूवनोट र समाजको बारेमा यथार्थ कुरा जान्न चाहन्थे । दुवै थरीको स्वार्थ मिलेपछि पाल्पाका दिवान समरबहादुर सेन, मन्त्रीहरू प्रतिनिधि तिवारी र कनकनिधि तिवारी तथा पुरोहित साधुराम उपाध्यायबाट अङ्ग्रेजहरूले नेपालको कुना-कन्दराको इतिहास, राजनीति, भूवनोट र समाजको बनोट बारे धेरै कुरा थाहा पाए । यस कुराको खुलासा हेमिल्टनले आफ्नो पुस्तकमा गरेका छन् ।[३४]

## ६. निष्कर्ष

पाल्पा मध्यकालमा गण्डकी प्रदेशको एक स्वतन्त्र चौबीसी राज्यको रूपमा रहेको थियो । नेपालको एकीकरण अभियानमा बेलाबखतमा गोरखालाई सहयोगसमेत गरेको थियो । नेपालको एकीकरण अभियान पूर्ण गर्नकालागि पाल्पालाई पनि बृहत् नेपालमा गाभ्न आवश्यक थियो । त्यसकारण वि.सं. १८६१ मा पाल्पा बृहत् नेपालमा विलय भयो र एकीकृत नेपालको एक प्रशासनिक एकाईको रूपमा रहन गयो ।

## टिप्पणी

१ दिनेशराज पन्त, **गोरखाको इतिहास**, पहिलो भाग, काठमाडौं : लेखक स्वयं, वि.सं. २०४१, पृ. ९६ र २६२ ।

२ बाबुराम आचार्य, **श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी**, भाग १, नेपाल : श्री ५ महाराजाधिराजका प्रेस सचिवालय, वि.सं.२०२४, पृ. १६१-६७ ।

३ तुलसीराम वैद्य, **पृथ्वीनारायण शाह द फाउण्डर अफ मोडर्न नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स्, सन् १९९३, पृ, १४२ र १५० ।

४ नयराज पन्त र अन्य (सम्पा.), **श्री ५ पृथ्वीनारायण शाहको उपदेश**, १-५ खण्ड, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०२५-२०२८, पृ. ९९८-९९ ।

५ वैद्य, **पूर्ववत्**, टि.नं. ३, पृ. १५५ ।

६ लुडविग एफ. स्टीलर, **द राइज अफ द हाउस अफ गोरखा**, (सेकेण्ड एडिसन), पटना : जेसुइट सोसाइटी, सन् १९७५, पृ. १२६-२७ ।

७ बाबुराम आचार्य, **नेपालको संक्षिप्त वृत्तान्त**, काठमाडौं : प्रमोद शमशेर र नीरविक्रम 'प्यासी', वि.सं. २०२२, पृ. ३६-५१ ।

८ आचार्य, **पूर्ववत्**, टि.नं.२, पृ. ५७०-७४ ।

९ **उही**, पृ. ६०१-१६ ।

१० आचार्य, **पूर्ववत्**, .टि.नं.७, पृ. ७५-७६ ।

११ सूर्यमणि अधिकारी, **तनहुँ राज्यको इतिहास**, चितवन : चन्द्रप्रभा प्रकाशन, वि.सं. २०५५,पृ.६५-६६ ।

१२ आचार्य, **पूर्ववत्**, टि.नं.७, पृ. ८८ ।

१३ धनवज्र बज्राचार्य, **लिच्छवीकालका अभिलेख**, (द्वितीय संस्करण), काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ. २६४ ।

१४ 'भाषा वंशावली' **पूर्णिमा**, वर्ष ५, अंक ४, पूर्णाङ्क २०, वि.सं. २०२५, पृ. ३२५ ।

१५ रामेश्वर श्रेष्ठ, "नेपालको एकीकरण अभियानमा बाकुम गढीको युद्ध", **प्राज्ञिक प्रवाह**, वि.सं. २०६१, पृ.५–९ ।

१६ बाबुराम आचार्य, "गोरखा विजयकालका घटना" **पूर्णिमा, वर्ष** ७, अंक ३, पूर्णाङ्क २७, वि.सं. २०२९, पृ. १६९ ।

१७ स्टीलर, **पूर्ववत्**, टि.नं. ६, पृ. १६९-७० ।

१८ दिनेशराज पन्त "आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति" **पूर्णिमा**, वर्ष २, अंक २, पूर्णाङ्क ६, वि.सं. २०२२, पृ. ५१-५५ ।

१९ फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल**, (रिप्रिन्ट), न्यू दिल्ली : एसियन एजुकेशनल सर्भिसेज, सन् १९८६,पृ. १७३ ।

२० वैद्य, **पूर्ववत्**, टि.नं. ३, पृ. ८६ ।

२१ भद्ररत्न बज्राचार्य, **बहादुर शाह द रिजेन्ट अफ नेपाल**, (सन् १७८५-१७९४), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स्, सन् १९९२, पृ. ७५-८१ ।

२२ स्टीलर, **पूर्ववत्**, टि.नं. ६, पृ. १८० ।

२३ बज्राचार्य, **पूर्ववत्**, टि.नं. २१, पृ. ८२-८५ ।

२४ रामजी तेवारी, "वि.सं. १८४३ मा भएका केही मुख्य घटना" **पूर्णिमा**, वर्ष १, अंक २, पूर्णाङ्क २, वि.सं. २०२१, पृ.६३-६४ ।

२५ स्टीलर, **पूर्ववत्**, टि.नं. ६, पृ. १८१ ।

२६ वैद्य, **पूर्ववत्**, टि.नं. ३, पृ. ८८ ।

२७ स्टीलर, **पूर्ववत्**, टि.नं. ६, पृ. १८७-८८ ।

२८ हेमिल्टन, **पूर्ववत्**, टि.नं.१९, पृ. १७३ ।

२९ देवीप्रसाद भण्डारी (सम्पा.), "ऐ.शि. बाबुराम आचार्यले रचना गर्नु भएको नेपालको संक्षिप्त इतिहास", **पूर्णिमा**, वर्ष १६, अंक ४, पूर्णाङ्क ६४, वि.सं. २०४१, पृ. ८ ।

३० उही, पृ. ८ ।

३१ हेमिल्टन, **पूर्ववत्**, टि.नं. १९, पृ. १७७ ।

३२ भवेश्वर पंगेनी, "काजी अमरसिंह थापा र पाल्पा विजय", **पाल्पा दर्पण**, अंक ३, वि.सं. २०४९, पृ. ४४-४८ ।

३३ भण्डारी, **पूर्ववत्**, टि.नं. २९, पृ. ८ ।

३४ हेमिल्टन, **पूर्ववत्**, टि.नं. १९, पृ. ४ र १७७-७८ ।

# ४. पाल्पा राज्यलाई नेपालमा गाभेपछि देखापरेका समस्याहरू

## १. विषय प्रवेश

भीरकोटमा जैनखानले राज्य स्थापना गर्दा नेपालको पश्चिममा रहेको खस राज्य छिन्नभिन्न भइसकेको थियो । खस राज्यको विभाजनपछि गण्डकी प्रदेशमा चौबीसी राज्य स्थापना हुन थालेका थिए । यस्ता राज्य स्थापना गर्ने रजौटाहरू मध्ये रुकुमतिरबाट आएका आनम्मले निसीभूजीका मगर मुखियाहरूलाई आफ्नो अधिनमा लिएर नयाँ राज्य स्थापना गरेका थिए जसको नाम 'पर्वत' राखिएको थियो । समाल वंशीय पर्वते राजाहरूले आफ्नो राज्यको सीमाना विस्तार गरी पूर्वमा सेतीनदीसम्म पुऱ्याएका थिए ।[१] उता रिडीको पूर्वपट्टि रुद्र सेनले स्थापना गरेको पाल्पा राज्यको सीमाना विस्तार गरेर मुकुन्द सेन प्रथमले पूर्वमा कोशीनदी, पश्चिममा रिडी, उत्तरमा मुक्तिक्षेत्र र दक्षिणमा गंगानदीसम्म पुऱ्याएका थिए ।[२] त्यसकारण जैन खानले स्थापना गरेको राज्य विस्तार गर्ने ठाउँ भीरकोटदेखि उत्तर–पूर्वी इलाका मात्र थियो । अतः उनीहरूले सो क्षेत्रका गुरुङ र मगरहरूलाई आफ्नो अधिनमा पार्न थाले । यसरी राज्य विस्तार गर्दैजाँदा द्रब्य शाहले गोरखा राज्यको स्थापना गर्दा गण्डकी क्षेत्रमा जैन खानका सन्तानको सतहुँ, गरहुँ, पैयुँ, ढोर, नुवाकोट, कास्की, लमजुङ र गोरखा गरी आठवटा राज्य स्थापना भइसकेका थिए ।[३] गोरखा राजवंशको दशौं पुस्तामा जन्मेका पृथ्वीनारायण शाहले विशाल नेपाल राज्यको निर्माण कार्य प्रारम्भ गरे । उनका उत्तराधिकारीहरूले त्यो कार्य पूरा गरे । त्यसै सिलसिलामा पाल्पा राज्यलाई नेपालमा गाभ्दा जुन किसिमको छलकपटको नीति अपनाइयो त्यसले गर्दा विभिन्न किसिमका समस्याहरू देखापरे । त्यसबारे चर्चा गर्नु यस लेखको उद्देश्य रहेको छ ।

## २. विशाल नेपाल निर्माण गर्ने सपना

नागराजले स्थापना गरेको कर्णाली प्रदेशको खस राज्य उन्नत अवस्थामा भएको बेला जितारी मल्ल र आदित्य मल्लले नेपाल उपत्यकामा समेत आक्रमण गरेका थिए तर मलय बर्माको निधनपछि खस राज्यको अस्तित्व लोप हुँदै गयो ।[४] यक्ष मल्लले निर्माण गरेको उपत्यकाको विशाल राज्य पनि उनका उत्तराधिकारीहरूको समयमा विभाजित हुन गयो । त्यस्तै पाल्पा राज्य पनि मुकुन्द सेन प्रथमको सययमा पूर्वमा कोशीनदी, पश्चिममा रूरूक्षेत्र, उत्तरमा मुक्तिक्षेत्र र दक्षिणमा गंगानदीको

किनारसम्म फैलिएको थियो तर पाल्पाको सो विशाल राज्य पनि मुकुन्द सेन प्रथमका उत्तराधिकारीहरूको समयमा टुक्रिन गयो ।

नेपाल मण्डल आर्थिक रूपमा सम्पन्न हुनुकासाथै तिब्बत एवं भारतबीचको व्यापारिक मार्गसमेत थियो । त्यसकारण नेपाल मण्डलको वैभवबाट लोभिएर बेला बखतमा खस र सेनवंशी राजाहरूले उपत्यकामा आक्रमण गरेको र आफ्नो राज्य बिस्तार गर्ने प्रयास गरेको पाइन्छ । तर स्पष्ट र दरिलो नीतिको अभावमा खस र सेन राज्य चीरस्थायी हुन सकेनन् । ती राज्यहरू बाईसी, चौबीसी राज्यमा विखण्डित हुन गए । पृथ्वीनारायण शाहले पनि उपत्यकाको वैभव, उर्वरा भूमि र व्यापारिक सुविधाबारे थाहा पाइसकेका हुनाले चन्द्रागिरिको डाँडाबाट उपत्यकाको प्रत्यक्ष अवलोकन गर्दा यस्तो अनुभव गरेका थिए–

> "...चन्डागिरिमा आइपुग्यापछि नेपाल कुन हो भनि सुध्याञा र त्यो भादगाउ हो. त्यो पाटन हो. त्यो काठमाडौं हो भनि देषा (या) र मेरा मनमा इ तिनै शहरको राजा हुन पाया ता हुदो हो भन्ने यस्तो मनमा परिरहेथ्यो..."[५]

यसरी उपत्यका विजय गरेर विशाल नेपालको राजा बन्ने सपना देखेपछि पृथ्वीनारायण शाहले केही स्पष्ट नीति बनाएका थिए । त्यसमध्ये छिमेकीसँग सम्झौता गर्ने, विजय गरिएका क्षेत्र विभाजन नगर्ने र सुदृढ प्रशासन लागू गर्ने प्रयास आदि मुख्य थिए ।[६]

## ३. एकीकरण अभियानमा पाल्पा राज्यको सहयोग

पृथ्वीनारायण शाहले आफ्ना मामा पाल्पाका युवराज उद्योत सेनलाई आदर गर्दथे र परिआएको बेलामा सल्लाह सुझाव, अर्ती र उपदेश लिने गर्दथे । उपत्यका विजय गर्नका लागि पनि उनले आफ्ना मामा उद्योत सेनसँग अर्ती लिएका थिए । 'नेपाल (उपत्यका) भनेको भ्यागुता जस्तै हो, गोरखा सर्प हो र लमजुङ गरूड हो । सर्पले भ्यागुता निल्न गरूडको आँखा छल्नु पर्छ । अतः गोरखाले उपत्यकामा विजय प्राप्त गर्न लमजुङसँग सन्धि गर्नुपर्छ ।'[७] भन्ने आफ्ना मामा उद्योत सेनको अर्ती बमोजिम पृथ्वीनारायण शाहले विजय यात्रा शुरू गरेका थिए ।

नेपालको एकीकरण कार्यमा पाल्पाको पूर्ण सहयोग लिने काम बहादुर शाहले गरेका थिए । चौबीसी राज्यहरूमध्ये पाल्पा र पर्वत सम्पन्न तथा शक्तिशाली थिए । ती दुई राज्यलाई फुटाल्न सकेमा मात्र पश्चिमतिरको विजय अभियान सफल हुन

सक्दथ्यो । पाल्पा अवधसँग सम्बन्ध भएको राज्य हुनाले त्यस राज्यसँग झगडा गर्नुभन्दा सम्झौता गर्नु हितकर थियो । यो कुरा बुझेर बहादुर शाहले पाल्पाली राजासँग बैवाहिक र राजनीतिक सम्बन्ध स्थापना गरे । महादत्त सेनकी छोरी विद्यालक्ष्मीसँग बहादुर शाहको बिहे भयो । महादत्त सेनले पश्चिमतिरको विजय अधियानमा गोरखालाई भरमग्दुर सहयोग दिए । त्यसको पारितोषिक बापत पाल्पाले गुल्मी, अर्घा र खाँची राज्य पायो ।[८] रणबहादुर शाहको प्रत्यक्ष शासनकालपछि पाल्पा र नेपालको सम्बन्ध चिस्सिँदै गयो । गुल्मीको राजवंश रणबहादुरको ससुराली भएको र त्यस राज्यउपर पाल्पाको नियन्त्रण भएको हुनाले पनि उनी पाल्पाका राजासँग टाढिन खोजेको देखिन्छ । गुल्मी राज्यलाई पाल्पाको नियन्त्रणबाट खोसेर आफ्ना जेठान सिद्धिप्रताप शाहलाई दिनुले सो कुराको पुष्टि हुन्छ ।[९] बैमनष्यता बढ्दै गएपछि रणबहादुर शाह पाल्पासँग सतर्क हुन थाले । त्यसै अवस्थामा आफूले राजगद्दी छाडेर गीर्वाणयुद्धलाई राज्यारोहण गराउनुपर्ने बाध्यता सिर्जना भयो र उनको मनमा नाबालक राजाको सुरक्षाकालागि शक्तिशाली राज्य पाल्पासँग राम्रो सम्बन्ध स्थापना गर्ने बिचार आयो । त्यसकारण पाल्पाली राजा पृथ्वीपाल सेनलाई काठमाडौँ बोलाएर उनको हातबाट गीर्वाणयुद्धलाई राजतिलक लगाइदिने कार्य सम्पन्न भयो । तर रणबहादुर शाहलाई पृथ्वीपाल सेनप्रति विश्वास लागेन र उनले पाल्पाली राजा पृथ्वीपाल सेनलाई उनका भाइ र अंगरक्षकसहित ललितपुरमा नजरबन्दमा राखे ।[१०] रणबहादुर शाह बनारसमा छँदा पनि उनले पाल्पाका राजा पृथ्वीपाललाई अनेकौं प्रकारका सहयोग मागेका थिए । उनी बनारसबाट फर्केपछि नेपालको पश्चिमी विजय अभियानलाई निरन्तरता दिने बिचार गरी पाल्पालाई सैनिक सहयोग मागेका थिए । सो माग अनुसार गोरखाली सेनाले वि.सं. १८६१ मा गढवाल हान्न जाँदा सेनापति हस्तदल शाही र वडाकाजी अमरसिंह थापाको साथमा पाल्पाका सैनिकहरू सरदार टण्डन खत्रीको नेतृत्वमा सो युद्धमा सहभागी भएका थिए ।[११]

## ४. नेपालमा पाल्पा राज्यको विलय

बनारसबाट फर्केपछि रणबहादुर शाहले पुन : राजकाजमा हात हाल्न थाले । उनी बनारसमा बस्दा आफूलाई नेपाल झिकाउन मद्दत गर्नकालागि पाल्पाका राजा पृथ्वीपाल सेन र गढवालका राजालाई सहयोग मागेका थिए । तर ती राजाहरूले रणबहादुरले गरेको सहयोगको याचनाको कुनै सुनुवाई नगरेको हुनाले रणबहादुर उनीहरूसँग रिसाएका थिए । त्यसकारण उनले पाल्पा र गढवालउपर आक्रमण गरी ती राज्यहरूलाई आफ्नो राज्यमा मिलाउने बिचार गरे । तर पाल्पा राज्यउपर आक्रमण गर्नु

चानेचुने कुरा थिएन । साथै पाल्पा र गढवाल दुवै राज्यसँग एकैचोटी युद्ध गर्न पनि संभव थिएन । अत : पहिले गढवालतिरको युद्ध सञ्चालन गर्ने र त्यसको लागि पाल्पासँग पनि सहयोग माग्ने योजना बन्यो । सो माग बमोजिम सोझा राजा पृथ्वीपाल सेनले कुनै शंका नगरी गढवालसँग लड्नका लागि पाल्पाली सेना पठाइदिए । पाल्पाली सेना पश्चिमतिर लागेको हुनाले उनीहरूको सैनिक शक्ति घटेको थियो । त्यही मौका छोपेर रणबहादुरले पाल्पा कब्जा गर्ने बिचार गरे अनि पृथ्वीपाल सेनकी बहिनीसँग विवाह गर्ने बहाना बनाएर उनलाई काठमाडौं झिकाए । आफ्नी बहिनीको विवाहको लागि काठमाडौं पुगेका पृथ्वीपाल सेन आफ्ना भाइ रणबहादुर सेन, बहिनी र अंगरक्षकसहित थुनामा परे । त्यसपछि काजी दलभञ्जन पाँडे, काजी अमरसिंह थापा र काजी वीरभद्रको नेतृत्वमा पाल्पा कब्जा गर्नकालागि फौज पठाइयो । राजाको अनुपस्थितिमा पाल्पाको प्रशासक भइबसेका शूरवीर सेनले गोरखाली सेनाको मुकाबिला गर्न सकेनन् र सपरिवार ब्रिटिस भारतको मधुवनीतिर भागे ।[१२]

## ५. पाल्पा नेपालमा गाभेपछि देखापरेका समस्याहरू

नेपालको एकीकरण अभियानलाई पूर्ण सफल बनाउन पश्चिमी अभियान पूरा गर्न आवश्यक थियो । तर सो अभियान सञ्चालन गर्न विशेष नीति अवलम्बन गर्नु पर्दथ्यो । त्यसकारण बहादुर शाहले बाइसी, चौबीसी राज्यहरूलाई सकभर फुटाल्ने, आफूसँग मिल्न आउने राज्यहरूको संरक्षण गर्ने र आत्मसमर्पण नगर्ने राज्यहरूउपर मात्र आक्रमण गर्ने नीति तय गरेका थिए ।[१३] पृथ्वीनारायण शाहको समयमा पनि मित्र शक्तिप्रति राम्रो ब्यबहार गरिएको थियो । नेपालको पूर्वी अभियानका बेला पूर्वी तराइको विषयमा विवाद उत्पन्न भएपछि नव निर्मित नेपालमा कुनै किसिमको गडबडी नहोस् भनेर अंग्रेजसँग सम्झौता गरिएको थियो ।[१४] पूर्वजहरूका त्यस प्रकारका नीतिहरूको उल्लंघन गरी मित्र शक्तिको रूपमा रहेको पाल्पा राज्यलाई छलकपट र षडयन्त्रद्वारा कब्जा गरी नेपालमा गाभेपछि त्यसको असरले विभिन्न किसिमका समस्याहरू उत्पन्न भए जसको वर्णन यहाँ गरिन्छ ।

### (क) रणबहादुर शाहको हत्या हुनु

रणबहादुर शाह बनारसबाट फर्केपछि नेपालको दरबारमा अनेकौं किसिमका तिगडमहरू हुन थाले । उनलाई बनारसबाट नेपाल झिकाउन सहयोग नगर्ने सबै भाइभारदारहरूलाई किनारा लगाउने योजना बन्न थाल्यो । सो योजनाअनुसार सर्वप्रथम शेरबहादुर शाहीलाई दरबारबाट बाहिर पठाउन आवश्यक थियो । त्यसकारण उनलाई

गढवालतिरको युद्धमा खटाइयो तर शेरबहादुरले त्यो कुरा इन्कार गरेपछि उनीमाथि थप आशंका गर्न थालियो ।[१५]

त्यसपछि वि.सं. १८६३ वैशाख शुदी १४ मा त्रिभुवन खवासलाई पक्रेर खेरखार गर्न उनकै घरमा सभा डाकिएको थियो । त्यस सभामा उनलाई शेरबहादुर शाहीसँग मिलेर रणबहादुर शाह र उनका उत्तराधिकारीहरूलाई खतम गरी पृथ्वीपाल सेनलाई राजा बनाउने योजना बनाएको, राजढुकुटीबाट अठारहजार मासेर रणबहादुर शाहलाई बनारसमै नजरबन्द गर्ने प्रयास गरेको र अंग्रेजहरूसँग सन्धि गरी कीर्तिपुरमा कोठी खोल्न दिएको भन्ने आरोप लगाइएको थियो । त्यस सभामा आफूलाई पनि दोषी ठहराउने हुन् कि भन्ने आशंका शेरबहादुरलाई लागेको थियो । त्यसकारण उनले त्रिभुवनलाई लाग्ने दोष आफूलाई पनि लाग्ने र सजाय भोग्नु पर्ने हो कि ? भन्ने प्रश्न गर्दा रणबहादुर शाहले दोषी जति सबैलाई कारबाही हुने आशय ब्यक्त गरे । आफू सजायको भागी हुने संकेत पाएपछि उनले रणबहादुर शाह बनारसबाट फर्कंदा थानकोटमा आफूले माफी पाएको कुरा सम्झाए तर त्यो सभामा सो कुराको कुनै सुनुवाइ भएन । त्यसपछि उनको मनमा झन् शंका उत्पन्न भयो र पृथ्वीपाल सेनलाई त अनाहकमा थुनेका छन् भने आफूलाई के बाँकी राख्लान् र ? भन्ने निश्चय गरी तत्काल म्यानबाट तरवार झिकी रणबहादुर शाहमाथि प्रहार गरे ।[१६]

### (ख) सेनवंशको विनास हुनु

पृथ्वीपाल सेनलाई थुनामा राखी पाल्पाउपर कब्जा जमाउन काजी दलभञ्जन पाँडे र काजी अमरसिंह थापाको नेतृत्वमा गोरखाली फौज पाल्पातिर रवाना भयो । उक्त फौज वि.सं. १८६१ जेठ २० गते साँझपख एकाएक श्रीनगरमा रहेको दरबार घेर्न पुगेपछि पाल्पाको सुरक्षार्थ बसेका युवराज रत्न सेन, उनकी कान्छी मुमा परमावती, युवराज्ञी पद्मावती, चौतरिया सुरवीर सेन, दिवान समरबहादुर सेन, दिवान कनकसिंह तिवारी, गुरु, पुरोहित र अन्य थुप्रै मानिसहरू हतपत गरी दरबार छाडेर लुक्दैछिप्दै ब्रिटिस भारतको मधुवनी निचरौल पुगे ।[१७] गोरखाली सेनाले दरबार घेरेको र युवराज रत्न सेनका साथमा भएका मानिसहरू दक्षिणतिर लागेको थाहा पाएपछि साँझको सन्ध्या पूजामा बसेकी पृथ्वीपाल सेनकी जेठी रानी परमेश्वरी पनि आफ्नो साथमा भएका सात वर्षका नाती वीरवल र बाँकी रहेका पुजारी, सेवक, सुसारे र आफन्तहरूका साथ लुक्दैछिप्दै जङ्गलको बाटो पश्चिमतिर लागिन् । परमेश्वरीका साथमा भएका मानिसहरूले सेनवंशको

विनास गर्ने सिलसिलामा गोरखालीहरूले वीरवलको पनि हत्या गर्न सक्ने आशंका गरेर उनलाई लुकाइछिपाइ गुल्मीको पुरकोट पुऱ्याएका थिए । त्यहाँ उनी अलप भई बसेको हुनाले 'ओलप' भनेर परिचित भएका थिए । त्यही ओलप भन्ने परिचय नै पछि उनको थर बन्न गयो र उनलाई बीरवल ओली भन्न थालियो । उनका वंशजहरूले आजकाल पनि आफ्नो थर 'सेन ओली' लेख्छन् ।[१८]

रणबहादुर शाहको हत्यापछि नेपालको दरबारमा खैलाबैला मच्चियो । बालनरसिंह कुँवरको हातबाट शेरबहादुर शाहीको हत्या भएपछि भीमसेन थापाले शक्ति आफ्नो हातमा लिइ विरोधीहरू मार्न थाले । पाल्पाका राजा पृथ्वीपाल सेन, उनका भाइ रणबहादुर सेन, अंगरक्षकहरू र महिला तथा केटाकेटीसमेत गरी १८ जना पाल्पालीहरूको पनि हत्या भयो ।[१९] त्यसपछि सेनवंशका सन्तानहरू गोरखालीहरूको डरले कोही भारततिर भागे भने कोही आफ्नो थर परिवर्तन गरी लुकीछिपी बस्न बाध्य भए ।

**(ग) नेपाल र कम्पनी सरकारबीच सीमा विवाद चर्कनु**

पाल्पा राज्यको सिमाना अवध राज्यसँग जोडिएकोले सीमा क्षेत्रका केही जग्गा नवावलाई तिरो तिर्ने गरी पाल्पाले भोगचलन गर्दैआएको थियो । बक्सरको युद्धपछि अवधमा अंग्रेजहरूको प्रभाव बढ्दै गएको थियो । नवाव आसफुद्दौलाको वि.सं.१८५४ (सन् १७९७) मा निधन भएपछि उनका छोरा वजीर अलीलाई अवध राज्यको उत्तराधिकारी घोषणा गर्ने कार्यलाई निष्फल पारेर आसफुद्दौलाका भाइ साहदत अलीलाई उत्तराधिकारी गराएपछि अंग्रेजहरू अवधमा आफ्नो कठपुतली शासक बनाउन सफल भएका थिए ।[२०] अवधमा आफ्नो नियन्त्रण कायम भएपछि अङ्ग्रेजहरूले नवावको अधिनका क्षेत्रमा पनि आफ्नो प्रभाव जमाउने प्रयास गर्न थाले । त्यसपछि पाल्पा राज्य नेपालमा गाभिएपछि बुटवलदेखि दक्षिणको समथर इलाकामा नेपाल वा अङ्ग्रेजमध्ये कसको नियन्त्रण हुने भन्ने विषयमा विवाद उत्पन्न भयो ।[२१]

नेपालमा पाल्पा राज्यको विलयपछि नेपाल र अंग्रेज इष्ट इण्डिया कम्पनीबीच पूर्वदेखि पश्चिमसम्म समानान्तर रूपमा सीमाना जोडिन पुग्यो । दुई राज्यका सीमाना जोडिन पुगेपछि थुप्रै ठाउँमा सीमा सम्बन्धी विवाद पनि उत्पन्न हुन गयो जसका कारण युद्ध अवश्यंभावी बन्न पुग्यो । यो कुरा बुझेका अङ्ग्रेजहरूले आफ्नो सेना नेपाली सेनासँग लड्न नसक्ने हुँदा त्यसकालागि नेपालीलाई नै प्रयोग गर्नु पर्दछ भन्ने नीति अवलम्बन गरेका थिए । 'फलामले फलाम काट्छ' भन्ने उक्तिलाई मनन गरेर नेपालको

पश्चिमी क्षेत्रका पराजित राजाहरू हिन्दुरका रामशरण र काँगडाका संसार चन्दलाई अङ्ग्रेजहरूले आफ्नो पक्षमा मिलाएका थिए । उनीहरूको सहयोगले कुमाउँ र गढवाल क्षेत्रका नौजवानहरूलाई अङ्ग्रेजी सेनामा भर्ती गरेर सिरमोर नामक रेजिमेन्ट स्थापना गरेका थिए । त्यो फौज नेपाल–अङ्ग्रेज युद्धका बेला देउथल र मलाउँमा नेपाली सेनाका विरुद्ध लडेको थियो ।[२२]

पञ्जावका राजा रणजित सिंहले उत्तर–पूर्वी पहाडी इलाकामा आफ्नो प्रभाव जमाउन चाहन्थे । गोर्खालीहरूले सो इलाकामा आक्रमण गरेपछि उनको इरादामा ठेस लागेको थियो । उता अंग्रेजहरूले पनि पञ्जावका राजा रणजित सिंह र गोरखाली फौजसँग एकैचोटी लड्न सकिँदैन भन्ने विचार गरेर दुई राज्यमध्ये एउटासँग मित्रता कायम गर्ने नीति लिएका थिए । नेपालसँग मित्रता कायम गर्ने योजना सफल नभएपछि अङ्ग्रेज र पञ्जावकाबीच वि.सं.१८६६ (सन् १८०९) मा अमृतसरको सन्धि भएको थियो ।[२३]

यसरी आफ्नो स्थिति मजबुत पारेपछि अङ्ग्रेजहरूले नेपालसँग सीमा सम्बन्धी विवाद उठाउन थाले । सो सीमा विवाद सुल्भाउन गठन भएको मेजर ब्रेड शा र कृष्ण पण्डितको सीमा कमिसन आफ्नो कार्यमा सफल हुन नसकेपछि अङ्ग्रेजले वि.सं. १८७० फागुन २७ (सन् १८१४ मार्च ११) मा बुटवल, स्यूराज र रौतहटका २२ गाउँ २५ दिनभित्र खाली गर्न अल्टिमेटम दियो । नेपालले सो धम्कीको कुनै वास्ता नगरेपछि वि.सं. १८७१ कार्त्तिक १७ (सन् १८१४ नवेम्बर १)मा अङ्ग्रेज गभर्नर लर्ड हेस्टिङले युद्धको घोषणा गरे ।[२४]

## ६. निष्कर्ष

बाइसी, चौबीसी र अनेकौं ससाना राज्यमा विभाजित नेपाललाई एकै सूत्रमा आवद्ध गर्नु निश्चय पनि कठिन कार्य थियो । कर्णाली प्रदेशका खस राजा हुन् वा पाल्पाका सेन कसैले पनि एक विशाल राज्यको निर्माण गरी त्यसलाई चीरस्थायी बनाउन सकेनन् । गोरखाका राजा पृथ्वीनारायण शाहले शुरु गरेको विशाल नेपाल निर्माण गर्ने कार्यलाई उनका उत्तराधिकारीहरूले पनि निरन्तरता दिए सो कार्य सराहनीय हो । तर नेपालको एकीकरण गर्दा मित्र शक्ति र पराजित राज्यहरूउपर जुन किसिमको व्यबहार गर्नुपर्दथ्यो त्यो बहादुर शाह पछिका शासकहरूमा देखिएन जसको फलस्वरुप पराजित राज्यका राजारजौटाहरू नेपालका विरूद्ध अङ्ग्रेजसँग मिल्न गए ।

नेपालको एकीकरण कार्य पूरा गर्न पाल्पा राज्य नेपालमा गाभ्न आवश्यक थियो तर पाल्पालाई नेपालमा विलय गराउँदा जे जस्तो किसिमको नीति अपनाइयो त्यो सही थिएन । त्यसको फलस्वरुप शूरवीर सेन र समरबहादुर सेन अंग्रेजसँग मिल्न गएकोले 'फुटाउ र शासन गर' भन्ने अङ्ग्रेजको नीति सफल भयो । पराजित राजारजौटाहरूलाई उचित स्थान दिन नसक्नुका कारण नै नेपाल–अङ्ग्रेज युद्धमा नेपालले आफूले आर्जेको भूभागको एकतिहाइ भूभाग गुमाउनु पऱ्यो ।

## टिप्पणी

१ टेकबहादुर श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रुपरेखा**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ. ३७–४४ ।

२ विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**,भाग १, चितवन : पदमा घिमिरे, वि.सं. २०४५, पृ. ३३–३९ ।

३ बाबुराम आचार्य, **श्री ५बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी**,भाग १, नेपाल : श्री ५ महाराजाधिराजका प्रेस सचिवालय, वि.सं. २०२४, पृ १–५८ ।

४ सूर्यमणि अधिकारी, **पश्चिम नेपालको खश अधिराज्य**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ.५८–६१ ।

५ नयराज पन्त र अन्य(सम्पा.), **श्री ५ पृथ्वीनारायण शाहको उपदेश**,खण्ड १ , ललितपुर : जगदम्बा प्रकाशन, वि.सं.२०२५–२०२८, पृ.३१६ ।

६ उही, पृ.३२१–३२३ ।

७ उही, पृ.३१७–३१८ ।

८ फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किङ्डम अफ नेपाल**, न्यू दिल्ली : एशियन एजुकेशन सर्विसेज, सन् १९८६, पृ.१७३ ।

९ महेशराज पन्त, "पाल्पा राज्यको नेपाल अधिराज्य र अवधसँग सम्बन्ध", **पूर्णिमा**, वर्ष ७, अङ्क १, पूर्णाङ्क २५, वि.सं.२०२८, पृ.४–८ ।

१० चित्तरञ्जन नेपाली, **श्री ५ रणबहादुर शाह**, काठमाडौं : श्रीमती मेरी राजभण्डारी, वि.सं. २०२०, पृ.२८ ।

११ देवीप्रसाद भण्डारी (सम्पा.),"ऐ.शि.बाबुराम आचार्यले रचना गर्नुभएको नेपालको संक्षिप्त इतिहास", **पूर्णिमा**, वर्ष १६ अङ्क ४, पूर्णाङ्क ६४, वि.सं. २०४१, पृ.८ ।

१२ उही ।

१३ दिनेशराज पन्त,"आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति", **पूर्णिमा**, वर्ष २, अङ्क २, पूर्णाङ्क ६, वि.सं.२०२२, पृ.५१–५५ ।

१४ बाबुराम आचार्य, **नेपालको संक्षिप्त वृत्तान्त**, काठमाडौं : प्रमोद शमशेर र नीरविक्रम '

प्यासी', वि.सं.२०२२, पृ.५७–५९ ।

१५ हेमिल्टन, **पूर्ववत्**, टि.नं.८ ,पृ.२५९–६० ।

१६ डी.आर.रेग्मी, **मोडर्न नेपाल**, भोलुम २, कलकत्ता : फर्मा के. एल.मुखोपाध्याय, सन् १९७५, पृ. १६४ ।

१७ हेमिल्टन, **पूर्ववत्**, टि.नं.८, पृ. १७७ ।

१८ सुब्रं सेन, **पालपाली सेन (पालपादेखि पुरकोटसम्म)**, काठमाडौं : खड्ग सेन ओली, वि.सं.२०५९, पृ.२३-२८ ।

१९ आचार्य, **पूर्ववत्**, टि.नं.१४, पृ. १२५ ।

२० महेशराज पन्त, "नेपालसँग वजीर अली काण्डको सम्बन्ध", **पूर्णिमा**, वर्ष ६, अङ्क ४, पूर्णाङ्क २४, वि.सं. २०२६, पृ.२६९ ।

२१ सुरेन्द्र के.सी., **नेपालको कुटनीतिक इतिहास**, ताप्लेजुङ : सविता प्रकाशन, वि.सं.२०४६, पृ.८२ ।

२२ कमलराजसिंह राठौर, **द ब्रिटिस एण्ड द ब्रेभ**, जयपुर : निराला पब्लिकेशन, सन् १९८५, पृ.३४–३५ ।

२३ के.सी.चौधरी, **एङ्गलो नेप्लीज रिलेशन्स फ्रम द अर्लिस्ट टाइम्स अफ ब्रिटिस रुल इन इण्डिया टिल द गोर्खा वार**, कलकत्ता : मोडर्न बुक एजेन्सी,सन् १९६०, पृ.१४५ ।

२४ असद हुसेन, **ब्रिटिस इण्डियाज रिलेशन्स विथ द किङ्डम अफ नेपाल**, लण्डन : जर्ज एलेन एण्ड अनविन लि., सन् १९७०, पृ. ३६ ।

# ५. प्रशासनिक एकाइको रूपमा पाल्पा गौँडा

## १. विषय प्रवेश

मध्यकालमा गण्डकी प्रदेशका चौबीसी राज्यमध्येको सबल राज्यका रूपमा मानिने पाल्पा राज्य पनि बृहत् नेपालमा गाभिएपछि यो नेपालको एक प्रशासनिक एकाइको रूपमा रहन गयो । यद्यपि पाल्पा नेपालको एक प्रशासनिक एकाइ मात्र थियो तापनि यो पश्चिम नेपालको जङ्गी, निजामती र न्याय प्रशासनको केन्द्र बनेको थियो । पाल्पा नेपालमा विलय भएपछि यसको स्वतन्त्र अस्तित्व नरहेतापनि यसको प्रभाव भने झन् बढेको थियो । यसलाई नेपालको पश्चिमी क्षेत्रको सैनिक गढ मानिने हुनाले पाल्पा गौँडा भनिन्थ्यो । अत : पाल्पा गौँडाको स्थापना कसरी भयो ? यो गौँडाको प्रशासनिक क्षेत्र के कति थियो भन्ने कुरा जिज्ञासाको विषय हो । त्यसकारण पाल्पा गौँडा नेपालको प्रशासनिक एकाइको रूपमा रहँदा यसको अधिनमा कुनकुन भूभाग थियो भन्ने विषयमा चर्चा गर्ने उद्देश्यले यो लेख तयार गरिएको छ ।

## २. पाल्पा गौँडाको स्थापना

पाल्पा राज्यको पतनपछि शुरुमा यो क्षेत्र नेपालको एक सानो प्रशासनिक एकाइको रूपमा रहन गएको कुरा वि.सं. १८६२ वैशाखमा काजी दलभञ्जन पाँडे समेतका भारदारहरूको नाममा जारी भएको एक सवालबाट ज्ञात हुन्छ । उक्त सवालमा ती भारदारहरूलाई पाल्पा, गुल्मी, अर्घा र खाँची इलाकामा पर्ने जग्गा जाँच गर्ने आदेश दिइएको छ ।[१] केही वर्षपछि पाल्पा नेपालको सम्पूर्ण पश्चिमी क्षेत्र अर्थात् कालीगण्डकीदेखि पश्चिम कुमाउँ-गढवालसम्मको इलाकाको प्रशासनिक केन्द्रको रूपमा रहेको देखिन्छ । यसको उदाहरणका लागि वि.सं. १८६७ मा नालापानीबाट अमृतसिंह थापाले मुख्तियार भीमसेन थापालाई पठाएको पत्रलाई लिन सकिन्छ । यो पत्रमा नेपालको पश्चिममा पाल्पाका तैनाथवाला काजी अमरसिंह थापामार्फत सैनिक पठाउने गरेको कुरा उल्लेख छ ।[२] त्यस्तै हस्तदल शाहीले डोटीबाट पाल्पाका प्रशासक काजी अमरसिंह थापालाई पठाएको एक पत्रमा डोटी इलाकाको हिसाब किताबको तेरिज र नेपालको पश्चिमी क्षेत्रको सैनिक गतिविधि बारे जानकारी गराइएको छ । यसैगरी पाल्पाबाट उजिरसिंह थापा समेतका सेनापतिहरूले वि.सं. १८७२ वैशाखमा जनरल भीमसेन थापा र काजी रणध्वज थापालाई काठमाडौंमा पठाएको एक पत्रमा नेपालको पश्चिमी क्षेत्रका सैनिकहरूको खटनपटन सम्बन्धमा राय-सल्लाह दिइएको छ ।[३] यसरी

पाल्पा नेपालमा विलय भएदेखि नै नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा रहेको देखिन्छ तापनि त्यतिखेर पाल्पाका प्रशासकलाई कुन कुन क्षेत्रसम्मको प्रशासन हेर्ने अधिकार दिइएको थियो भन्ने कुरा स्पष्ट छैन।

राणाशासनकालमा वि.सं.१९०६ मा कर्णेल खड्गबहादुर कुँवर राणालाई पाल्पा मुहुडाको अख्तियारी दिंदा स्पष्ट रूपमा कालीनदीदेखि पश्चिम महाकाली नदीदेखि पूर्वका मधेश, पहाड, रुकुम, थाकसम्मको भौगोलिक क्षेत्रमा पर्ने खानी, टक्सार, तहबिल, अदालतका कारिन्दाको रेखदेख गर्ने र जङ्गी बन्दोबस्तको काम गर्ने अधिकार दिइएको छ। उक्त अख्तियारी पत्रको व्यहोरा यस्तो छ–

> "आगे श्रीमद्राजकुमार कुमारात्मज कर्णेल षड्ग बहादुर कुवर राणाजि के कालि पश्चिम महाकाली पुर्व मध्येस पाहाड दरोवस्त (बन्दोबस्त) मुलुकको षानि टक्सार रुगुम थाक गैह्र औ गोर्षाका थरघरका पजनिमा गोर्षाका सुवा षर्दारको पजनि आहाबाट होला अरू थरघरको पजनि पालपा तहबिल अदालतका कारिन्दा समेत श्री वरष पल्टन तैनाथ राषि पाल्पा मुहुडाको अषतियारि गरि दिञ्‍युं ..." [४]

राणाशासनकालमा निजामती तथा जङ्गी बन्दोबस्त सम्बन्धी काम गर्ने स्थानीय निकायको सदरमुकामलाई पहाडमा 'गौंडा', मधेशमा 'गोश्वारा' एवं भित्री मधेशमा 'गढी' भनिन्थ्यो।[५] त्यतिखेर नेपालको पूर्वी पहाडमा धनकुटा र पश्चिमी पहाडमा पाल्पा गौंडा मुख्य मानिन्थे। राणा शासनकाल भन्दा पहिलेका कतिपय अभिलेखहरूमा पाल्पाका प्रशासकहरूलाई प्रशासन सञ्चालन सम्बन्धी अख्तियारी दिंदा पाल्पालाई 'मुहुडा' भनिएको छ।[६] वि.सं. १८९७ मा जारी गरिएको एक रुक्कामा भने 'मुहुडा' र 'गौंडा' लाई समान अर्थमा प्रयोग गरिएको छ। उक्त रुक्कामा भएको व्यहोरा यस्तो छः

"...मुहुडा मुहुडामा रहन्या भारादारहरूका तैनाथ बक्सियाका पल्टन्कंपनीहरूमा मानिस भर्ना नभै षानगी षाली रहन गयाका छन्भन्या श्रावरामैन्हाका सक्रांतिमा हाम्रा हजूरमा आई पुगन्यागरि येस बिहोराले येति षानगी षाली रह्याका छन् भन्या अर्जि लेषी चहाइ पठाउनु र उसै भारादारका आहा रह्याका भाई छोरा जो छन् उन्हेरूलाई राषी कोही आहाबाट भर्ति भै आउनन् कसैलाई गौंडैका भारदारहरूले भर्ति गर्नु ..." [७]

राणा शासनकालमा भने पाल्पालाई स्पष्ट रूपमा 'पाल्पा गौंडा' भनिएको छ । यसको उदाहरणको लागि वि.सं. १९६४ मा पाल्पाका प्रशासक मेजर जनरल शेर शमशेरको नाममा भएको रुक्का आदेशलाई लिन सकिन्छ । उक्त आदेशमा यस्तो लेखिएको छ –

"आगे मद्राज कुमार कुमारात्मज श्री मेजर सेर सम्सेर जङ्ग राणा बाहादुर के यथोचीत उप्रान्त पाल्पा गौंडाको काम काज अघी ५९ साल चैत्र वदी ३ रोज २ मा भयाका

सवाल वमोजीम भै आयाकोमा अब तिमीले सो गौंडाको कामकाज गर्नालाई हाल तीम्रा नाउमा तपसीलमा लेषीया बमोजीम अर्को भयाका सबाल गरिबक्स्याको छ

सो बमोजीम नीमकको सोझो चीताइ सोही सवाल र जङ्गी ऐनमा स्मेत फरक नपारी कामकाज गर्ने काम गर..." [८]

विद्वानहरूको भनाइअनुसार शाब्दिक अर्थमा किल्ला, गढ वा दुर्गलाई गौंडा भनिन्छ तर प्रशासनिक दृष्टिले हेर्दा बृहत् भौगोलिक क्षेत्रमा विभाजित जिल्लाहरूको प्रशासनिक केन्द्र जहाँ प्रधानमन्त्रीका नजिकका नातेदारहरूले प्रशासन चलाउँदथे त्यसलाई गौंडा भनिन्थ्यो ।[९] एड्रियान सेभरको भनाइ अनुसार राणा शासनकालमा 'गौंडा' भन्नाले गभर्नरको मातहतमा रहेको जिल्ला प्रशासनको बृहत् एकाई भन्ने बुझिन्थ्यो जसको अधिनमा थुप्रै जिल्ला र राज्य शासित इलाकाहरू पर्दथे ।[१०] राजनीतिक शब्दकोशमा पनि 'गौंडा' को अर्थ यसरी दिइएको छ-'गढी निर्माण भएको ठाउँलाई गौंडा भनिन्थ्यो । यस्ता गौंडाहरू नेपालमा केही अघिसम्म सरकारी निकायको रूपमा रहेका थिए । यसले राणाकालसम्म गोश्वारासरहको काम पहाडी इलाकामा गर्ने गर्दथ्यो । यस्ता गौंडाहरूमा डिट्ठा, विचारीजस्ता अधिकारहिरू रहने गर्दथे भने जनताका तर्फबाट त्यहाँका प्रतिनिधिलाई समेत यस्ता गौंडाहरूमा स्थान दिइने गरिन्थ्यो । यस्ता गौंडाहरूमा धनकुटा गौंडा, पाल्पा गौंडामा राणा परिवारकै सदस्य प्रमुख भएर जाने गरेकाले यिनीहरूको हैसियत पनि माथिल्लो थियो । यो राजनीति र शक्तिको केन्द्र र प्रशासनिक विकेन्द्रीकरणको केन्द्रका रूपमा रहने महत्वपूर्ण सरकारी निकाय हो ।'[११]

पाल्पा नेपालमा गाभिनासाथ पश्चिमी क्षेत्रको सैनिक र प्रशासनिक केन्द्रको रूपमा रहेको र विस्तारै सो क्षेत्रको मुख्य गौंडाको रूपमा स्थापित भएको थियो । राणा शासनकाल पूर्व सैनिक र प्रशासनिक केन्द्रको रूपमा रहेको पाल्पालाई 'मुहुडा' भनिन्थ्यो र राणा शासनकालमा 'गौंडा' भन्न थालिएको थियो तापनि वि.सं. १८६१ देखि नै पाल्पा नेपालको पश्चिमी क्षेत्रको गौंडाको रूपमा स्थापित थियो ।

## ३. पाल्पा गौंडा अन्तर्गतको भौगोलिक क्षेत्र

पाल्पा राज्यको पतनपछि सो राज्य अन्तर्गतको भौगोलिक क्षेत्र नेपालको एक प्रशासनिक एकाइमा परिणत भएको र उक्त क्षेत्रलाई 'पाल्पा गौंडा' भन्न थालिएको कुरा माथिका प्रसंगमा उल्लेख भइसक्यो । एक सबल राज्यको रूपमा रहेको पाल्पा राज्य उपर नियन्त्रण कायम गर्न यस क्षेत्रमा ठूलो सैनिक शक्ति तैनाथ गरिएको तथा नेपाल-अङ्ग्रेज युद्धको बेला पाल्पालाई नै पश्चिम नेपालको सैनिक केन्द्र बनाइएकोले 'पाल्पा गौंडा' को भौगोलिक क्षेत्र र प्रशासनिक क्षेत्राधिकार पाल्पा राज्यकोभन्दा बढी भएको कुरा समेत माथिको चर्चाबाट स्पष्ट हुन्छ । यो गौंडाको अधिनमा रहेको भौगोलिक क्षेत्र बेलाबखतमा बढ्ने र घट्ने गरेको देखिन्छ ।

राणा शासनकालमा (वि.सं.१९०३–२००७) जङ्गी तथा निजामती बन्दोबस्त र नेपालको प्रशासनिक विभाजनमा पहिलेभन्दा केही हदसम्म आधुनिक तथा वैज्ञानिक प्रणाली अपनाइएको हुनाले उक्त समयको पाल्पा गौंडाको भौगोलिक क्षेत्र बढी स्पष्ट छ तर त्यसभन्दा पूर्वको (वि.सं.१८६१–१९०३) सो गौंडाको प्रशासनिक क्षेत्र के कति थियो भन्ने कुरा स्पष्ट छैन । पाल्पा गौंडाको भौगोलिक क्षेत्रमा बेलाबखतमा भएको फेरबदललाई दृष्टिगत गर्दा यसको अधिनमा निम्न अनुसारको भूभाग भएको देखिन्छ ।

### (१) वि.सं. १८६१ देखि १९३३ सम्म

यद्यपि राणा शासनकाल पूर्व नेपाललाई के कति प्रशासनिक क्षेत्रमा विभाजन गरिएको थियो र त्यसको भौगोलिक क्षेत्र के कसरी छुट्याइएको थियो भन्ने कुरा स्पष्ट छैन तापनि भीमसेन थापाको समयमा पुराना राज्यहरूलाई नै जिल्लाको रूपमा कायम राखी प्रशासनिक क्षेत्र विभाजन गरिएको कुरा विद्वानहरूले उल्लेख गरेका छन् ।[११] पाल्पा राज्य नेपालमा विलय भएपछि शुरुमा यसको प्रशासनिक क्षेत्र पाल्पा, गुल्मी, अर्घा र खाँची राज्यले चर्चेको भू-भाग मात्र थियो भन्ने कुरा वि.सं. १८६२ साल वैशाखमा काजी दलभञ्जन पाँडे समेतका नाममा उक्त क्षेत्रका जग्गा जाँच गर्न जारी

गरिएको सवालबाट ज्ञात हुन्छ।[१३] पाल्पा राज्यको अन्तिम समयतिरको भौगोलिक क्षेत्र पनि उपर्युक्त राज्यहरूले चर्चेको क्षेत्र अर्थात् पूर्वमा देवघाट, पश्चिममा प्यूठान, उत्तरमा कालीगण्डकी र दक्षिणमा अवध राज्यको उत्तरी सीमातक कायम थियो।[१४]

नेपाल-अङ्ग्रेज युद्धताक नेपालको पश्चिमतिरको जङ्गी बन्दोबस्तको काम पाल्पाको मातहतबाट गर्न थालिएपछि यो इलाका सो क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा बिकसित भएको देखिन्छ। नेपालको पश्चिमी क्षेत्रमा पाल्पाका प्रशासकद्वारा रेखदेख हुन्थ्यो भन्ने कुरा माथि चर्चा गरिसकियो। साथै त्यतिखेर पाल्पाको उत्तरतिरको प्रशासनिक क्षेत्र पर्वत राज्यले चर्चेको भू-भाग समेत थियो भन्ने कुरा वि.सं. १८७१ साल जेठमा जनरल अमरसिंह थापाले बाग्लुङ चौरकी कालिका देवीको पूजा व्यवस्था बारे दिएको निर्देशन पत्रबाट अवगत हुन्छ।[१५]

नेपाल-अङ्ग्रेज युद्धपछि नेपालले मेचीदेखि पूर्व, महाकालीदेखि पश्चिम र तराईको धेरैजसो मैदानी इलाका गुमायो। मेचीदेखि राप्तीसम्मको तराई इलाकामा नेपालका भारदारहरूका जागिर जग्गा समेत परेकाले त्यसको क्षतिपूर्तिको लागि अङ्ग्रेज इष्ट इण्डिया कम्पनीले प्रतिवर्ष दुई लाख रुपैयाँ दिने कुरा सुगौली सन्धिमा उल्लेख गरिएको थियो।[१६] तर उक्त क्षेत्रबाट सो आम्दानी हुन नसक्ने देखेपछि कम्पनी सरकारले त्यो क्षेत्र नेपाललाई नै फिर्ता दिने निधो गऱ्यो र वि.सं. १८७४ (सन् १८१७) मा सिमाङ्कन कार्य शुरु गरी दुई वर्षमा सो काम सम्पन्न गऱ्यो।[१७] उक्त सिमाकनपछि पाल्पा गौंडाको दक्षिणतिरको सिमाना रुमन्देइ (रुपन्देही) मर्चवारसम्म कायम हुन गएको कुरा एक अभिलेखबाट ज्ञात हुन्छ।[१८] त्यसपछि सो गौंडाको सिमाना पूर्वमा देवघाट, पश्चिममा प्यूठान, उत्तरमा मुस्ताङ र दक्षिणमा मर्चवारसम्म फैलिन पुग्यो।

जङ्गबहादुर राणा वि.सं. १९०३ मा नेपालका हर्ताकर्ता भएपछि उनले जहानिया राणा शासन शुरु गरे। उनको पालामा वि.सं. १९०६ मा खड्गबहादुर कुँवरलाई पाल्पा गौंडाको अख्तियारी दिंदा कालीगण्डकीदेखि पश्चिम महाकालीदेखि पूर्व, उत्तरमा थाकखोला र दक्षिणमा मधेशसम्मको कामकाज, रेखदेख गर्ने जिम्मेवारी दिइएको थियो।[१९] त्यतिखेर राप्तीदेखि पश्चिमको तराई इलाका भने अङ्ग्रेजहरूको अधिनमा थियो। भारतमा वि.सं. १९१४ (सन् १८५७) मा अङ्ग्रेजहरूका विरूद्ध बिद्रोह चलेपछि त्यसलाई साम्य पार्न अङ्ग्रेजहरूले नेपालको सैनिक सहयोग लिएका थिए। उक्त कार्यको पारितोषिक स्वरुप कम्पनी सरकारले नेपाललाई महाकालीदेखि

राप्तीसम्मको मैदानी इलाका फिर्ता दिनुका साथै वि.सं. १९१७ (सन् १८६०) मा महाकालीदेखि गोरखपुरसम्मको नेपाल-भारत सिमाङ्कन कार्य सम्पन्न गरेको थियो ।[२०] त्यतिखेर नेपालले पश्चिमी तराईका बाँके, बर्दिया, कैलाली र कञ्चनपुर इलाका प्राप्त गरेको थियो जसलाई 'नयाँ मुलुक' भन्न थालियो ।[२१] त्यसपछि एकातिर नेपालको वर्तमान भौगोलिक क्षेत्र निश्चित हुन गयो भने अर्कोतिर पाल्पा गौंडाको प्रशासनिक क्षेत्रमा पनि केही घट्बढ् हुन गयो ।

(२) **वि.सं.१९३३ देखि २००९ सम्म**

तराईका जिल्लाहरूको सिमाना भारतसँग जोडिएको र ती क्षेत्रबाट मालपोत पनि बढी उठ्ने हुनाले धेरै समस्याहरू आइपर्दथे । त्यसकारण ती जिल्लामा सक्षम प्रशासकको आवश्यकता पर्दथ्यो तर धेरै जिल्लामा त्यस्ता व्यक्ति पठाउन सकिने स्थिति थिएन । अत : रणोद्दीपसिंहको समयमा तराईका धेरै जिल्लाहरू मिलाएर एकीकृत अड्डा स्थापना गरिएको थियो जसलाई 'गोश्वारा' भनिन्थ्यो ।[२२] ती गोश्वाराहरू हनुमान नगर, वीरगंज, तैलिहवा र नेपालगंज थिए जसमध्ये तौलिहवा अमिनी गोश्वारा अन्तर्गत बुटवल, पाल्ही र दाङ जिल्ला राखिएको थियोः ।[२३] रणोद्दीपसिंहको शासनकालमा तौलीहवा गोश्वारा स्थापना भएपछि पाल्पा गौंडाको मातहतमा रहेको बुटवल चारतप्पा पनि सो गोश्वारा अन्तर्गत पर्न गयो र पाल्पाको प्रशासनिक क्षेत्रको दक्षिणी भूभाग चुरे पहाडको घाँच अर्थात् पुरानो बुटवल बजारसम्म मात्र सीमित हुनगयो । किनकि बुटवल चारतप्पा अन्तर्गत पाल्ही (परासी), माझखण्ड (भैरहवा), खजहनी (तौलिहवा) र स्यूराज (बहादुरगंज) पर्दथे ।[२४] त्यसकारण रणोद्दीपसिंहको शासनकालमा पाल्पाको प्रशासक भई आउने भुपेन्द्रजंग राणा र अम्बरजंग राणालाई कालीगण्डकीदेखि पश्चिमका नौ जिल्लाको मात्र रेखदेख गर्ने अख्तियारी दिइएको थियो ।[२५] त्यतिखेर पाल्पा तहसिल अन्तर्गत पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट, धुर्कोट, गलकोट र पर्वत गरी नौ जिल्ला पर्दथे भन्ने विद्वानहरूको कथन छ ।[२६]

प्रशासन यन्त्रलाई सर्वसुलभ बनाउने उद्देश्यले वीर शमशेरको पालामा वि.सं १९५२ (सन् १८९५) मा नेपाललाई ३५ जिल्लामा विभाजन गरिएको थियो । त्यतिखेर काठमाडौं उपत्यका भित्रका जिल्लालाई केन्द्रीय प्रशासन अन्तर्गत राखिएको थियो भने पहाडी इलाकालाई तहसिल र तराई इलाकालाई जिल्ला भन्ने प्रचलन थियो । पहाडी इलाकामा रहेका तहसिलभित्र स-साना धेरै जिल्ला हुन्थे ।[२७] त्यतिखेर गरिएको

प्रशासनिक विभाजन यस प्रकार थियो-

पहाडतर्फका तहसिलहरू :

(१) पूर्वी पहाड : पूर्व नं. १, २, ३, ४, धनकुटा र इलाम ।

(२) पश्चिम पहाड : पश्चिम नं. १, २, ३, ४, पाल्पा, गुल्मी, बाग्लुङ, सल्यान, प्यूठान, दैलेख, जुम्ला, डोटी, बैतडी र डडेलधुरा ।

तराईका जिल्लाहरू :

(१) भित्री मधेश : उदयपुर, चिसापानी, दाङ-देउखुरी ।

(२) पूर्वी मधेश : वीरगंज, महोत्तरी, सप्तरी, विराटनगर, झापा ।

(३) पश्चिमी मधेश :पाल्ही-माझखण्ड, स्यूराज-खजहनी,बाँके-बर्दिया,कैलाली-कञ्चनपुर ।[२८]

यद्यपि नेपाललाई विभिन्न जिल्लामा विभक्त गर्नुको उद्देश्य सर्वसुलभ प्रशासन सञ्चालन गर्ने भनिएको थियो,तापनि उक्त विभाजन भौगोलिक अवस्थिति र ऐतिहासिक परम्परामा मात्र आधारित हुनाले सबै जिल्लाको जनसङ्ख्या र क्षेत्रफलमा एकरूपता थिएन ।[२९]

यस अघि पाल्पा तहसिल अन्तर्गत रहेका नौ जिल्लालाई यो विभाजनमा पाल्पा, गुल्मी र बाग्लुङ गरी तीन जिल्लाभित्र राखिएको थियो जुन यस प्रकार छ-

(१) पाल्पा : पाल्पा

(२) गुल्मी : गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट र धुर्कोट

(३) बाग्लुङ : पर्वत र गलकोट ।[३०]

हुनत यो प्रशासनिक विभाजनबाट यस क्षेत्रमा अगलअगल तीन जिल्ला कायम हुन आएका थिए तर तीनवटै जिल्लाको जङ्गी तथा निजामति बन्दोवस्त सम्बन्धी सम्पूर्ण काम पाल्पा गौंडाबाट नै हुन्थ्यो ।[३१] किनकि गुल्मीको वामी टकसारमा माल अड्डा मात्र राखिएको थियो जसलाई गुल्मी समेत आठ जिल्ला माल भनिन्थ्यो भने बाग्लुङमा छोटी गौंडा र अदालत मात्र स्थापना गरिएको थियो । ती अड्डाले आफ्नो मातहतमा रहेका आठ जिल्लाको राजश्व सङ्कलन र न्याय प्रशासन सम्बन्धी काम मात्र गर्दथे ।[३२]

**(३) वि.सं. २००९ देखि २०२२ सम्म**

एक शताब्दीभन्दा लामो जहानिया र निरंकुश राणा शासनका विरुद्ध चलेको विद्रोह वि.सं. २००७ सालमा सफल भयो । त्यसपछि नेपालको केन्द्रीय शासन

व्यवस्थामा परिवर्तन भयो जसको फलस्वरूप स्थानीय प्रशासनमा पनि केही फेरबदल भयो । पाल्पाको अधिनमा रहेका गुल्मी र बाग्लुङ अलगै स्वतन्त्र जिल्लाको रूपमा रहन थाले । राणा शासनकालमा यी दुई जिल्लाको प्रशासन पाल्पा गौंडाको मातहतमा चल्दथ्यो । यद्यपि बाग्लुङमा वि.सं. १९८५ मा छोटी गौंडा स्थापना गरिएको थियो तापनि यसले आठ जिल्लाको जङ्गी तथा निजामती बन्दोबस्तको काम पाल्पा गौंडाको मातहतमा रहेर गर्नुपर्दथ्यो ।[३३] वि.सं. २००९ सालमा गुल्मीमा पनि छुट्टै छोटी गौंडा स्थापना भयो । यस सम्बन्धमा नेपाल गजेटमा यस्तो भनिएको छ -

> "पाल्पा गौंडा मातहत ८ जिल्लाको निमित्त बाग्लुङ छोटी खडा भएकोमा पर्वत गलकोट २ जिल्लालाई मात्र पाहिक पर्ने हुनाले गुल्मी, धुर्कोट, मुसिकोट, अर्घा, खाँचा, इश्मा समेत छ जिल्लाको बीचमा नयाँ गौंडा खडा गरी पाऊँ भन्ने प्रतिनिधि दयानिधि शर्मासमेतहरूको माग बमोजिम प्रतिनिधि र बडा हाकिमको भनाइ अनुसार गुल्मी तँघासमा अड्डा कायम गर्ने गरी गुल्मी छोटी गौंडा खडा भएको छ सो छोटी गौंडाको बडा हाकिम गुल्मी भार्से निवासी क.प. गिरिप्रसाद बुढाथोकी मगर नियुक्त हुनु भएको छ ।"[३४]

वि.सं. २००७ सालको राजनैतिक परिवर्तनपछि प्रशासनलाई सर्वसुलभ बनाउनका लागि जिल्ला जिल्लामा केही नयाँ अड्डा खोल्ने, पुन : संरचना गर्ने र जनसङ्ख्या मालपोत एवं ऐतिहासिक महत्त्व समेतको विचार गरी जिल्लाहरूलाई तीन श्रेणीमा विभाजन गर्ने काम भएको थियो । उक्त वर्गीकरण अनुसार पाल्पालाई 'क' र गुल्मी तथा बाग्लुङलाई 'ग' श्रेणीमा राखिएको थियो ।[३५] गुल्मी र बाग्लुङ जिल्लाको छुट्टै अस्तित्व कायम भएपछि पाल्पा गौंडाको भौगोलिक क्षेत्र पहिलेकोभन्दा निकै नै साँघुरिन गइ पूर्वमा देवघाट, पश्चिममा रिडी, उत्तरमा कालीगण्डकी र दक्षिणमा चुरे पहाडको घाँचको पुरानो बटौली बजारसम्म कायम हुन पुग्यो ।

वि.सं. २०१७ सालमा बुटवल-खस्यौली नगरपंचायतको स्थापना भएपछि त्यसको सिमाना पूर्वमा नकासीडाँडा, पश्चिममा चुरेडाँडाको शीर, उत्तरमा चिडियाखोला र दक्षिणमा जोगीकुटी भनेर तोकिएको थियो ।[३६] वि.सं. २०१८ सालमा नेपाललाई १४ अञ्चल र ७५ विकास जिल्लामा बाँड्दा पाल्ही-माझखण्डलाई छुट्याएर नवलपरासी र रुपन्देही जिल्ला कायम गरिएको थियो ।[३७] बुटवल नगरपंचायत रुपन्देही जिल्लामा

परेपछि पाल्पाको दक्षिणी सिमाना चुरे डाँडाको शीर र चिडियाखोला कायम हुन गयो। वि.सं. २०३२ सालमा जिल्लाहरूका सिमाना हेरफेर गर्ने सिलसिलामा पूर्वी पाल्पाको वाकामलाङदेखि पूर्वका एघार गाउँ पंचायत नवलपरासी जिल्लामा गाभिएको थियो भने नवलपरासी, रुपन्देही र कपिलवस्तुसँग जोडिएको पाल्पाको दक्षिणी सिमाना पनि ढलो निर्धारण गरिएको थियो।[३८] त्यसअनुसार वर्तमान पाल्पा जिल्लाको भौगोलिक क्षेत्र कायम भएको छ। वि.सं. २०२२ सालमा स्थानीय प्रशासन व्यवस्था ऐन जारी गरिएपछि गढी, गौँडा, गोश्वारा र मजिस्ट्रेट अड्डाहरू खारेज गरियो।[३९] त्यसपछि पाल्पा गौँडाको अस्तित्व पनि समाप्त भयो र पाल्पा लुम्बिनी अञ्चलका छ जिल्लामध्ये एक जिल्लाको रूपमा रहन गयो।

## ४. निष्कर्ष

मध्यकालमा गण्डकी प्रदेशमा स्थापना भएका चौबीसी राज्यहरू मध्ये पाल्पा पनि एक स्वतन्त्र राज्य थियो। नेपालको एकीकरणको सिलसिलामा यो राज्य नेपालमा विलय भयो। पाल्पा राज्य आर्थिक र सैनिक दृष्टिकोणले सवल हुनुका साथै यो राज्यको अवधका नवावसँग पनि राम्रो सम्बन्ध हुनाले यो राज्य दखल गर्न यहाँ ठूलो सङ्ख्यामा सैनिक तैनाथ गरिएको थियो। यो राज्य नेपालमा विलय भएदेखि नै यस राज्य अन्तर्गतका बुटवल र स्यूराजको विषयमा विवाद उठेकोले नेपाल र अङ्ग्रेजकाबीच युद्ध भयो। त्यतिबेला पनि पाल्पाको प्रशासनिक क्षेत्रमा ठूलो सङ्ख्यामा सैनिक तैनाथ गर्नु पर्ने जरुरत पर्‍यो। नेपाल-अङ्ग्रेज युद्धको समाप्तीपछि नेपालको प्रशासनिक व्यवस्था मिलाउने सिलसिलामा सामरिक दृष्टिकोणले महत्त्वपूर्ण जिल्लामा बढी सङ्ख्यामा सैनिक तैनाथ गरियो र त्यस्ता जिल्लालाई 'गौँडा' भन्न थालियो। पाल्पा राज्य नेपालमा गाभ्दादेखि नै सो राज्यको प्रशासनिक क्षेत्र सामरिक दृष्टिकोणले महत्त्वपूर्ण मानिएकोले यसलाई पनि 'गौँडा' भन्न थालियो। यसरी 'पाल्पा गौँडा' को स्थापना भयो।

नेपाल-अङ्ग्रेज युद्धका बेलादेखि पाल्पा गौँडा नेपालको पश्चिमी क्षेत्रको सैनिक केन्द्र थियो तापनि वास्तविक रूपमा यो गौँडाको मातहतमा जङ्गी तथा निजामती प्रशासन चलेको भौगोलिक क्षेत्र कालीगण्डकीदेखि पश्चिमका पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट, धुर्कोट, गलकोट र पर्वतसमेतका पुराना नौ राज्यले चर्चेको भू-भाग थियो। उक्त भू-भाग पनि बेलावखतमा घटबढ भइरहन्थ्यो। पाल्पा गौँडा अन्तर्गतको भौगोलिक क्षेत्रको घट्बढ मुख्यतः तीन चरणमा भएको देखिन्छ।

(१) पहिलो चरण (वि.सं. १८६१-१९३३) : यो समयावधिमा पाल्पा गौंडाको मातहतमा पाल्पा, गुल्मी, अर्घा, खाँची, मुसिकोट, इश्मा, धुर्कोट, गलकोट र पर्वत गरी पुराना नौ राज्यले चर्चेको भू-भाग पर्दथ्यो । त्यतिखेर यो गौंडाको सिमाना उत्तर-पूर्वमा मोदीखोलाहुँदै कालीगण्डकी, पूर्वमा देवघाट, पश्चिममा जुम्ला, सल्यान, प्यूठान, उत्तरमा मुस्ताङ र दक्षिणमा नौतनवा, रुपन्देही, मर्चवारसम्म फैलिएको थियो ।

(२) दोश्रो चरण (वि.सं. १९३४-२००९) : यो चरणमा पाल्पाको दक्षिणतिरको मैदानी इलाकामा रणोद्दीपसिंहको समयमा तौलिहवा गोश्वारा र वीरशमशेरको समयमा पाल्ही-माझखण्ड र स्यूराज-खजहनी नामका अलगै दुई जिल्ला स्थापना गरिएकोले पाल्पा गौंडाको मातहतमा तराईतिर पुरानो बटौली बजारसम्मको इलाका मात्र रहन गएको थियो भने पहाडमा कालीगण्डकीको उत्तर पूर्वको इलाकामा पश्चिम ४ नं. गोश्वारा स्थापना भएको थियो ।

(३) तेश्रो चरण (वि.सं. २००९-२०२२) : यस अवधिमा गुल्मी र बाग्लुङमा छुट्टाछुट्टै गौंडा स्थापना गरिएकोले पाल्पा गौंडाको भौगोलिक क्षेत्र पश्चिममा रिडीसम्म, उत्तरमा कालीगण्डकीसम्म, पूर्वमा देवघाटसम्म र दक्षिणमा चुरे पहाडको घाँचसम्म सीमित हुन पुगेको थियो । त्यसमा पनि वि.सं. २०१७ मा बुटवल नगरपंचायत गठन हुँदा त्यसको उत्तर-पश्चिमको सिमाना चिडिया खोला र चुरेपहाडको शीर भनी तोकिएको तथा वि.सं. २०१८ सालको जिल्ला विभाजन अनुसार सो नगरपंचायत रुपन्देही जिल्लामा पर्न गएकोले पाल्पाको दक्षिणी सिमाना चिडियाखोला र चुरेपहाडको शीरसम्म मात्र सिमित हुन गएको थियो ।

## टिप्पणी

[१] "पाल्पा, गुल्मी, अर्घा र खाँची राज्यमा जग्गा जाँच गर्नु भन्ने काजी दलभंजन पाँडे समेतका नाममा जारी भएको वि.सं. १८६२ वैशाख वदी १० को सवाल" माइक्रोफिल्म रिल नं. ई २३९२/१, पृ. ५६८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[२] धनबज्र बज्राचार्य र ज्ञानमणि नेपाल (सम्पा.), "प्रधानमन्त्री भीमसेन थापालाई अमृतसिंह थापाले पठाएको पत्र", **ऐतिहासिक पत्र संग्रह**, काठमाडौं : नेपाल सांस्कृतिक परिषद, वि.सं. २०१४, पृ. १०१-१०३ ।

[३] शंकरमान राजवंशी (सम्पा.), **शाहकालीन ऐतिहासिक चिट्ठीपत्र संग्रह**, भाग १, श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, वीर पुस्तकालय, वि.सं. २०२३, पृ. ११६-१९ र १७९-८१ ।

[४] कृष्णकान्त अधिकारी, **नेपाल अण्डर जंगबहादुर १८४६-१८७७**, भोलुम १, काठमाण्डू : बुकु, सन् १९८४, पृ. २६०-६१, परिशिष्ट १ : सी ।

[५] हेमनारायण अग्रवाल, **द एड्मिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल**, न्यू दिल्ली : विकास पब्लिशिङ हाउस प्रा.लि., सन् १९७६, पृ. ७७-७८ ।

[६] "वि.सं. १९०० मा चौतरिया गुरुप्रसाद शाह र खड्गविक्रम शाहलाई पाल्पा अड्डा मोहडाको अख्तियारी दिइएको लालमोहर"मा.फि.रिल नं. डि एन ए १३/९६, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[७] "वि.सं. १८९७ मा मुलुकभरका मुहुडा, गौंडाका भारदारहरूका नाममा सैनिक भर्ति र पजनी सम्बन्धमा भएको रुक्का" मा.फि.रिल नं. डि एन ए १४/२५, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[८] "मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी भएको खड्ग निशाना रुक्का" सि.नं.११८ (१०५), तेश्रो भाग किताब, शाही नेपाली जंगी अड्डा पुस्तकालय, काठमाडौं ।

[९] अधिकारी, **पूर्ववत्**, टि.नं. ४, पृ. ३४८ ।

[१०] एड्रियान सेभर, **नेपाल अण्डर द राणाज**, न्यू दिल्ली : अक्सफोर्ड एण्ड आइबिएच पब्लिशिङ् कं. प्रा.लि. सन् १९९३, पृ. ४८० ।

[११] गोपाल शिवाकोटी, **राजनीतिक शब्दकोश**, काठमाडौं : पैरवी प्रकाशन, २०६७, पृ. ४२० ।

[१२] सतिश कुमार, **राणा पोलिटी इन नेपाल :ओरिजिन एण्ड ग्रोथ**, बम्बई : एशिया पब्लिशिङ हाउस, सन् १९६७, पृ. १०७ ।

[१३] "पाल्पा, गुल्मी, अर्घा र खाँची राज्यमा जग्गा जाँच गर्नु भन्ने काजी दलभंजन पाँडे समेतका नाममा जारी भएको वि.सं. १८६२ वैशाख बदी १० को सवाल", मा.फि. रिल नं. २३९२/१, पृ. ५६८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[१४] विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पद्मा घिमिरे, वि.सं.२०४५, पृ. ११ ।

[१५] टेकबहादुर श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रूपरेखा**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ.२४० ।

[१६] असद हुसेन, **ब्रिटिश इण्डियाज रिलेशन्स विथ द किंगडम अफ नेपाल**, लण्डन : जर्ज एलेन एण्ड अनविन लि., सन् १९७०, पृ. ३८५ ।

[१७] रमाकान्त, **इण्डो-नेप्लिज रिलेशन्स १८१६ टु १८७७**, दिल्ली : एस.चन्द एण्ड कं., सन. १९६८, पृ. ४६-५५ र ३६९-७० ।

[१८] राजवंशी, **पूर्ववत्**, टि.नं.३, पृ. १०२-१०४ ।

[१९] अधिकारी, **पूर्ववत्**, टि.नं. ४, पृ. २६०-६१ ।

[२०] रमाकान्त, **पूर्ववत्**, टि.नं. १७, पृ. ३७५-७६ ।

[२१] अधिकारी, **पूर्ववत्**, टि.नं. ४, पृ. २१० ।

[२२] कुमार, **पूर्ववत्**, टि.नं. १२, पृ. १०९ ।

[२३] इडेन भेन्सीटार्ट, **द गुर्खाज**, (रिप्रिन्ट), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३, पृ. १८३-८६ ।

[२४] के.एम. मल्ल, **नेपाल अ जनरल जोग्राफिकल एकाउन्ट**, काठमाण्डू : धर्मोदय सभा, फोर्थ वर्ल्ड बुद्धिस्ट कन्फरेन्स, मिति अनुल्लिखित, पृ. ३५ ।

[२५] "कम्याण्डरी किताब, १९३७ र १९४० साल, पूर्व पश्चिम पहाड गौंडा", सि.नं. १०९ र १२५, मू.नं. २१ र २४, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[२६] भेन्सीटार्ट, **पूर्ववत्**, टि.नं. २६, पृ. १९७ ।

[२७] कुमार, **पूर्ववत्**, टि.नं. १२, पृ. १०८ ।

[२८] **नेपाल गजेट**, खण्ड २, संख्या ४३, २०१० साल आषाढ २ गते ।

[२९] मंगलकृष्ण श्रेष्ठ, **पब्लिक एडमिनिस्ट्रेशन इन नेपाल**, काठमाण्डू : एजुकेशनल इन्टरप्राइज प्रा.लि.,सन् १९७५, पृ. ८-९ ।

[३०] खड्गमान मल्ल, **नेपालको भूगोल**, (आठौं संस्करण), नेपाल : ने.भा.प्र. समिति, वि.सं. २०१०, पृ. ३६-३८ ।

[३१] "रिपोर्ट अन रिअर्गनाइजेशन अफ डिस्ट्रीक्ट एडमिनिस्ट्रेशन इन नेपाल, सन् १९५६", पृ. ५-६ ।

[३२] रामजी उपाध्याय, **नेपालको इतिहास अर्थात् दिग्दर्शन**, बनारस : होमनाथ केदारनाथ, सन् १९५०, पृ. १७-१८ ।

[३३] विष्णुप्रसाद शर्मा, 'मैत्रेय' **बाग्लुङको ऐतिहासिक रूपरेखा**, बाग्लुङ : धवलागिरी साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०५१, पृ. ४२ ।

[३४] **नेपाल गजेट**, २००९ साल फाल्गुण ५ गते ।

[३५] (क) **नेपाल गजेट**, २०१० साल आषाढ २ गते । (ख) अग्रवाल, **पूर्ववत्**, टि.नं. ५, पृ. १७९ ।

[३६] **नेपाल गजेट**, २०१७ साल भाद्र १४ गते ।

[३७] **गोरखापत्र**, २०१८ साल कार्तिक १६ देखि मार्ग १ गतेसम्म ।

[३८] **नेपाल गजेट**, २०३२ मार्ग २६ गते ।

[३९] **नेपाल गजेट**, २०२२ चैत्र १० गते ।

# ६. पाल्पा गौंडाका प्रशासकहरू र तिनीहरूको अधिकार क्षेत्र

## १. विषय प्रवेश

वर्तमान प्रशासनिक विभाजन अनुसार पाल्पा नेपालको पश्चिमाञ्चल विकास क्षेत्रमा पर्ने लुम्बिनी अञ्चल अन्तरर्गतको एक पहाडी जिल्ला हो । मध्यकालमा यो क्षेत्रमा पाल्पा नामक स्वतन्त्र राज्य थियो । एकीकरण पश्चात पाल्पा नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्र बन्न गयो । त्यतिखेर स्थानीय प्रशासन सञ्चालनका लागि मध्यकालका बाइसी, चौबीसी भनिने पुराना राज्यहरूलाई जिल्लाको रूपमा मान्यता दिइएको थियो । ती जिल्लाहरूमध्ये सामरिक दृष्टिले महत्वपूर्ण मानिएको जिल्लालाई मुहुडा वा गौंडा भनिन्थ्यो । यस्ता गौंडा अन्तर्गत अन्य धेरै जिल्लाहरू राखिएका हुन्थे । पाल्पा पनि सामरिक र ऐतिहासिक दृष्टिले महत्वपूर्ण स्थान हुनाले यसलाई पश्चिम नेपालका नौ जिल्लाको प्रशासनिक केन्द्र अर्थात गौंडा मानिएको थियो । पाल्पा गौंडा अन्तर्गत अर्घा, इश्मा, खाँची, गलकोट, गुल्मी, धुर्कोट, पर्वत, पाल्पा र मुसीकोट जिल्ला रहेका थिए । वि.सं. १९५२ मा नेपाललाई ३५ इलाकामा विभक्त गर्दा यस क्षेत्रलाई गुल्मी, पाल्पा र बाग्लुङ नामका तीन जिल्लामा बाँडिएको थियो । त्यतिखेर पनि पाल्पा गौंडा नै यस क्षेत्रको प्रशासनिक केन्द्र मानिन्थ्यो । नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्रको रूपमा रहेको पाल्पा गौंडामा के कस्तो प्रक्रियाबाट प्रशासकहरू नियुक्त गरिन्थे र उनीहरूले के कस्ता अधिकारहरू पाएका हुन्थे भन्ने कुरा जिज्ञासाको विषय हो । अत : यसै विषयमा चर्चा गर्ने उद्देश्यले यो लेख तयार गरिएको छ ।

## २. पाल्पा गौंडाको परिचय

मध्यकालमा गण्डकी प्रदेशमा स्थापना भएका चौबीसी राज्यहरूमध्ये पाल्पा आर्थिक रूपले सम्पन्न, सामरिक दृष्टिले सबल र अवधका नवाबसँग सम्बन्ध भएको राज्य भएको हुनाले यसलाई नेपालमा विलय गराउनु ज्यादै कठिन थियो । त्यसकारण गोरखालीहरूले पाल्पाउपर छलकपट प्रयोग गर्नुका साथै काजीहरू दलभञ्जन पाँडे, अमरसिंह थापा र वीरभद्रको नेतृत्वमा ठूलो सङ्ख्यामा सैनिक तैनाथ गरी वि.सं. १८६१ सालमा यो राज्य दखल गरेका थिए ।[१] यो राज्य नेपालमा विलय भएदेखि नै बुटवल र स्युराजको विषयमा विवाद उत्पन्न भई नेपाल र अङ्ग्रेजका बीचमा वि.सं. १८७१-७२ मा युद्ध भएको थियो । त्यतिखेर पाल्पामा तीन हजार सैनिक तैनाथ

गरिएको थियो ।[१] युद्धका बेला खटाइएका सैनिकलाई युद्धको समाप्तिपछि पनि त्यहीं तैनाथ गरिएकोले पाल्पा सामरिक दृष्टिले महत्वपूर्ण गौँडा बन्न गयो । नेपाल-अङ्ग्रेज युद्धको समाप्तिपछि नेपालको एकीकरण अभियान पूर्ण रूपमा रोकिन गयो र केन्द्रीय सत्ताका प्रशासकहरूको ध्यान प्रशासनिक व्यवस्था मिलाउने कार्यमा आकर्षित भयो । एकीकरणपश्चात् नेपाललाई प्रशासनिक रूपमा के कसरी विभाजन गर्ने भन्ने निधो नभएकोले तत्कालका लागि मध्यकालका पुरानै राज्यलाई जिल्लाको रूपमा कायम गरियो ।[३] त्यतिखेर सामरिक दृष्टिकोणले महत्वपूर्ण जिल्लामा अधिक सङ्ख्यामा सैनिक तैनाथ गरी त्यसलाई गौँडा वा मुहुडा भन्न थालियो । यस्ता गौँडाको मातहतमा अन्य धेरै जिल्लाहरू राखिएका थिए ।[४] पाल्पा पनि सामरिक दृष्टिले महत्वपूर्ण जिल्ला हुनाले यसलाई पनि गौँडा भन्न थालियो । यो गौँडा अन्तर्गत अर्घा, इश्मा, खाँची, गलकोट, गुल्मी, धुर्कोट, पर्वत, पाल्पा र मुसीकोट नामका नौ जिल्ला राखिएका थिए । नेपाल-अङ्ग्रेज युद्धका बेला नेपालको पश्चिमी क्षेत्रको सैनिक प्रबन्ध पाल्पा गौँडाबाटै हुन्थ्यो भने न्याय प्रशासनको दृष्टिले वि.सं. १९८० सम्म पनि यो गौँडा नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्र मानिन्थ्यो । तर वास्तविक रूपमा यो गौँडाको प्रशासनिक क्षेत्र माथि उल्लिखित नौ जिल्लाले चर्चेको भूभाग थियो । यो भूभाग पनि बेलाबखतमा घटबढ भइरहन्थ्यो । त्यसकारण पाल्पा गौँडाको अधिनमा रहेको भौगोलिक क्षेत्रलाई निम्नानुसार तीन चरणमा विभक्त गर्न सकिने एक अध्ययनमा उल्लेख छ ।[५]

(१) पहलो चरण (वि.सं.१८६१-१९३३) : यो समयावधिमा पाल्पा गौँडाको भौगोलिक क्षेत्र उत्तर पूर्वमा मोदीखोला र कालीगण्डकी हुँदै देवघाटसम्म थियो भने उत्तरी क्षेत्रमा मुस्ताङ पर्दथ्यो । यसको उत्तर पश्चिमी सिमाना जुम्ला, सल्यान हुँदै प्यूठानसम्म फैलिएको थियो भने दक्षिणमा नौतनवा, रूपन्देही र मर्चवारसम्म पुगेको थियो ।

(२) दोस्रो चरण (वि.सं.१९३४-२००९) : यो चरणमा पाल्पा गौँडाको दक्षिणतिर वि.सं.१९३४ मा तौलिहवा गोश्वारा स्थापना गरिएको थियो भने वि.सं.१९५२ मा यो गोश्वारालाई पाल्ही-माझखण्ड र स्युराज-खजहनी जिल्लामा परिणत गरिएको थियो । त्यसकारण यो अवधिमा पाल्पा गौँडाको दक्षिणी सिमाना पुरानो बटौली बजारसम्म मात्र कायम भएको थियो । त्यस्तै यो गौँडाको उत्तरपूर्वी क्षेत्रमा पश्चिम ३ नम्बर स्याङ्जा नामक गोश्वारा स्थापना हुँदा, कालीगण्डकीदेखि मोदीखोलासम्मको भूभाग यो गौँडाको अधिनबाट छुटेको थियो ।

(३) तेस्रो चरण (वि.स.२००९-२०२२) : यस अवधिमा यो गौँडाको अधिनमा

रहेका गुल्मी र बाग्लुङ इलाकामा छुट्टाछुट्टै स्वतन्त्र गौंडा स्थापना गरिएपछि पाल्पा गौंडाको भौगोलिक क्षेत्र उत्तरमा कालीगण्डकी, पूर्वमा देवघाट, पश्चिममा रिडीखोला र दक्षिणमा चुरे पहाडको घाँचसम्मको भूभाग कायम भएको थियो। वि.सं. २०१८ सालमा नेपाललाई ७५ विकास जिल्लामा विभाजन गर्दा पाल्पा र रूपन्देही जिल्लाको सिमाना चिडियाखोला र चुरे पहाडको शिर भनी तोकिएको थियो।

यसरी बेलाबखतमा फैलिँदै र खुम्चँदै जाँदा पाल्पा गौंडा निकै साँघुरो भौगोलिक क्षेत्रमा मात्र सिमित हुन पुगेको थियो भने वि.सं. २०१८ सालको प्रशासनिक विभाजन अनुसार पाल्पा लुम्बिनी अञ्चलका ६ जिल्ला मध्येको एक पहाडी जिल्लाको रूपमा रहन गएको थियो।

## ३. पाल्पा गौंडाका प्रशासकहरू र तिनीहरूको नियुक्ति प्रक्रिया

नेपालको एकीकरण पश्चात स्थानीय प्रशासन सञ्चालन गर्नका लागि स्थापना गरिएका गौंडा, गढी र गोश्वाराहरूमा केन्द्रबाट प्रशासक नियुक्त गर्ने व्यवस्था थियो। राणा शासनकालपूर्व नेपालमा भारदारी शासन व्यवस्था हुनाले केन्द्रीय सत्तामा रहेका भारदारहरूका आफन्तहरूलाई स्थानीय निकायका प्रशासकमा नियुक्त गरिन्थ्यो। राणा शासनकालमा जहानिया शासन व्यवस्था स्थापना गरिएकोले राणाहरूले आफ्ना भाइभतिजाहरूलाई गौंडा, गढी, गोश्वाराका प्रशासकमा नियुक्त गर्दथे। वि.सं. २००७ सालमा जहानिया राणा शासन समाप्त गरिएपछि सर्वाधिकार राजामा रहन गयो र उनले नियुक्त गरेको मन्त्रिमण्डलले केन्द्रीय सत्ता सञ्चालन गर्ने हुँदा उनीहरूका नातेदार र विश्वासपात्र मात्र स्थानीय निकायका प्रशासकमा नियुक्त हुन थाले।

गौंडा, गढी र गोश्वारामा नियुक्त हुने प्रशासकहरूलाई प्रदान गरिने पदलाई के नामबाट सम्बोधन गरिन्थ्यो भन्ने विषयमा विद्वानहरूबीच मतैक्यता छैन। हेमिल्टनले एकीकरणपश्चात् स्थापना गरिएका जिल्लाहरूमा नियुक्त गरिएका प्रशासकहरू सुब्बा मात्र नभएर गौंडाको महिमा हेरेर चौतारिया, सरदार, काजी र लेफ्टिनेन्ट दर्जाका व्यक्तिहरू समेत हुन्थे भनेका छन्।[१] हेमनारायण अग्रवालका अनुसार गोरखालीहरूले बाइसी, चौबीसी राज्यहरू विजय गरेपछि ती राज्यहरूमा प्रशासन सञ्चालनका लागि पुराना राजाहरूलाई हटाएर सुब्बा दर्जाका व्यक्ति नियुक्त गर्ने गरेका थिए; भीमसेन थापाले यी जिल्ला प्रशासकको पदलाई जिल्ला मुख्तियार भन्ने संज्ञा दिए भनेका छन्। उनको भनाइ अनुसार राणा शासनकालमा तराई जिल्लाका प्रशासकलाई बडाहाकिम भन्न थालियो भने पहाडी जिल्ला खास गरेर पाल्पा र धनकुटा गौंडाका प्रशासकलाई

गभर्नर भन्न थालिएको थियो; तिनीहरू जनरल वा कर्णेल दर्जा भन्दा माथिका सैनिक हुन्थे ।[८]

भारतमा मुगल साम्राज्यको प्रभाव फैलिएको बेला सो मुलुकका अवध र विहार लगायतका पुराना राज्यहरूलाई 'सुबा' भनिन्थ्यो । ती सुबाहरूमा शान्ति सुरक्षा कायम गर्न एक प्रशासक नियुक्त गरिएको हुन्थ्यो जसलाई 'सुबादार' भनिन्थ्यो ।[८] नेपालमा पनि मुगल शासन प्रणालीको प्रभाव परेको हुनाले निश्चित पल्टनको जिम्मेवारी लिने सैनिक प्रशासकलाई सुबेदार भन्ने चलन थियो । एकीकरण अभियानको प्रारम्भमा विजय गरिएका प्रदेशहरूको प्रशासन सञ्चालनको जिम्मेवारी तिनै सुबेदारलाई दिने गरेको पाइन्छ । नेपालमा निजामती प्रशासनको अवधारणा आएपछि निश्चित इलाका वा निकायको प्रशासकलाई 'सुब्बा' भन्न थालियो । पाल्पा गौँडाका प्रशासकलाई भने राणा शासनकालपूर्व 'जिल्ला मुख्तियार', राणा शासनकालमा 'तैनाथवाला' र 'गभर्नर' तथा राणा शासनको पतनपछि 'बडाहाकिम' भनिन्थ्यो ।[९]

काजी बख्तावरसिंह थापालाई वि.सं. १८८१ मा पाल्पा गौँडाको प्रशासक नियुक्त गर्दा प्रसारित रूक्कामा उनलाई 'जिल्ला मुख्तियार' भनिएको र राणा शासनकालको प्रारम्भमा यो गौँडाको प्रशासक बनाउँदा खड्गबहादुर कुँवरलाई दिइएको सनदमा पनि पाल्पा अड्डाका 'मुख्तियार' भनी लेखिएकोले राणा शासनकाल पूर्व पाल्पा गौँडाको प्रशासकलाई 'मुख्तियार' भनिन्थ्यो भन्ने कुरा प्रमाणित हुन्छ ।[१०] राष्ट्रिय अभिलेखालयमा सुरक्षित कम्याण्डरी किताब र अन्य अभिलेखहरूमा राणा शासनकालका पाल्पा गौँडाका प्रशासकहरूको पद 'तैनाथवाला' भन्ने लेखिएको छ ।[११] राणा शासनको पतनपछि भने यो गौँडाका प्रशासकलाई 'बडाहाकिम' भन्न थालिएको कुरा नेपाल गजेटबाट थाहा हुन्छ ।[१२]

पाल्पा गौँडामा केन्द्रीय सत्ताको उच्च ओहदामा पुगेका व्यक्ति मात्र प्रशासकमा नियुक्त हुने गरेको पाइन्छ । राणा शासनकालपूर्व चौतरिया, काजी, जनरल र कर्णेल दर्जाका व्यक्ति यो गौँडाका मुख्तियार भएका थिए । राणा शाासनकालमा कमाण्डर इन चिफ, मेजर जनरल र जनरल पदका सैनिकहरू मात्र यो गौँडाका तैनाथवाला भएका थिए ।[१३]

स्थानीय प्रशासकहरू केन्द्रीय सत्ताका प्रतिनिधि भएको हुनाले केन्द्रमा जसको बोलबाला छ उसैको नातेदार वा चाकडीदार गौँडाको प्रशासकमा नियुक्त हुन पाउँदथे । पाल्पा गौँडा नेपालको पश्चिमी क्षेत्रको जङ्गी तथा निजामती प्रशासनको केन्द्र हुनाले यहाँ खटिएर आउने प्रशासकहरू मुख्तियार वा प्रधानमन्त्रीको विश्वासपात्र हुनुपर्दथ्यो ।

त्यसकारण केन्द्रीय सत्ताको परिवर्तनले पाल्पा गौँडाका प्रशासकको बहाली र बर्खासीमा महत्वपूर्ण असर पार्दथ्यो । यो गौँडामा खटाइएका प्रशासकहरूको नियुक्ति, थमौती र खोसुवा बारे तल वर्णन गरिन्छ ।

**(१) राणा शासनकालपूर्व पाल्पा गौँडाका मुख्तियारहरू (वि.सं.१८६१-१९०३)**

राणा शासनकालपूर्व नेपालको प्रशासन भारदारी व्यवस्थामा आधारित हुनाले केन्द्रमा जसको हालीमुहाली चल्दथ्यो उसैका नातेदार वा विश्वासपात्र गौँडाका प्रशासक नियुक्त हुन्थे । तल दिइएको तालिकाबाट के थाहा हुन्छ भने वि.सं. १८६३ देखि १८९४ सम्म केन्द्रमा भीमसेन थापाको रजाइँ चल्दा उनका बाबु अमरसिंह थापा, भाइहरू बख्तावरसिंह थापा र रणवीरसिंह थापा तथा भतिजा उजिरसिंह थापा पाल्पा गौँडाका मुख्तियार भएका थिए ।

तालिका नं. १

**राणा शासनकालपूर्व नेपालको केन्द्रीय सत्ता र पाल्पा गौँडाका प्रशासकहरू**

(वि.सं.१८६१-१९०३)

| केन्द्रीय प्रशासकहरू | पदावधि | पाल्पा गौँडाका प्रशासकहरू | कार्य अवधि |
|---|---|---|---|
| मुख्तियार रणबहादुर शाह | १८६१-१८६३ | काजीहरू दलभञ्जन पाँडे, अमरसिंह थापा र वीरभद्र | १८६१-१८६२ |
| " भीमसेन थापा | १८६३-१८९४ | काजी अमरसिंह थापा | १८६२-१८७१ |
| | | कर्णेल उजिरसिंह थापा | १८७१-१८८१ |
| | | काजी बख्तावरसिंह थापा | १८८१-१८९० |
| | | जनरल रणवीरसिंह थापा | १८९०-१८९४ |
| " रणजङ्ग पाँडे | १८९४ | काजी रणदल पाँडे | १८९४-१८९७ |
| " रङ्गनाथ पौडेल | १८९४ | | |
| " पुष्कर शाह | १८९४-१८९५ | | |
| " रणजङ्ग पाँडे | १८९५-१८९७ | | |
| " चौ.फतेजङ्ग शाह | १८९७-१८९९ | काजी सिंहवीर पाँडे | १८९७-१८९८ |
| | | काजी रणदल पाँडे | १८९८-१८९९ |
| प्राइममिनिस्टर माथवरसिंह थापा | १९००-१९०२ | चौ.गुरुप्रसाद शाह र चौ. खड्गविक्रम शाह | १९००-१९०१ |
| | | काजी तिलविक्रम थापा | १९०१-१९०२ |
| मुख्तियार चौ.फतेजङ्ग शाह | १९०२-१९०३ | चौतरिया गुरुप्रसाद शाह | १९०२-१९०३ |

स्रोत: कर्णबहादुर बानियाँ क्षत्री, पाल्पा गौँडा : एक ऐतिहासिक अध्ययन, काठमाडौँ : फुलचोकी पब्लिकेशन एण्ड डिस्ट्रीब्यूसन प्रा.लि., वि.स.२०६३ ।

त्यस्तै नेपालको प्रशासनमा वि.सं. १८९४ देखि १८९९ सम्म पाँडेहरूको हैकम चलेको बेलामा यो गौँडामा रणदल पाँडे र सिंहवीर पाँडे प्रशासक भएका थिए

भने चौतरिया खलकको बोलाबाला चलेको बेलामा गुरूप्रसाद शाह र खड्गविक्रम शाह पाल्पा गौंडाका मुख्तियार बनेका थिए । वि.सं. १९०० मा नेपालको केन्द्रीय सत्तामा राजा राजेन्द्रकी कान्छी रानी राज्यलक्ष्मीको वर्चश्व कायम भएपछि उनले माथवरसिंह थापालाई प्रधानमन्त्री बनाइन् । त्यसपछि माथवरसिंह थापाले आफ्ना काका बख्तावरसिंह थापाका छोरा तिलविक्रम थापालाई पाल्पा गौंडाको प्रशासक बनाएका थिए । माथवरसिंह थापाको हत्यापछि वि.सं. १९०२ मा नेपालको मुख्तियार बनेका चौतारिया फत्येजङ्ग शाहले आफ्ना भाइ गुरूप्रसाद शाहलाई यो गौंडाको मुख्तियार बनाएका थिए ।[१४]

**(२) राणा शासनकालमा पाल्पा गौंडाका तैनाथवालाहरू (वि.सं.१९०३-२००७)**

राणा शासनकालमा जहानिया शासन व्यवस्था हुनाले राणा खलकका व्यक्तिहरू बाहेक अन्य कोही पनि नेपालको केन्द्रीय सत्तामा पुग्न सक्तैन्थे भने पाल्पा गौंडाका तैनाथवालाहरू पनि उनीहरूकै भाइ भतिजाहरू नियुक्त हुन्थे । राणा शासनकालको पृथक विषेशता के थियो भने नेपालमा विद्यमान थरघरको भारदारी ब्यवस्था निषेध भएको थियो । त्यति मात्र होइन राणा परिवार भित्र पनि फुट हुन गई शमशेर खलकले जङ्ग, विक्रम र अन्य राणा खलकलाई सत्ताच्युत गरेका थिए भने शमशेर खलकमा पनि ब्याइते र ल्याइते बीच फुट पैदा भएको थियो । त्यसको असर पाल्पा गौंडाका तैनाथवालाहरूको नियुक्ति र बर्खासीमा पनि पर्न गएको थियो ।

तालिका नं. २

**राणा शासनकालमा केन्द्रका प्रधानमन्त्री र पाल्पा गौंडाका तैनाथवालाहरू**

(वि.स.१९०३-२००७)

| प्रधानमन्त्री | पदावधि | पाल्पा गौंडाका तैनाथवाला | कार्य अवधि |
|---|---|---|---|
| जङ्गबहादुर राणा | १९०३-१९३३ | कमाण्डिङ कर्णेल कृष्णबहादुर कुंवर | १९०३-१९०६ |
| | | कर्णेल खड्गबहादुर कुंवर | १९०६-१९११ |
| | | कर्णेल केदारनरसिंह राणा | १९११-१९१५ |
| | | कमाण्डिङ जनरल बद्रीनरसिंह राणा | १९१५-१९३१ |
| रणोद्दीपसिंह राणा | १९३३-१९४२ | जनरल वीर शमशेर | १९३१-१९३६ |
| | | लेफ्टिनेन्ट जनरल भूपेन्द्रजङ्ग राणा | १९३६-१९३९ |
| | | लेफ्टिनेन्ट जनरल अम्बरजङ्ग राणा | १९४०-१९४२ |
| वीर शमशेर | १९४२-१९५८ | उ.क.ज. भीम शमशेर (कार्यवाहक लेफ्टिनेन्ट कर्णेल शेरबहादुर थापा १९४२-४३ र कर्णेल तेजबहादुर राणा १९४४-४७ ) | १९४२-१९४७ |
| देव शमशेर | १९५८ | कमाण्डर इन चिफ खड्ग शमशेर | १९४८-१९५९ |
| चन्द्र शमशेर | १९५८-१९८६ | कमाण्डिङ कर्णेल समर शमशेर | १९६०-१९६४ |
| | | मेजर जनरल शेर शमशेर (का.बा.जनरल बुद्ध शमशेर १९७१-७४) | १९६४-१९७७ |
| भीम शमशेर | १९८६-१९८९ | मेजर जनरल ज्यादु शमशेर | १९७७ -१९८१ |
| जुद्ध शमशेर | १९९०-२००२ | जनलर प्रताप शमशेर | १९८२-१९८९ |
| पद्म शमशेर | २००२-२००५ | जनरल माधव शमशेर | १९८९-१९९० |
| मोहन शमशेर | २००५-२००७ | कमाण्डर इन चिफ रुद्र शमशेर | १९९०-२००७ |
| | | जनरल प्रचण्ड शमशेर | २००७ |
| | | | |

स्रोत : उही ।

वि.सं.१९०३ सालमा भएको बीभत्स कोतपर्वपछि जङ्गबहादुर राणा र उनका भाइहरू शासनसत्ताका हर्ताकर्ता बने जसलाई नेपालको इतिहासमा राणा शासनकाल भनिन्छ । राणा शासनकालमा जङ्गबहादुर राणा प्रधानमन्त्री हुँदा उनका भाइभतिजाहरू कृष्णबहादुर कुँवर, खड्गबहादुर कुँवर, केदारनरसिंह राणा, बद्रीनरसिंह राणा र वीर शमशेर पाल्पा गौंडाका तैनाथवाला भएका थिए । त्यसपछि नेपालको प्रधानमन्त्री भएका

रणोद्दीपसिंह राणाको पालामा उनका भतिजाहरू भूपेन्द्रजङ्ग राणा र अम्बरजङ्ग राणा यो गौंडाका तैनाथवाला भए । राणाहरूमा आपसी आन्तरिक संघर्ष चल्न गई वि.सं. १९४२ सालमा शमशेर खलकले राणा प्रधानमन्त्री रणोद्दीपसिंहको हत्या गरेपछि अन्य खलकका राणाहरू सत्ताबाट च्युत हुन गए । त्यसपछि प्रधानमन्त्री बनेका वीर शमशेरले आफ्ना भाइहरू भीम शमशेर र खड्ग शमशेरलाई पाल्पा गौंडाका तैनाथवाला बनाएका थिए ।[१५] भीमशमशेर भने पाल्पामा आएर कार्यभार बहन गरेको देखिँदैन । उनको सट्टामा शेरबहादुर थापा र तेजबहादुर राणाले कार्यवाहक भएर कार्य सञ्चालन गरेको पाइन्छ ।[१६] सत्ता हत्याउने प्रतिष्पर्धा चल्दा देव शमशेरलाई सत्ताच्युत गरेर प्रधानमन्त्री बनेका चन्द्र शमशेरले आफ्ना भाइभतिजाहरू समर शमशेर, शेर शमशेर, ज्यादु शमशेर र प्रताप शमशेरलाई यो गौंडाको तैनाथवाला बनाएका थिए ।[१७] शमशेर खलकका राणाहरूलाई चन्द्रशमशेरको पालामा ब्याइते र ल्याइते वर्गमा विभाजन गरिएपछि सत्ता मोहका कारण आपसी संघर्ष चर्किन गयो । यसको असर पाल्पा गौंडाका प्रशासकहरूको नियुक्तिमा पनि पर्न गयो जसको कारण जुद्ध शमशेरको समयमा कमाण्डर इन चिफ पदमा पुगेका र प्रधानमन्त्रीको दोस्रो रोलक्रममा पुगेका रूद्र शमशेरलाई रोलक्रमबाट हटाएर पाल्पा गौंडाको तैनाथवाला बनाइयो । राणा शासनको अन्त्यतिर रूद्र शमशेर आन्दोलनकारीको पक्षमा लागेको भन्ने शंकाको भरमा मोहनशमशेरले उनलाई जिम्मेवारीबाट पन्छाएर प्रचण्ड शमशेरलाई यो गौंडाको तैनाथवाला बनाएर पठाएका थिए ।[१८]

मथिको उदाहरणबाट के देखिन्छ भने सत्ता प्राप्तिका लागि चलेको संघर्षका कारण घात, प्रतिघात चल्दै गयो जसका कारण केन्द्रीय सत्तामा परिवर्तन भइरह्यो जसको असर पाल्पा गौंडाका प्रशासकको बहाली र बर्खासीमा पनि पर्न गयो ।

**(३) राणाशासनको पतनपश्चात पाल्पा गौंडाका बडाहाकिमहरू** (वि.स.२००७-२०२२)

राणाशासनको पतन भएपछि नेपालको राजकीय सत्ता राजाको हातमा पर्न गयो । त्यसकारण केन्द्रीय सत्तामा राजाले चाहेका व्यक्ति प्रधानमन्त्री हुन थाले । वि.सं. २०१५ सालमा संसदीय प्रणाली अनुसार आम निर्वाचन भएतापनि सो व्यवस्था लामो समयसम्म टिक्न सकेन । वि.सं. २०१७ साल पौष १ गते राजा महेन्द्रबाट संसदीय व्यवस्था विघटन गरी सम्पूर्ण राजकीय अधिकार आफ्नो हातमा लिने काम भयो । त्यसकारण नेपालका अन्य गौंडा, गढी र गोश्वारामा जस्तै पाल्पा गौंडामा पनि राजाका विश्वासपात्र नै प्रशासक बन्न थाले ।[१९] राणा शासनको पतनपछि पाल्पा गौंडा अन्तर्गतका गुल्मी र बाग्लुङ इलाकामा अलग्गै स्वतन्त्र गौंडा स्थापना भएकोले पाल्पा गौंडाको महिमा घट्दै गयो । साथै नयाँ व्यवस्था अनुसार गौंडाका प्रशासकहरूलाई

निजामती कार्य मात्र गर्न पाउने अधिकार दिइयो । अनि जिल्लाको ऐतिहासिक महत्व, त्यहाँबाट उठ्ने राजश्व र त्यसको जनसङ्ख्यालाई ख्याल गरेर बडाहाकिमलाई तीन श्रेणीमा विभाजन गरियो जसमध्ये पाल्पा गौँडाका बडाहाकिमलाई 'क' श्रेणीमा राखिएको थियो ।[२०] राणा शासनको पतनपश्चात गौँडा, गढी र गोश्वारा खारेज नहुञ्जेलसम्म पाल्पा गौँडामा बडाहाकिम भएका व्यक्तिहरूका विवरण तल दिइन्छ-

तालिका नं. ३

**पाल्पा गौँडाका बडाहाकिमहरू (वि.सं.२००७-२०२२)**

| बडाहाकिमहरू | पदावधि |
|---|---|
| रूद्र शमशेर | २००७-२००८ |
| क्षेत्रबहादुर वान्तवा | २००८-२००९ |
| तारकबहादुर शाह | २००९-२०१० |
| अनिरूद्धप्रसाद सिंह | २०१०-२०११ |
| थिरबहादुर मल्ल | २०११-२०१२ |
| लभ शमशेर | २०१२-२०१५ |
| टंकबहादुर अधिकारी | २०१५-२०१६ |
| शेरबहादुर शाही | २०१६-२०१७ |
| लक्ष्मणजङ्गबहादुर सिंह | २०१७-२०१८ |
| दिगम्बर झा | २०१८-२०२१ |
| कृष्णबहादुर वर्मा | २०२१-२०२२ |

स्रोत : उही ।

माथिको ऐतिहासिक तथ्यबाट पाल्पा गौँडाका प्रशासकहरूको नियुक्ती प्रक्रियामा निम्नलिखित तत्वहरूले असर पारेको ज्ञात हुन्छ ।

(क) **केन्द्रमुखी प्रशासन** : नेपालको एकीकरणपछि प्रशासनको मुख्य अधिकार केन्द्रमा रहने हुनाले शक्तिशाली व्यक्ति र समूहले केन्द्रीय सत्ता कब्जा गर्ने प्रयत्न गर्न थाले । केन्द्रीय सत्ता कब्जा गरेपछि स्थानीय प्रशासनमा आधिपत्य जमाउन स्थानीय स्तरका निकायमा आफ्ना विश्वासपात्र र नातेदार नियुक्त गर्ने परम्परा बस्यो । यो नीति अद्यापि कायम छ ।

(ख) **पजनी प्रथा** : नेपालमा केन्द्रीय र स्थानीय प्रशासनका पदाधिकारी नियुक्त गर्ने, सरूवा गर्ने, बढुवा गर्ने र बर्खास्त गर्ने काम नियम अनुसार निश्चित पदावधिमा

गर्न थालिएको निजामती ऐन २०१३ लागू भएपछि हो । त्यो समयभन्दा पहिला केन्द्रीय वा स्थानीय स्तरका कर्मचारीहरूको बहाली र बर्खास्ती हचुवाको भरमा केन्द्रीय सत्ताका प्रमुखको स्वेच्छामा सालिन्दा हुने गर्दथ्यो । साथै केन्द्रीय सत्ताका प्रमुखको परिवर्तनले स्थानीय स्तरका प्रशासकको बहाली र बर्खासीमा पनि ठूलो असर पार्दथ्यो ।

(ग) **उच्च पदस्थ व्यक्ति हुनुपर्ने** : पाल्पा गौंडालाई नेपालको पश्चिमी क्षेत्रको प्रशासनको केन्द्र मानिएको हुनाले यो गौंडाका प्रशासक केन्द्रीय सत्ताको उच्च पदमा पुगेको व्यक्ति हुनुपर्दथ्यो । यो गौंडामा चौतारिया, काजी, कमाण्डर इन चिफ, जनरल र कर्णेल पदमा आसीन व्यक्ति मात्र प्रशासक भएको पाइएकोले सो कुराको पुष्टि गर्दछ ।

## ४. पाल्पा गौंडाका प्रशासकहरूको अधिकार क्षेत्र

नेपालमा राणा शासन शुरु हुनुभन्दा पहिलेदेखि नै केन्द्रमुखी प्रशासन व्यवस्था हुनाले गौंडाका प्रशासकको पृथक अस्तित्व र भूमिका नभएजस्तो महसुस हुन्छ तर जङ्गी तथा निजामती तर्फका प्रमुख हुने भएकोले आफ्नो क्षेत्रमा उनको धाक र रवाफ जमेको हुन्थ्यो । त्यसमा पनि गौंडाको भौगोलिक अवस्थिति, प्रशासकको व्यक्तित्व र स्तरले पनि उनको अधिकार क्षेत्रमा फरक पार्दथ्यो । त्यसकारण सबै गौंडा, गढी र गोश्वाराका प्रशासकहरूको काम, कर्तव्य र अधिकारमा एक रूपता थिएन । एउटै गौंडामा पनि प्रशासकको स्तर हेरेर घटीबढी अधिकार दिइएको हुन्थ्यो । साथै समय र परिस्थितिले पनि प्रशासकहरूको अधिकार क्षेत्रमा असर पारेको देखिन्छ । एकजना विद्वानले राणा शासनकाल पूर्व स्थानीय प्रशासकहरूले पूर्ण रूपमा केन्द्रले लगाएअह्राएको काम मात्र गर्दथे, राणा शासनकालमा उनीहरू शक्तिशाली थिए भने राणा शासनको पतनपछि उनीहरूको अधिकार क्षेत्र घट्दै गयो भनेका छन् ।[२१] यो भनाइ पाल्पा गौंडाका प्रशासकहरूको अधिकार क्षेत्रलाई अध्ययन गर्दा पनि मिल्न आउँदछ जसलाई निम्नलिखित बुँदाहरूमा वर्णन गर्न सकिन्छ ।

### ४.१. पाल्पा गौंडाका प्रशासकको अधीनमा रहेको भौगोलिक क्षेत्र

पाल्पा गौंडाका प्रशासकको अधीनमा रहने भौगोलिक क्षेत्र विभिन्न समयमा थपघट भइरहन्थ्यो । यसको मूल कारण समय, परिस्थिति र प्रशासकहरूको स्तरहरूलाई मान्न सकिन्छ । वि.सं. १८६१ सालमा पाल्पा राज्य नेपालमा विलय भएपछि पाल्पा गौंडामा तैनाथवाला रहेका दलभञ्जन पाँडेसमेतका प्रशासकहरूलाई शुरूमा अर्घा, खाँची, गुल्मी र पाल्पा राज्यले चर्चेको भू-भागमा मात्र प्रशासन सञ्चालन गर्ने अधिकार दिइएको थियो । यो कुरा वि.सं. १८६२ साल बैशाख बदी १० गते काजी

दलभञ्जन पाँडे समेतका भारदारको नाममा जारी गरिएको आदेश सवालबाट ज्ञात हुन्छ ।[२२] त्यसपछि नेपाल-अङ्ग्रेज युद्धकालमा केन्द्रदेखि पश्चिमको सम्पूर्ण भू-भाग पाल्पा गौँडाका प्रशासकले रेखदेख पुऱ्याउने गरेको देखिन्छ । यसको उदाहरणका लागि वि.सं. १८६७ सालमा नालापानीबाट अमृतसिंह थापाले मुख्तियार भीमसेन थापालाई पठाएको पत्रलाई लिन सकिन्छ । यो पत्रमा नेपालको पश्चिमी क्षेत्रमा खटाइने सैनिक पाल्पा गौँडाका तैनाथवाला काजी अमरसिंह थापाको निर्देशनमा पठाउने गरेको कुरा उल्लेख छ ।[२३] त्यस्तै हस्तदल शाहीले डोटीबाट पाल्पा गौँडाका प्रशासक काजी अमरसिंह थापालाई पठाएको पत्रमा डोटी इलाकाको हिसाब किताब र नेपालको पश्चिमी क्षेत्रको सैनिक गतिविधिको जानकारी गराइएकोले सो क्षेत्र पाल्पा गौँडाको अधिनमा रहेको थाहा हुन्छ ।[२४] त्यस्तै वि.सं. १८७२ सालमा उजिरसिंह थापा समेतका भारदारले नेपालको पश्चिमी क्षेत्रमा खटाइने सैनिक बारे केन्द्रलाई सरसल्लाह दिएको देखिएकोले नेपाल-अङ्ग्रेज युद्धताका सो क्षेत्र पाल्पा गौँडाको अधीनमा रहेको ज्ञात हुन्छ ।[२५] यसरी राणा शासन शुरू हुनुभन्दा पूर्व नेपालको सम्पूर्ण पश्चिमी क्षेत्रमा पाल्पा गौँडाका प्रशासकले रेखदेख पुऱ्याउने गरेको देखिन्छ तापनि उनीहरूले कुन कुन क्षेत्रसम्म प्रशासन हेर्ने अधिकार पाएका थिए भन्ने कुरा स्पष्ट छैन ।

राणा शासनकालमा पाल्पा गौँडाका प्रशासकको अधीनमा रहेको भौगोलिक क्षेत्र निश्चित हुँदै गयो । वि.सं. १९०६ मा खड्गबहादुर कुँवरलाई पाल्पा गौँडाको तैनाथवाला बनाउँदा कृष्णागण्डकीदेखि पश्चिम महाकाली नदीसम्मका मधेश, पहाडमा रहेका खानी, टक्सार, तहबिल र अदालतका कारिन्दाको रेखदेख गर्ने र जङ्गी बन्दोबस्त मिलाउने अधिकार दिइएको थियो ।[२६] वि. सं. १९३६ सालमा पाल्पा गौँडाका प्रशासकको क्षेत्राधिकार सीमित गरिएको थियो । त्यतिखेर यो गौँडाका प्रशासक भएर आउने भूपेन्द्रजङ्ग राणालाई अर्घा, इश्मा, खाँची, गलकोट, गुल्मी, धुकोट, पर्वत, पाल्पा र मुसिकोटसमेत नौ जिल्लाको प्रशासनको रेखदेख गर्ने जिम्मेवारी दिइएको कुरा कम्याण्डरी किताबमा उल्लेख छ ।[२७] उता पाल्पा गौँडाको दक्षिणतिर पर्ने बुटवल चार तप्पामा (पाल्ही, माझखण्ड, खजहनी र स्यूराज) अलग्गै तौलिहवा गोश्वारा स्थापना गरिएकोले सो क्षेत्र पनि यो गौँडाको अधिनबाट छुटेको थियो ।[२८] यसरी राणा शासनकालको उत्तरार्द्धमा माथि उल्लिखित अर्घा, इश्मा, खाँची, गलकोट, गुल्मी, धुकोट, पर्वत, पाल्पा र मुसिकोटसमेतका नौ जिल्लाले चर्चेको पहाडी भू-भाग मात्र यो गौँडाका प्रशासकको अधीनमा रहन गएको थियो ।

राणा शासनको पतनपछि यो गौँडाका प्रशासकको अधिनमा रहेको भौगोलिक

क्षेत्र अझै साँघुरिन गयो । किनकि वि.सं. २००९ सालमा गुल्मी र बाग्लुङमा अलग्गै गौँडा स्थापना भएपछि पाल्पा गौँडाका प्रशासकको अधिनमा उत्तरमा कृष्णागण्डकी, पूर्वमा देवघाट, दक्षिणमा चुरे पहाडको शिर र पश्चिममा रिडीखोलासम्मको भौगोलिक क्षेत्र मात्र रहन गएको थियो ।[२४]

### ४.२ जङ्गी तथा निजामती प्रशासनसम्बन्धी अधिकार क्षेत्र

स्थानीय प्रशासकहरूको मुख्य कार्य दैनिक प्रशासनका लागि जङ्गी तथा निजामती बन्दोबस्त मिलाउनु थियो । पाल्पा गौँडाका प्रशासकलाई पनि जङ्गी तथा निजामती बन्दोबस्त सम्बन्धी विभिन्न अधिकार दिइएको थियो जसलाई बुँदागत रूपमा उल्लेख गरिन्छ-

**(१) शान्ति सुरक्षाको प्रबन्ध गर्नु**

आफ्नो अधीनमा रहेको सम्पूर्ण भू-भागमा शान्ति सुव्यवस्था मिलाउनु प्रत्येक गौँडाका प्रशासकको मुख्य काम, कर्तव्य हुन्थ्यो । उक्त कार्य के कसरी गर्ने भन्ने बारेमा केन्द्रबाट सनद र सवाल जारी गरिएको हुन्थ्यो । पाल्पा गौँडाका प्रशासक मेजर जनरल शेरशमशेरलाई वि.सं. १९६४ सालमा दिइएको आदेश अनुसार पाल्पा गौँडाका प्रशासकले आफ्नो प्रशासनिक क्षेत्रभित्रको बाटो भएर आवतजावत गर्ने हरेक व्यक्तिउपर निगरानी राख्ने, बिना राहदानी आफ्नो इलाकामा प्रवेश गर्न नदिने, लाइसेन्स बिना हातहतियार राख्ने व्यक्तिलाई कारबाही गर्ने, भोट, मधेश र मुगलानबाट कोही मानिस आएको थाहा पाएमा त्यसको चियोचर्चा गर्न लगाउने तथा चोरी डकैती रोक्न थाना चौकीलाई सजग गराइ राख्ने कार्य गर्नु पर्दथ्यो ।[२५] नेपालमा राणा शासन रहुन्जेलसम्म मानिसहरू विदेशमा मात्र होइन स्वदेशमा पनि एक ठाउँबाट अर्को ठाउँमा जाँदा राहदानी बनाउनु पर्दथ्यो । यस सम्बनधमा वि.सं. १९१८ मा काठमाडौँबाट पाल्पा आउने केही व्यक्तिलाई दिइएको राहदानी यस्तो छ-

> "स्वस्ति श्री मद्राजकुमारकुमारात्मज पश्चिमतर्फका कम्यांडर जनरल श्री रण उद्दीपसिंह
>
> रण उद्दीपसिंह कुवर राणाकस्य पत्रम्
>
> आगे विष्णुमति पश्चिम पाल्पा संमका चौकीदार. घाट. घटवार. गैह्रके यथोचित. उप्रान्त. आनन्द वाङा स्मेत जना ६ आफ्ना घर पालपा संम जांछन्. तपसील बमोजीमका मानिसलाई. वर्ष वर्ण जाची. चिठीपत्र षोला गरि. सरासर जान देउ रोकटोक नगर

तपसील

आनंद वाडा जना-१ के वर्ष ३७ वर्ण गोरो

हर्षवीर जना-१ के वर्ष २७ वर्ण साउलो

किस्नमुनि जना-१ के वर्ष ८ वर्ण गोरो

रत्नमुनि जना-१ के वर्ष २२ वर्ण साउलो

लक्ष्मिथकु स्वास्नी जना-१ के वर्ष १५ वर्ण कालो

जसथकु स्वास्नी जना-१ के वर्ष ५ वर्ण साउलो

इति संबत् १९१८ साल मिति चैत्र शुदी रोज शुभम्- " [११]

यसरी दिइने राहदानी गौँडा, गढी र गोश्वाराका प्रशासकले दिने अधिकार पाएका हुन्थे । पाल्पाबाट विदेश वा स्वदेशका अन्य स्थानमा जाने यात्रीहरूलाई पाल्पा गौँडाका प्रशासकले राहदानी दिनु पर्दथ्यो भन्ने कुरा वि.सं. १९६४ सालमा मेजर जनरल शेर शमशेरको नाममा जारी भएको आदेशबाट ज्ञात हुन्छ ।[१२]

(२) **जङ्गी बन्दोबस्त सम्बन्धी कार्य**

शान्ति सुरक्षा कायम गर्न हरेक गौँडा, गढी र गोश्वारामा सैनिकहरू तैनाथ गरिएका हुन्थे । तिनीहरूलाई सुव्यवस्थित तरिकाले परिचालन गर्ने र जङ्गी बन्दोबस्तका आवश्यक सामग्रीको व्यवस्था मिलाउनु गौँडाका प्रशासकको काम, कर्तब्य र अधिकार हुन्थ्यो । पाल्पा गौँडाका प्रशासकको अधिनमा सबुज, बरख, इन्द्रध्वज र भवानीदल नामका चार पल्टन तथा राजदल र समर दल नामका मिलिसिया रहने गरेको कुरा नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालयमा रहेको पाल्पा गौँडाका प्रशासक खडग शमशेरको नाममा जारी भएको एक रुक्काबाट ज्ञात हुन्छ । यो अभिलेख अनुसार पाल्पा गौँडाका प्रशासकले आफ्नो मातहतका सैनिकको सङ्गठन गर्ने, भर्ना गर्ने, तालिम दिने अधिकार पाएका थिए । फौजी जवानहरूलाई कवाज खेलाउने, विदा दिने, काजमा खटाउने, तलब खुवाउने, कुनै कसुर गरेमा सजाय दिने र प्रत्येक महिना सैनिक प्रबन्ध बारे केन्द्रमा प्रतिवेदन पठाउने जिम्मेवारी पनि उनकै हुन्थ्यो । जङ्गी ऐनमा उल्लेख भएका कसुरमा भने सुवेदारभन्दा माथिका सैनिकलाई उनले सजाय गर्न सक्तैन्थे । आफ्नो मातहतका हातहतियार, खरखजाना, कारागार, सिलखाना, मेगजीन, पल्टन र कम्पनीका गारतको बारम्बार रेखदेख र निरीक्षण गरी अद्यावधिक लगत राख्न लगाउनु पनि उनको काम थियो ।[१३] यसका साथै ब्रिटिश गोरखा रेजिमेन्टमा भर्ती हुन जाने ब्यक्तिहरूको

अभिलेख राख्ने र पाल्पा गौंडाको प्रशासनिक क्षेत्रमा रहेका भर्ती केन्द्रलाई सहयोग गर्नु पनि उनको कर्तब्य भित्र पर्दथ्यो ।[३४] राणा शासनको पतनपछि वि.सं. २००९ सालमा सैनिक सङ्गठनमा पुनर्गठन हुँदा सैनिकहरू स्थानीय प्रशासकको अधिनमा रहने ब्यवस्था खारेज भएपछि पाल्पा गौंडाका प्रशासकको जङ्गी बन्दोबस्त सम्बन्धी अधिकार समाप्त भयो ।[३५]

(३) पजनी सम्बन्धी कार्य

गौंडाका प्रशासकले आफ्नो मातहतका जङ्गी र निजामती अड्डाका सैनिक तथा कर्मचारीको नियुक्ति, सरूवा, बढुवा र खोसुवा सम्बन्धी अधिकार पाएका थिए । त्यसका लागि उनले सालवसाली पजनी कागज तयार गरेर केन्द्रमा पठाउनु पर्दथ्यो भन्ने अग्रवालको भनाइ छ ।[३६] मेजर जनरल शेर शमशेरका नाममा जारी भएको सनदमा उल्लेख भए अनुसार पजनी गर्दा सैनिकतर्फ सुवेदार भन्दा माथि र निजामतीतर्फ नायब सुब्बा भन्दा माथिका सैनिक तथा कर्मचारीको नियुक्ति, सरूवा, बढुवा र खोसुवा गर्दा भने उनले केन्द्रको अनुमति लिनु पर्दथ्यो ।[३७] वि.सं. २०१३ सालमा निजामती सेवा ऐन बनेपछि भने कर्मचारीको बहाली तथा बर्खासी लोक सेवा आयोगको सिफारिसमा हुन थालेको थियो तापनि विभागीय कारबाही गर्दा भने गौंडाका बडाहाकिमको प्रमुख भूमिका रहन्थ्यो ।[३८]

(४) दौडाहा सम्बन्धी कार्य

पाल्पा गौंडाका प्रशासकहरूले प्रत्येक वर्ष कम्तीमा एकपटक आफ्नो प्रशासनिक क्षेत्रभित्र पर्ने इलाकाहरूको निरीक्षण गर्नका लागि दौडाहा गर्नु पर्दथ्यो । डेनियल डब्लु एडवार्डस्को भनाइ अनुसार गौंडाका प्रशासकले दौडाहाका बखत कर्मचारीहरूको कामकारबाहीको निगरानी गर्ने, ऐन, सनद र सवाल बमोजिम काम भएनभएको रेखदेख गर्ने, मूल्याङ्कन गर्ने, तोकिएको जिम्मेवारी पूरा नगर्ने कर्मचारीलाई सजाय गर्ने कार्य गर्दथे । दौडाहाका बेला स्थानीय जनताको पीर मर्का र सरकारी कर्मचारी विरुद्धका उजुरी सुन्ने काम पनि उनकै हुन्थ्यो ।[३९]

४.३ आर्थिक प्रशासन सम्बन्धी अधिकार क्षेत्र

वास्तवमा भन्ने हो भने गौंडा, गढी र गोश्वाराका प्रशासकहरूको मुख्य काम र कर्तब्य आफ्नो प्रशासनिक क्षेत्रबाट जतिसक्दो धेरै राजश्व सङ्कलन गर्नुका साथै सङ्कलित रकम हिनामिना हुन नदिनु थियो । त्यसका लागि आफ्नो प्रशासनिक क्षेत्रभित्रका माल, भन्सार, टकसार, खानी र वन-जङ्गलबाट हुने आम्दानीको रेखदेख

निरीक्षण गर्ने अधिकार उनकै हुन्थ्यो । पाल्पा गौँडाका प्रशासकहरूले आफ्नो प्रशासनिक क्षेत्रभित्र भएको सम्पूर्ण आम्दानीबाट अड्डा, अदालतका कर्मचारीहरूको तलब, भत्ता र अन्य आवश्यक कार्यमा खर्च गरी बाँकी रहेको रकम केन्द्रमा पठाउनु पर्दथ्यो भन्ने कुरा राष्ट्रिय अभिलेखालयमा रहेको पाल्पामा सालवसाल रहने अख्तियार भारदारले गर्ने कामको सवाल १८९४ बाट थाहा हुन्छ ।[४०] पाल्पा गौँडाका प्रशासकले आफ्नो इलाकामा राजश्वबाट भएको आम्दानीको हिसाबकिताब दुरुस्त राख्नु पर्दथ्यो । त्यसो नगरेमा केन्द्रबाट जाँचकी पठाई लेखापरीक्षण गर्न लगाइन्थ्यो र रकम हिनामिना भएको ठहरेमा प्रशासकलाई कारबाही समेत हुन्थ्यो । यसको उदाहरणको लागि वि.सं. १८९० को एक आदेशलाई लिन सकिन्छ । यो आदेशमा पाल्पाका प्रशासक बख्तावरसिंह थापाले राजश्व हिनामिना पारेको आरोप लागेकोले लेखापरीक्षण गर्न डिठ्ठा कालीदास पन्थको नेतृत्वमा लेखापरीक्षक पठाइएको ब्यहोरा उल्लेख छ ।[४१] त्यस्तै वि.सं. १९९७ सालमा पाल्पा गौँडाका कर्मचारीहरूले भ्रष्टाचार गरेको थाहा पाएर त्यसको छानबिन गर्न केन्द्रबाट पाल्पा गौँडामा लेखापरीक्षक पठाउँदा भ्रष्टाचार भएको ठहरेपछि सो गौँडाका तैनाथवाला रुद्र शमशेरलाई चेतावनी दिइएको थियो ।[४२]

पाल्पा गौँडाका प्रशासकको अधिनमा तीन साँचा अड्डा, माल अड्डा र अडिटर अड्डा रहेका थिए । तीनसाँचा तहबिल अड्डाको तीन वटा साँचा मध्ये एउटा साँचो पाल्पा गौँडाका प्रशासकको जिम्मामा रहने कुरा सो अड्डाको नाममा जारी भएको सवालबाट ज्ञात हुन्छ ।[४३]

## ४.४ न्याय प्रशासन सम्बन्धी अधिकार क्षेत्र

गौँडा, गढी र गोश्वाराका प्रशासकलाई आफ्नो अधिनमा रहेको प्रशासनिक क्षेत्रभित्र परिआउने देवानी तथा फौजदारी दुवै किसिमका विवादको शुरु मुद्दा हेर्ने र पुनरावेदन सुन्ने अधिकार थियो । उनलाई आफ्नो मातहतका कर्मचारी तथा गाउँका तालुकदारहरूका विरूद्ध जनताको उजुरी सुन्ने अधिकार पनि थियो । कृष्णकान्त अधिकारीको भनाइ अनुसार पाल्पा गौँडाका प्रशासकले आफ्नो प्रशासनिक क्षेत्रभित्रका आश्रित राज्यका राजा रजौटाहरूद्वारा गरिएका अन्याय, अत्याचारका विरूद्ध रैतीले गरेका उजुरी सुन्ने अधिकार समेत पाएका थिए ।[४४] आफ्ना अधिनमा रहेका अदालतबाट भएका फैसलाउपर पुनरावेदन सुन्ने, आफ्नो मातहतमा रहेका अदालतहरूको निरीक्षण, सुपरीवेक्षण गर्ने र ती अदालतका हाकिम, कारिन्दाले ढिलासुस्ती वा भ्रष्टाचार गरेमा दण्डसजाय गर्ने अधिकार समेत गौँडाका प्रशासकले पाएको कुरा अग्रवालले बताएका

छन् ।[४५] त्रिरत्न मानन्धरको भनाइ अनुसार वि.सं. १९९४ सालमा जारी गरिएको न्याय प्रशासन सम्बन्धी सनदले कार्यपालिका र न्यायपालिकाको अधिकार क्षेत्र पृथक गरेपछि गौँडाका प्रशासकको न्यायिक अधिकार पनि कटौती भएको थियो । त्यसपछि पाल्पा गौँडाका प्रशासकको न्याय प्रशासन सम्बन्धी अधिकार पनि समाप्त भएको थियो ।[४६]

### ४.५ सार्वजनिक कल्याणका कार्य सम्बन्धी अधिकार क्षेत्र

पाल्पा गौँडाका प्रशासकले आफ्नो अधिनमा रहेका इलाकाभित्रका प्राकृतिक सम्पदाको संरक्षण गर्ने, धार्मिक तथा साँस्कृतिक स्थलको संरक्षण गर्ने, बाटो, घाट र पुल निर्माण गर्न लगाउने तथा गुठीको रेखदेख संरक्षण गर्ने अधिकार पाएका थिए । पाल्पा गौँडाका प्रशासक मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ सालमा भएको सनद अनुसार उनलाई रानीघाटको रानी महल र त्यसको वरपरको वनजङ्गल संरक्षण गर्न जोड दिइएकोले यो कुराको पुष्टि हुन्छ ।[४७]

प्रजातन्त्रको स्थापनापछि गौँडाका प्रशासकको काम, कर्तब्य र अधिकार क्षेत्रमा पनि परिवर्तन भयो । उनले नगरपालिका र गाउँ पञ्चायतको निर्वाचन गराउने, भ्रष्टाचार र कालो बजारी निर्मूल पार्ने, आवश्यक मालसामानको आपूर्ति गराउने, नागरिकता वितरण गर्ने, हातहतियार खरखजानाको लाइसेन्स दिने र विद्यालयहरूका सञ्चालक समितिका अध्यक्ष तोक्ने अधिकार पनि पाएको कुरा जिल्ला प्रशासनको दिग्दर्शनबाट ज्ञात हुन्छ ।[४८]

### ४.६ ब्रिटिस भारतसँग राम्रो सम्बन्ध राख्ने कार्य

पाल्पा गौँडाका प्रशासकलाई ब्रिटिस भारतका प्रशासकसँग पनि असल सम्बन्ध राख्ने कार्यको जिम्मेवारी सुम्पिइएको थियो । पाल्पामा सालवसाल रहने अख्तियार भारदारले गर्ने काजको सवाल १८९४ मा उल्लेख भए अनुसार सीमा क्षेत्रमा आफ्नो तर्फबाट तडकभडक नदेखाउन र उताबाट हुने खतराबाट मुलुकलाई जोगाउन नाकाहरूमा विशेष सुरक्षाको ब्यवस्था गर्न निर्देशन दिइएको थियो ।[४९] पाल्पा गौँडाका प्रशासकलाई छिमेकी मुलुक भारतको गोरखपुरसँग सिमाना जोडिएका इलाका खास गरेर बुटवल चारतप्पा (पाल्ही, माझखण्ड, खजहनी र स्युराज) क्षेत्रका बासिन्दाको भारतका बासिन्दासँग हुने विवादमा मध्यस्थकर्ताको भूमिका निर्वाह गर्ने जिम्मेवारी पनि दिइएको थियो ।[५०]

## ५. निष्कर्ष

नेपालको एकीकरणपश्चात् शान्ति, सुरक्षा कायम गर्न र राजश्व सङ्कलन गर्नका लागि मुलुकलाई विभिन्न प्रशासनिक एकाइहरूमा विभाजन गरिएको थियो । त्यस सिलसिलामा पाल्पा पनि नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक केन्द्र बन्न गएको थियो । प्रशासनिक तथा ऐतिहासिक दृष्टिले महत्वपूर्ण हुनाले पाल्पामा अधिक सङ्ख्यामा सैनिक तैनाथ गरिएको थियो । सामरिक दृष्टिले महत्वपूर्ण केन्द्र हुनाले यसलाई पाल्पा गौंडा भनिन्थ्यो । न्याय प्रशासनको दृष्टिले यो गौंडा नेपालको पश्चिमी क्षेत्रको अपिल अड्डा थियो तापनि जङ्गी तथा निजामती प्रशासनको दृष्टिले यसको अधिनमा अर्घा, इश्मा, खाँची, गलकोट, गुल्मी, धुर्कोट, पर्वत, पाल्पा र मुसिकोट नामका पुराना राज्यले चर्चेको भूभाग थियो । त्यसैले यो गौंडा ऐतिहासिक, सामाजिक र आर्थिक दृष्टिले महत्वपूर्ण हुनाले यो गौंडामा उच्च पदस्थ र सक्षम ब्यक्तिलाई प्रशासक बनाउने चलन थियो । यो गौंडाका प्रशासकहरूको नियुक्ति प्रक्रियालाई बुँदागत रूमा यसरी किटान गर्न सकिन्छ ।

### (१) उच्च पदस्थ ब्यक्ति हुनु

पाल्पा गौंडामा खटाइने ब्यक्तिहरू केन्द्रीय सत्ताको उच्च पदमा रहेका ब्यक्ति हुन्थे । राणा शासनकालपूर्व चौतरिया, काजी, जनरल वा कर्णेल दर्जाका ब्यक्तिलाई यो गौंडाका प्रशासक बनाइन्थ्यो भने राणा शासनकालमा कमाण्डर इन चिफ, मेजर जनरल, जनरल र कर्णेल पदमा बहाल रहेका ब्यक्तिलाई यो गौंडाको प्रशासक बनाउने गरेको पाइन्छ । राणा शासनको पतनपछि भने निजामतीतर्फका प्रथम श्रेणीका ब्यक्तिलाई यो गौंडाको बडाहाकिम बनाइन्थ्यो ।

### (२) मुख्तियार वा प्रधानमन्त्रीको नातेदार हुनु

पाल्पा गौंडाको महत्वलाई बुझेर केन्द्रीय प्रशासकहरूले यो गौंडामा आफ्ना नातेदारलाई प्रशासक बनाएर पठाउने गरेको पाइन्छ । भीमसेन थापा नेपालको मुख्तियार हुँदा उनका भाइ र भतिजा यो गौंडाका प्रशासक हुनु, रणजङ्ग पाँडेका पालामा पाँडे खलकका ब्यक्तिहरू र चौतरिया फत्तेजङ्ग शाहको मुख्तियारी कालमा उनका भाइहरू तथा राणा शासनकालमा राणा खलकका ब्यक्तिहरू मात्र यो गौंडाका प्रशासक हुनु यसका उदाहरण हुन् जुन कुरा माथि दिइएका तालिकाहरूबाट स्पष्ट हुन्छ ।

### (३) प्रधानमन्त्रीको रोलक्रममा रहेको ब्यक्ति प्रशासक हुनु

पाल्पा गौंडा प्रशासनिक दृष्टिकोणले महत्वपूर्ण हुनाले प्रधानमन्त्रीको

रोलक्रममा रहेका व्यक्तिलाई प्रशासन सम्बन्धी काम सिकाउन यो गौंडाको प्रशासक बनाएर पठाउने चलन थियो । ती व्यक्ति पछि नेपालको प्रधानमन्त्री समेत हुन्थे । प्रधानमन्त्रीको रोलक्रममा रहेका कृष्णबहादुर कुँवर, केदारनरसिंह राणा, वीर शमशेर, भूपेन्द्रजङ्ग राणा, अम्बरजङ्ग राणा र भीम शमशेर यो गौंडाका प्रशासक भएका थिए । यी व्यक्तिहरूमध्ये वीर शमशेर वि.सं. १९४२-५८ र भीम शमशेर वि.सं. १९८६-८९ मा नेपालको प्रधानमन्त्री भएका थिए ।

**(४) प्रधानमन्त्रीको रोलक्रमबाट हटाइएका व्यक्ति प्रशासक हुनु**

पाल्पा गौंडा नेपालको राजधानी काठमाडौं पछिको दोस्रो महत्वपूर्ण प्रशासनिक केन्द्र हुनाले प्रधानमन्त्रीको रोलक्रमबाट हटाउनु पर्ने तर प्रशासनको जिम्मेवारीबाट पन्छाउन नमिल्ने उच्च पदस्थ व्यक्तिलाई यो गौंडाको प्रशासक बनाएर पठाउने चलन थियो । प्रधानमन्त्रीको रोलक्रमबाट हटाएर यो गौंडाको प्रशासक बनाइएका राणहरूमध्ये कमाण्डिङ जनरल जस्तो प्रधानमन्त्रीको तेस्रो रोलक्रमको पदमा पुगेका बद्रीनरसिंह राणा तथा कमाण्डर इन चिफ जस्तो प्रधानमन्त्रीको दोस्रो रोलक्रमको पदमा पुगेका खड्ग शमशेर र रुद्र शमशेर थिए ।

पाल्पा गौंडा नेपालको महत्वपूर्ण प्रशासनिक केन्द्र हुनाले यो गौंडाका प्रशासकले अनेकौं अधिकार पाएका थिए । यो गौंडाका प्रशासकले पाएको अधिकार क्षेत्रले यो गौंडाको प्रशासनिक क्षेत्रमा पारेको असर र प्रभावलाई निम्न लिखित बुँदाहरूमा चर्चा गर्न सकिन्छ ।

**(क) नेपालको पश्चिमी क्षेत्रका सैनिक प्रशासक**

यो गौंडाका प्रशासक नेपालको पश्चिमी क्षेत्रका सेनिक प्रमुख पनि थिए । नेपालको राजधानी काठमाडौं पछि अधिक सङ्ख्यामा सैनिक तैनाथ गरिएको क्षेत्र पाल्पा गौंडा थियो । नेपाल-अङ्ग्रेज युद्ध, भारतमा भएको विद्रोह र दुवै विश्वयुद्धमा यो गौंडाका सेनिकहरू सहभागी भएका थिए जसको नेतृत्व यस गौंडाका प्रशासकले गरेका थिए ।

**(ख) नेपालको पश्चिमी क्षेत्रको न्याय प्रशासनका प्रमुख**

पाल्पामा केन्द्रीय सत्ताका उच्च ओहदाका व्यक्ति प्रशासक भएर आउने हुँदा उनीहरूले न्याय प्रशासनमा पनि विशेषधिकार पाएका हुन्थे । राणा शासनकालपूर्व सानोतिनो विवादमा पनि केन्द्रमा साधक पठाएर प्राप्त आदेश अनुसार मात्र फैसला गर्नुपर्ने झञ्झट भएकोले यो गौंडाका प्रशासक उजिरसिंह थापाले वि.सं. १८७९ मा '

जती तथा निजामती स्थिति बन्देज' नामक ऐनको मस्यौदा तयार गरेका थिए। नेपालको कानुनी इतिहासमा यो कार्य निकै महत्वपूर्ण मानिन्छ। यो गौंडाका प्रशासकले आफ्नो प्रशासनिक क्षेत्रको शुरु अदालतको मात्र होइन डोटी गौंडाले गरेको फैसलाउपर पनि पुनरावेदन सुन्ने अधिकार पाएका थिए। त्यस्तै आफ्नो प्रशासनिक क्षेत्रभित्रका आश्रित राज्यका राजाले गरेका अन्याय र अत्याचार विरुद्ध रैतीले गरेका उजुरी सुन्ने अधिकार पनि यो गौंडाका प्रशासकलाई थियो।

**(ग) सार्वजनिक महत्वका स्थलको निर्माण**

पाल्पा गौंडाका प्रशासकले आफूले पाएको विकास-निर्माण सम्बन्धी अधिकार तथा धार्मिक, साँस्कृतिक सम्पदाको उत्थान र संरक्षण सम्बन्धी काम, कर्तव्यको सदुपयोग गरी सार्वजनिक कल्याणका अनेकौं कार्यहरू गरेको पाइन्छ। यस गौंडाका पहिलो प्रशासक अमरसिंह थापाले अमरगञ्ज पौवा, अमरविनायक मन्दिर, अमरेश्वर महादेव मन्दिर र कलात्मक अमरनारायण मन्दिर निर्माण गराउनु यसको उदाहरण हो। कर्णेल उजिरसिंह थापाले निर्माण गराएको भगवती मन्दिर र सो मन्दिरको मूर्ति तथा उनले चलाएको भगवती जात्रा यस क्षेत्रका धार्मिक तथा साँस्कृतिक सम्पदा हुन्। त्यस्तै बखतावरसिंह थापाको पालामा आधुनिक तानसेन बजार निर्माणको जग बसेपछि तानसेन दरबार र त्यसको आसपासकका विभिन्न संरचनाको निर्माण भएको थियो। राणा शासनकालमा पाल्पाको प्रशासनिक क्षेत्रका विभिन्न धार्मिक, साँस्कृतिक र अन्य सार्वजनिक महत्वका स्थलहरूको निर्माण तथा संरक्षणमा ध्यान दिएको पाइन्छ। बद्रीनरसिंह राणाद्वारा निर्मित बद्रेश्वर शिवालय, तीनधारा र पोखरी, वीर शमशेरद्वारा निर्मित विष्णुपादुका तथा खड्ग शमशेरले निर्माण गराएका बग्गी ढोका, शीतलपाटी र रानीमहलले यो भनाइको पुष्टि गर्दछन्। बुद्धधर्मका प्रवर्तक गौतम बुद्धको जन्मस्थल लुम्बिनीमा रहेको अशोक स्तम्भको उत्खननमा पनि खड्ग शमशेरको महत्वपूर्ण योगदान रहेको छ। पाल्पामा पाश्चात्य शैलीको दरबार र आधुनिक कारागार भवन निर्माण तथा तानसेन बजारमा खानेपानीको ब्यवस्था गर्नमा प्रताप शमशेरको महत्वपूर्ण योगदान छ। यसरी पाल्पा गौंडाका प्रशासकहरूले धार्मिक तथा साँस्कृतिक सम्पदाको निर्माण र संरक्षणमा ध्यान दिएको हुनाले नै संभ्रान्त वर्गका विभिन्नब्यक्तिहरूले पनि तानसेनमा अनेकौं कलात्मक भवन तथा महल निर्माण गरेका थिए। यसमध्ये लहरेपिपलमा निर्मित गुरुज्यूको महल (हाल त्रिभुवन बहुमुखी क्याम्पस रहेको भवन) आधुनिक पाश्चात्य कलाको अनुपम नमुना मानिन्छ। यसैगरी तानसेन बजारका विभिन्न स्थानमा निर्मित मठ, मन्दिर, चैत्य तथा विहार र ब्यक्तिगत घरहरूमा पाइने वास्तुकला र काष्ठकला

जस्ता साँस्कृतिक संपदा पनि पाल्पा गौंडाका प्रशासकहरूकै संरक्षण पाएर संरक्षित भएको मान्नु पर्दछ ।

यसरी पाल्पा गौंडाको स्थापनाले नेपालको पश्चिमी क्षेत्रको गरिमा बढाएको थियो भने यो गौंडामा खटिएर आएका प्रशासकहरूको क्रियाशीलताले यो क्षेत्रको गरिमा बढाएको थियो । नेपालमा वि.सं २०१८ मा नयाँ किसिमको प्रशासनिक व्यवस्था भएपछि यो गौंडाको महिमा घट्न गयो । त्यसपछि पाल्पा लुम्बिनी अञ्चलका छ जिल्ला मधयेको एक पहाडी जिल्लाको रूपमा मात्र रहन गयो ।

**टिप्पणी**

१ देवीप्रसाद भण्डारी(सम्पा.) "ऐ.शि. बाबुराम आचार्यले रचना गर्नु भएको नेपालको संक्षिप्त इतिहास", **पूर्णिमा**, वर्ष १६, अङ्क ४, पूर्णाङ्क ६४, वि.सं. २०४१, पृ.८ ।

२ शिवप्रसाद शर्मा र अन्य (सम्पा.), **नेपालको सैनिक इतिहास**, काठमाडौं : शाही नेपाली जङ्गी अड्डा, वि.सं. २०४९, पृ. ३८२ ।

३ सतिश कुमार, **राणा पोलिटी इन नेपाल : ओरिजिन एण्ड ग्रोथ**, एसिया पब्लिशिङ हाउस, सन् १९६७, पृ. १०७ ।

४ कृष्णकान्त अधिकारी,**नेपाल अण्डर जङ्गबहादुर १८४६-१८७७**,काठमाण्डु: बुकु, सन्१९८४,पृ.२१२ ।

५ कर्णबहादुर बानियाँ क्षत्री, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पब्लिकेशन एण्ड डिस्ट्रिब्यूसन प्रा.लि., वि.स.. २०६३, पृ.२६-३५ ।

६ फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल एण्ड अफ द टेरिटरीज एनेक्स्ड् टु दिस डोमिनियन बाई द हाउस अफ गोर्खा**, (रिप्रिन्ट), न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिसेज, सन् १९८६, पृ.१०४-१०५ ।

७ हेमनारायण अग्रवाल,**द एड्मिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल फ्रम ट्रेडिसन टु मोडर्निटी**, न्यू दिल्ली : विकास पब्लिसिङ हाउस, सन् १९७६, पृ. ७४ र ७९ ।

८ जदुनाथ सरकार, **मुगल एड्मिनिस्ट्रेशन**, (फोर्थ एडिशन), कलकत्ता : एम.सी. सरकार एण्ड सन्स लि., सन् १९५२, पृ.३ ।

९ बानियाँ क्षत्री, **पूर्ववत्**, टिप्पणी नं ५, पृ.३६-५२ ।

१० (क) चित्तरञ्जन नेपाली, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, (तेस्रो संस्करण), काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं.२०३५, पृ.१६०-६१ । (ख) अधिकारी, **पूर्ववत्**, टिप्पणी नं ४, पृ.२६१-६२ ।

११ कम्याण्डरी किताब,१९२१-२००२ साल, पहाड पूर्वपश्चिम गौंडा,राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

१२ **नेपाल गजेट,** २०१० साल आषाढ २ गते ।

१३ बानियाँ क्षत्री, **पूर्ववत्,** टिप्पणी नं ५, पृ.३७-५१ ।

१४ **उही,** पृ.३८-४२ ।

१५ उही, पृ.४५-४६ ।

१६ उही ।

१७ उही, पृ.४७-४८ ।

१८ भवेश्वर पंगेनी, **पाल्पामा प्रजातान्त्रिक आन्दोलनका सयदिन, वि.सं. २००७,** पाल्पा : निमा पंगेनी, वि.सं. २०४९, पृ.२२-३२ ।

१९ अग्रवाल, पूर्ववत्, टिप्पणी नं ७, पृ.१८०-९९ ।

२० **नेपाल गजेट,** २०१० साल आषाढ २ गते ।

२१ मंगलकृष्ण श्रेष्ठ, जिल्ला प्रशासनको नयाँ योजना", **प्रशासन,** वर्ष ६, अङ्क ३, पूर्णाङ्क १३, वि.सं.२०३२, पृ. ६३ ।

२२ 'पाल्पा, गुल्मी, अर्घा र खाँची राज्यमा जग्गा जाँच गर्नु भन्ने काजी दलभञ्जन पाँडे समेतका नाममा जारी भएको वि.सं. १८६२ वैशाख वदी १० को सवाल", माइक्रोफिल्म रिल नं. ई २३९२/१, पृ. ५६८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

२३ धनवज्र वज्राचार्य र ज्ञानमणि नेपाल (सम्पा.), **ऐतिहासिक पत्र संग्रह,** काठमाडौं : नेपाल सांस्कृतिक परिषद, वि.सं. २०१४, पृ. १०१-१०३ ।

२४ शंकरमान राजवंशी (सम्पा.), **शाहकालीन ऐतिहासिक चिठीपत्र संग्रह,** भाग १, काठमाडौं : श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, वीर पुस्तकालय, वि.सं. २०२३, पृ.१७९-१८१ ।

२५ **उही,** पृ. ११६-१९ ।

२६ अधिकारी, **पूर्ववत्,** टिप्पणी नं ४, पृ.२६०-६१ ।

२७ कम्याण्डरी किताब, १९३७ साल, पहाड पूर्व पश्चिम, सि. नं. १०९-१०, मू. नं. २०-२१, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

२८ के. एम. मल्ल, **नेपाल : अ जनरल जोग्राफिकल एकाउन्ट,** काठमाण्डु : धर्मोदय सभा, फोर्थ वर्ल्ड बुद्धिस्ट कन्फरेन्स, मिति अनुल्लिखित, पृ. ३५ ।

२९ बानियाँ क्षत्री, **पूर्ववत्,** टिप्पणी नं ५, पृ.२९-३५ ।

३० मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी

भएको खड्ग निशान रुक्का", सवाल नं.२, सि.नं. ११८(१०५), तेस्रो भाग किताब, नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

३१ योगी नरहरिनाथ, **इतिहास प्रकाशमा सन्धिपत्र संग्रह**, दाङ : आध्यात्मिक सम्मेलन, वि.सं.२०२२, पृ. १४१-४२ ।

३२ "मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी भएको खड्ग निशान रुक्का", सवाल नं.१९, सि.नं. ११८(१०५), तेस्रो भाग किताब, नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

३३ "श्री कम्याण्डर इन चिफ खड्ग शमशेरको पालामा मिलिसिया ४ पल्टनहरूको तालिम र २ पल्टन नयाँ थप गरी ड्युटी गराउने तथा रुक्का दस्खत समेतको नक्कल किताब", सि.नं. ६१(५१), तेस्रो भाग किताब, नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

३४ अग्रवाल, **पूर्ववत्**, टिप्पणी नं ७, पृ.८१ ।

३५ **जिल्ला प्रशासन दिग्दर्शन**, श्री ५ को सरकार, राष्ट्रिय निर्देशन मन्त्रालय, प्रचार तथा प्रसार विभाग, वि.सं.२०१८, पृ.४-५ ।

३६ अग्रवाल, **पूर्ववत्**, टिप्पणी नं ७, पृ.८२ ।

३७ "मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी भएको खड्ग निशान रुक्का", सवाल नं.१०, सि.नं. ११८(१०५), तेस्रो भाग किताब, नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

३८ **जिल्ला प्रशासन दिग्दर्शन**, टि.नं. ३५, पृ.७०-७१ ।

३९ डेनियल डब्लु. एड्वार्डस्, "दौडाहा (इन्स्पेक्सन टूर) सिस्टम अण्डर द राणाज", **कन्ट्रीब्यूसन टु नेप्लिज स्टडिज**, भोलुम ३, नं. २, सन् १९७६, पृ. १० ।

४० "पाल्पामा सालवसाल रहने अख्तियार भारदारले गर्ने काजको सवाल १८९४", **पन्ध्रौं सवाल**, माइक्रोफिल्म रिल नं. ई २४३३/१, पृ. ६८२-८८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४१ "वि.सं. १८९० पौष शुदी ११ को पाल्पा जाँच सवाल", माइक्रोफिल्म रिल नं. ई २४३३/१, पृ.४५६-५७, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४२ एड्वार्डस्, **पूर्ववत्**, टिप्पणी नं ३९, पृ.७६ ।

४३ "पाल्पा तीन साँचाको सवाल वि.सं.१९९२-२००२", पृ.५४ । (श्री ३ महाराज र कम्याण्डर इन चिफबाट पाल्पा तीन साँचा अड्डाका नाममा जारी गरिएको वि.सं. १९९२ देखि २००२ सम्मका दुई छापे सनद सवालहरूको सङ्कलन

गरिएको, नेपाली कागजमा लेखिएको, छालाको जिल्द भएको १३६ पृष्ठको किताब, मालपोत कार्यालय, पाल्पा )।

४४ अधिकारी, **पूर्ववत्**, टिप्पणी नं ४, पृ.२२४-२५ ।

४५ अग्रवाल, **पूर्ववत्**, टिप्पणी नं ७, पृ.८२ ।

४६ त्रिरत्न मानन्धर, **सम आस्पेक्टस् अफ राणा रुल इन नेपाल**, काठमाण्डु : पूर्णदेवी मानन्धर, सन् १९८३, पृ.६३-६४ ।

४७ "मेजर जनरल शेर शमशेरको नाममा वि.सं. १९६४ साल माघ २० गते जारी भएको खड्ग निशान रुक्का", सवाल नं.१७, सि.नं. ११८(१०५), तेस्रो भाग किताब, नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

४८ **जिल्ला प्रशासन दिग्दर्शन**, टि.नं. ३५, पृ.२७-२९ ।

४९ "पाल्पामा सालवसाल रहने अख्तियार भारदारले गर्ने काजको सवाल १८९४", तेस्रो र पाँचौं सवाल, माइक्रोफिल्म रिल नं. ई २४३३/१, पृ. ६८२-८६, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

५० अधिकारी, **पूर्ववत्**, टिप्पणी नं ४, पृ.२२४-२५ ।

# ७. राणा शासनकालको अन्तिम दशकतिर पाल्पा गौँडाको आर्थिक व्यवस्था

## १. विषय प्रवेश

वर्तमान लुम्बिनी अञ्चलमा पर्ने एक पहाडी जिल्लाका रूपमा रहेको पाल्पा मध्यकालमा चौबिसे राज्यहरूमध्ये प्रमुख थियो जहाँ सेनवंशी राजाहरूले राज्य गर्दथे। पाल्पा विशाल नेपालमा गाभिएपछि पनि यसको महत्व घटेन। राणा शासनकालसम्ममा आइपुग्दा त पाल्पा गौँडा पश्चिम नेपालको सैनिक, प्रशासनिक, आर्थिक र न्याय प्रशासनको केन्द्र नै बन्न गएको पाइन्छ।

राणा शासनकालको अन्तिम दशक अर्थात् वि.सं. १९९० पछि पश्चिम नेपालको केन्द्रका रूपमा रहेको पाल्पा गौँडाको आर्थिक अवस्था कस्तो थियो ? यो गौँडाको प्रशासनिक क्षेत्रमा उठ्ने राजश्वका स्रोतहरू के के थिए ? यस क्षेत्रमा राजश्व परिचालन कसरी गरिएको थियो ? मानिसहरू के कस्ता पेशा, व्यवसाय र उद्योगधन्दामा संलग्न थिए ? यस क्षेत्रमा के कस्ता उद्योग र खानी सञ्चालन भएका थिए ? भूमि व्यवस्था के कस्तो थियो ? भन्ने जस्ता विषयहरूमा प्रकाश पार्ने उद्देश्यले यो लेख तयार गरिएको छ।

## २. पाल्पा गौँडाको संक्षिप्त परिचय

सेनवंशको शासन शुरु हुनुभन्दा पहिले पाल्पा क्षेत्रलाई 'मगराँत' भनिन्थ्यो। मगराँत क्षेत्रका भुरे राजहरूलाई समाप्त पारेर रुद्रसेनले वि.सं. १५५० मा सेनवंशको शासन स्थापना गरेका थिए।[१] नेपाल एकीकरणको सिलसिलामा वि.सं. १८६१(सन् १८०४)मा पाल्पा राज्य नेपालमा विलिन हुन पुग्यो।[२] पाल्पा राज्य नेपालमा विलय भएपछि नेपालको एकीकरण कार्य करिब पूरा भएको र सुगौली सन्धिपछि त एकीकरण कार्य समाप्त जस्तै हुन गएकोले शासकहरूको ध्यान प्रशासनिक सुदृढिकरणतिर गएको पाइन्छ। राणाकाल पूर्व के कसरी प्रसासनिक एकाइ विभाजन गरिएको थियो भन्ने कुरा स्पष्ट छैन। राणा शासनकालको प्रारम्भसम्म पनि जिल्ला विभाजनको निश्चित आधार तयार नभएकाले जिल्लामा खटिएका तैनाथवालाको क्षमताको आधारमा प्रशासनिक क्षेत्र निर्धारण गर्ने परम्परम कायम रहेको पाइन्छ। राणाशासनका संस्थापक जंगबहादुरले पाल्पालाई केन्द्र बनाई पश्चिमी नेपालको प्रशासनिक रेखदेख गर्ने जिम्मा खड्गबहादुर

कुवँरलाई दिँदा लेखिएको कागजबाट सो कुराको पुष्टि हुन्छ । उक्त कागजमा यस्तो लेखिएको छ-'आगे श्री मद्राजकुमार कुमारात्मज कर्णेल षड्गबहादुर कुवँर राणाजीकै काली पश्चिम महाकालि पूर्व मध्येस पाहाड बन्दोबस्त मुलुकको पानी टक्सार रुगुम थाक गैहू औ गोर्षाका थरघरका पजनीमा गोर्षाका सुवा षर्दारको पजनी यहाँबाट होला अरु थरघरको पजनी पाल्पा तहबिल अदालतका कारिन्दा स्मेत श्री बरष पल्टन तैनाथ राषि पाल्पा मुहुडाको अष्तियारी दियुँ....'[३]

वीरशमशेरले उक्त अनिश्चितालाई हटाएर वि.सं. १९५२ (सन् १८९५)मा नेपालको तराई इलाकालाई १२ र पहाडी इलाकालाई २३ जिल्लामा विभाजन गरे ।[४] पाल्पा उक्त जिल्ला विभाजनको हिसाबले पूर्वमा चिसापानी, उत्तरमा पश्चिम ४ नं.स्याङ्जा, पश्चिममा गुल्मी र दक्षिणमा पाल्ही-माझखण्डसँग सिमाना जोडिएको एक पहाडी जिल्ला थियो ।[५] त्यसबखत प्रशासन र जङ्गी बन्दोबस्त सम्बन्धी काम गर्ने स्थानीय निकायलाई गोश्वरा, गढी वा गौँडा भनिन्थ्यो । पहाडी इलाकामा त्यस्ता निकायलाई गौँडा भनिन्थ्यो ।[६] पाल्पा पनि नेपालको पश्चिमी क्षेत्रको प्रशासन र जङ्गी बन्दोबस्तको काम हेर्ने केन्द्र थियो । यसलाई पाल्पा गौँडा भनिन्थ्यो । आर्थिक प्रशासनको दृष्टिले पश्चिम नेपालका गुल्मी, प्यूठान, दैलेख, सल्यान, डोटी, जुम्ला बैतडी, दाङदेउखुरी आदि सम्पूर्ण पहाडी जिल्लाहरूमा पाल्पा गौँडाको नियन्त्रण कायम भएको देखिन्छ ।[७] सैनिक र आर्थिक प्रशासनका हिसाबले पाल्पा गौँडाको पश्चिम नेपालका सम्पूर्ण क्षेत्रमा नियन्त्रण कायम भएतापनि निजामती प्रशासनका दृष्टिले भने पाल्पा र गुल्मी समेत आठ जिल्ला अर्थात् पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसीकोट, पर्वत, गलकोट र धुर्कोट समेत जम्मा नौ जिल्लामा मात्र यसको प्रशासन कायम भएको पाइन्छ ।[८] यद्यपी वीरशमशेरको समयमा गरिएको जिल्ला विभाजन अनुसार यी नौ जिल्लालाई मिलाएर पाल्पा, गुल्मी र बाग्लुङ नामका तीन वटा जिल्ला मात्र कायम गरिएको थियो तापनि यो क्षेत्रलाई पाल्पा र गुल्मी समेत नौ जिल्ला भन्ने परम्परा राणा शासनकालभर यथावत नै रहेको थियो ।[९] यस प्रकार पाल्पा गौँडाको वास्तविक प्रशासनिक क्षेत्र पाल्पा, गुल्मी, अर्घा, खाँचो, इस्मा, मुसीकोट, पर्वत, गलकोट, र धुर्कोटले चर्चेको क्षेत्र देखिएको हुनाले यहाँ त्यही क्षेत्रको आर्थिक अवस्थाको बारेमा चर्चा गर्ने जमर्को गरिन्छ ।

## ३. पाल्पा गौँडाको आर्थिक व्यवस्था

राणा शासनकालको पाल्पा गौँडाको आर्थिक अवस्थालाई निम्न शिर्षकहरूका आधारमा अध्ययन गर्न सकिन्छ ।

### ३.१ राजश्व परिचालन सम्बन्धी व्यवस्था

राणा शासनकालमा गौंडाका हाकिमको मुख्य काम राजश्व असुली गर्नु र आम्दानीका स्रोतहरू बढाउनु नै हुन्थ्यो । जिल्लाबाट जति राजश्व बृद्धि गर्न सक्यो त्यति नै बडाहाकिमको सम्बन्ध प्रधानमन्त्रीसँग राम्रो हुँदै जान्थ्यो । त्यसकारण गौंडाका बडाहाकिमहरूले आम्दानीका स्रोतहरू ठीकसँग परिचालन गर्दथे र नयाँ नयाँ स्रोतहरूको खोजी पनि गर्दथे ।[१०] राणाशासनकालमा खडा गरिएका जिल्लाका प्रायजसो अड्डाहरूको काम राजश्व सङ्कलन गर्नु नै थियो । विभिन्न अड्डाहरूमा सङ्कलन गरिएको रकम तीन साँचा अड्डामा जम्मा गरिन्थ्यो । जिल्लामा जे जति खर्च गर्नुपर्छ त्यो सबै तीन साँचा अड्डाबाटै गरिन्थ्यो । श्री ३ को हुकुम प्रमांगी अनुसार मात्र खर्च गर्न पाइन्थ्यो । हुकुम प्रमांगी नभएको कार्यमा खर्च गरेमा वा सरकारको कुनै हानी नोक्सानी हुने काम गरेमा त्यस्तो गर्ने अड्डाले नै सो हानी नोक्सानी बेहोर्नु पर्दथ्यो ।[११]

#### (क) तीनसाँचा अड्डा

पाल्पा गौंडाको सदरमुकाम तानसेनको दरबार क्षेत्रमा अवस्थित यो अड्डा राजश्व परिचालनका लागि मुख्य मानिन्थ्यो । यसमा लगाइएका तीनवटा साँचामध्ये क्रमशः एउटा गौंडाको तैनाथवाला, तीन साँचा अड्डाका हाकिम र जङ्गी गारथमा राखिन्थ्यो । सो अड्डामा रकम जम्मा गर्दा वा झिक्नुपर्दा तीनवटै अड्डाका हाकिम वा प्रतिनिधि उपस्थित हुनु पर्दथ्यो ।[१२] पाल्पाको तीनसाँचा अड्डामा देहायका अड्डाहरूबाट रकम जम्मा गरिन्थ्यो-

(१) गुल्मी समेत ८ जिल्ला माल (२) पाल्पा माल
(३) प्यूठान माल (४) दाङदेउखुरी माल
(५) देलेख माल (६) जुम्ला माल (७) पाल्पा अदालत
(८) रिडी हुलाक (९) पाल्पा हुलाक (१०) सल्यान तीनसाँचा
(११) डोटी गौंडाका खालीखन्दे र बक्यौता तहसिल
(१३) बैतडी गौंडामा जम्मा भएको गुठी कसर
(१४) पाल्पा दफ्दरमा जम्मा भएको दर्शन भेट, गैर कट्टी र लुगा कट्टी रकम
(१५) बाग्लुङ्ग छोटी गौंडालाई तोषाखानाबाट प्राप्त रकम
(१६) तोषाखानामा जम्मा भएको रकम (१७) रानीघाटको गुठी कसर
(१८) पाल्पा मेगजीनमा भएको आम्दानी र
(१९) बुटौल खस्यौली टक्सारमा तयार भएका पैसा ।[१३]

दर्शनभेट, टीकाभेट, फत्ये मुवारक, सलामी, साउने, फागु, आदि रकम

श्री ५ को सरकारको छुट्टै कोषमा र श्री ३ महाराजको नगदी तहविलमा दखिला गरिन्थ्यो ।[२४] पाल्पा तीन सॉंचामा जम्मा भएको रकम अड्डा अड्डामा लाग्ने खर्च कटाई बाँकी रहेको रकम १,००,०००।- (रु एक लाख) पुग्नासाथ मुलुकीखानामा दाखिला गर्नकालागि पहिले-पहिले पाल्हीको मालमा दाखिला गर्नु पर्दथ्यो भने वि.सं. १९९३ देखि माझखण्डको बेथरी मालमा दाखिल गर्ने व्यवस्था मिलाइएको थियो ।[२५] वि.सं. २००२ सालसम्म नोठको चलन नभएका हुनाले चाँदीका मोहर र तामाका रुपैयाँ पैसा एक ठाउँबाट अर्को ठाउँमा लैजानु पर्दा छालाको तोडामा राखेर ढुवानी गर्ने चलन थियो । तोडा बुटवलसम्म मानिसलाई बोकाएर लगिन्थ्यो भने बुटवलबाट माझखण्ड, वेथरीसम्म लरीमा राखेर चलान गरिन्थ्यो ।[२६]

(ख) माल अड्डा

पाल्पा गौंडा अन्तर्गत विभिन्न माल अड्डा थिए । राजश्व प्रशासनको दृष्टिले माल अड्डाको विशेष महत्व थियो । यसको मुख्य काम मालपोत सङ्कलन गर्नु थियो । माल अड्डाको मातहातमा तिरो असुल गर्नका लागि मुखिया, जिम्मावाल, चौधरी आदि तालुकदार नियुक्त गरिएका हुन्थे । मालपोत असुल गर्ने नियम निकै कडा थियो । रैती दुनियाँले हरेक साल चैत्र मसान्तसम्ममा तिरो बुझाउन नसकेमा जग्गा 'बालेकुत'मा पजनी हुन्थ्यो ।[२७] गाउँका मौजा मौजामा तिरो असुल गर्न नियुक्त भएका तालुकदारले वैशाख मसान्तसम्ममा हिसाब फट्यौट गर्नुपर्दथ्यो । तोकिएको म्यादमा हिसाब फछ्यौंट गर्न नसके तालुकदारलाई पजनी गरी नयाँ तालुकदार नियुक्त गरिन्थ्यो ।[२८] तालुकदारबाट समयमा मालपोत असुल गराउन नसकेमा गौंडा, गोश्वारा र माल अड्डाका हाकिमलाई समेत सजाय हुन्थ्यो ।[२९]

(ग) अन्य अड्डाहरू

पाल्पा गौंडा अन्तर्गतका इलाकाहरूमा रहेका राजश्व सङ्कलन गर्ने अन्य अड्डाहरूमा बुटवल चौतरा बजार महसुल अड्डा, थाक दाना भन्सार, रिडी र पाल्पा हुलाक, तोषाखाना, दफदर आदि थिए । बुटवलमा भारततिरबाट आउने मालसामानको जाँचबुझ गरी भन्सार महसुल लिन बुटवल चौतारा बजार महसुल अड्डा राखिएको थियो ।[३०] त्यस्तै तिब्बततिरबाट आउने माल सामानको जाँचबुझ गरी भन्सार महसुल लिन थाक दाना भन्ने ठाउँमा भन्सार अड्डा राखिएको थियो ।[३१] यसैरी नै रिडी र पाल्पामा रहेका हुलाक अड्डाबाट टिकट विक्रिगरी आम्दानी गरिन्थ्यो भने तोषाखानाले अड्डाका कर्मचारीहरूको बाली, तलब, भत्ता, पेन्सन र मसलन्द वितरण गरी त्यसको

हिसाब किताब दरुस्त राख्ने काम गर्दथ्यो ।[२२] दफदरखानाले जङ्गी र निजामतीतिरका सम्पूर्ण कार्मचारीहरूको लगत राख्ने र तिनीहरूबाट सलामी, दर्शनभेट, गैर हाजिरी कट्टी आदिको रकम जम्मा गर्ने काम गर्दथ्यो ।[२३]

### ३.२ राजश्वका स्रोतहरू

राणा शासनकालमा राज्यको मुख्य आम्दानीको स्रोत भूमि थियो । त्यसबाहेक भन्सार र अन्य प्रकारका कर पनि लिइन्थ्यो । त्यतिखेर लिइने कर दुई प्रकारका थिए–राजकीय कर र राज्य कर ।

### (क) राजकीय कर

राज्य प्रमुखको नीजि कोषमा जम्मा हुने गरी उठाइने करलाई राजकीय कर भनिन्थ्यो । यस प्रकारको रकम श्री ५ र श्री ३ को कोषमा दाखिला गरिन्थ्यो । राजकीय करको रूपमा दर्शनभेट, टीकाभेट, फत्ये मुवारक, गद्दी मुवारक, गोडधुवा, साउने फागु आदि विभिन्न प्रकारका रकम उठाइन्थे । यी कर राणाशासनको अन्त्यपछि असुल गर्न छाडियो ।[२४]

### दर्शन भेट

प्रत्येक पटकको पजनीमा कर्मचारी र तालुकदारले नयाँ नियुक्ति पाएमा, बढुवा भएमा वा थमौती भएमा तोकिएको दरमा कर्मचारीले दफदरखानामा र तालुकदारले माल आड्डामा दर्शन भेट वा सलामी स्वरुप रकम जम्मा गर्नुपर्दथ्यो । साथै कर्मचारीलाई महिनाबारी तलब बाँड्दा पनि दर्शनभेट वा सलामी स्वरुप रकम कट्टी गरिन्थ्यो । यसरी कट्टी भएको रकम श्री ५ र श्री ३ को नीजि कोषमा जम्मा गरिन्थ्यो ।[२५]

### साउने फागु

राणा शासनकालमा लगाइने अनिवार्य कर मध्ये साउने फागु पनि एक थियो । साउन महिनामा पर्ने चाडपर्वका लागि उठाइने रकमलाई साउने र फागुन महिनामा पर्ने चाडपर्वका लागि उठाइने रकमलाई फागु भनिन्थ्यो । यो रकम सुकुम्बासी समेतलाई लगाइने हुँदा यसलाई सुकुम्बासी कर पनि भनिन्थ्यो ।[२६] राजपरिवारमा हुने उत्सव, चाडपर्व र अन्य अतिरिक्त खर्चका लागि यो दस्तुर मुलुकभर उठाइन्थ्यो । साउने फागु दस्तुर सम्बन्धमा पाल्पा माल सवालमा यस्तो व्यवस्था छ– 'सुकुम्वासी घरले जग्गा कमायाका भया गाउँ श्रह तिरो दर्नु जग्गा नकमाउन्यालाई साउने फागु रकं दर्नु अरु रकं दर्नु पर्दैन ।'[२७]

यसरी के देखिन्छ भने साउने फागु रकम सुकुम्बासीले समेत तिर्नु पर्दथ्यो तर

राणाशासकहरूलाई खुसीपार्न सकेमा उक्त रकमबाट पनि छुटकारा पाइन्थ्यो । उक्त कुरा पाल्पाको तैनाथवाला बीरशमशेरले वि.सं. १९३३ मा पाल्पा मस्याममा ठाँटी बनाई त्यसको स्याहार सँभार गरे बापत विष्णु सिंलाई उक्त रकम माफी गरिदिएबाट स्पष्ट हुन्छ ।[२८]

यी करहरूका अतिरिक्त फत्ये मुवारक, गद्दी मुवारक, टीका भेट, गोडधुवा आदि दस्तुरहरू पनि उठाइन्थे, भने करका रूपमा लिइने अर्को दस्तुर सेरा थियो जुन धानखेत र पशुपालनमा लिइन्थ्यो । पाल्पा गौंडा अन्तर्गतको बाग्लुङ इलाकामा पर्ने पुला, धारापानी, गुर्जाघाट ढोर, दाना, लोप्रे आदि ठाउँका गोठबाट आवश्यक परेका बेला दस्तुरको रूपमा घोडा, भेडा, घिउ आदि पनि लिने चलन थियो ।[२९]

(ख) राज्यकर

राज्यकोषमा जम्मा हुनेगरी लगाइने करलाई राज्यकर भनिन्छ । राणा शासनकालमा राजढुकुटीमा जम्मा हुने गरी भूमि, व्यापार र खानी आदिमा कर लगाइन्थ्यो ।

भूमिकर

पाल्पा गौंडाको राजश्वको मूल स्रोत भूमिकर थियो । रैकर नामक यो रकम आवादी जग्गा, पशुपालन क्षेत्र र बस्तीका आधारमा लिइन्थ्यो । कृषि भूमिमा सिंचाइको सुविधा भएको जग्गालाई धान खेत र सिंचाइको सुविधा नभएकोलाई पाखो बारी भनी वर्गीकरण गरिएको थियो । त्यसमा पनि उब्जनी र असल, कमसल माटोको आधारमा अवल, दोयम, सीम, चाहार भनी जग्गाको किसिम छुट्याइएको हुन्थ्यो । त्यस्तै पाखो जग्गालाई हले, पाटे, कोदाले र कुटे भनि वर्गीकरण गरिन्थ्यो ।

वि.सं. १९९१ सालको माल सवाल अनुसार खेततर्फ अवल एक रोपनी जग्गाको १४ पाथी, दोयमको ११ पाथी, सीमको ७ पाथी र चाहारको ५ पाथी धान र घिउ खाने भनी ८ पैसा तिरो तोकिएको थियो ।[३०] त्यस्तै पाखो बारीतर्फ हलेको रु. १।- पाटेको ।७५ पैसा र कोदालेको ।५० पैसा तिरो ठेकिएको थियो ।[३१] यसरी लगाइने भूमिकरमा खेतको तिरोलाई बाली र पाखोबारीको तिरोलाई सेर्मा भनिन्थ्यो ।

घरधुरीकर

घरबस्ती बनाएर बस्ने व्यक्तिलाई घरधुरी अनुसार कर लाग्दथ्यो । नयाँ जग्गा आवाद गरी घर बनाई बसेमा औंठा सरह सेर्मा निर्धारण गरिन्थ्यो । भाइ फुटी घर बढेमा सगोलमा छँदा लागेको सेर्मा रकम भाइ भाइमा बाँडिन्थ्यो । घरधुरी करको रूपमा लिइने घर गन्दीका साथ थप रकम पनि लिइन्थ्यो जसलाई साफा भनिन्थ्यो । तानसेन

वसन्तपुरका गोपी नारानले वि.सं. १९९० सालको घरगन्दी कर तिर्दा ।६० पैसा घरगन्दी र ।६ पैसा साफा रकम तिरेको प्रमाणले उक्त कुराको पुष्टि गर्दछ ।[३२]

**पशुपालनकर**

पशुपालनको विशेष महत्व भएकोले त्यतिखेर गौचरन सुरक्षित राख्ने व्यवस्था थियो । वि.सं. १९९१ सालको पाल्पा माल सवाल अनुसार गौचरन र जंगल फाँडी खेती गरेमा मोहरू ५०।- जरीवाना गरिने नियम बनाइएको पाइन्छ । गौचरन र खर्कहरूमा पशु चराउने व्यक्तिलाई चराइ रकम लाग्दै आएकोमा वि.सं. १९८६ सालको सनद अनुसार उक्त रकम माफी गरिएको कुरा पनि उक्त सवालबाट ज्ञात हुन्छ ।[३३]

**भन्सार कर**

पाल्पा गौंडाको उत्तरमा तिब्बत र दक्षिणमा भारतसँग व्यापार चल्दथ्यो । तिब्बततिर व्यापार हुने मालसामानमा भन्सार महशूल लगाउन थाक दानामा र भारततिर व्यापार गर्न बुटवलमा भन्सार अड्डा राखिएको कुरा माथि उल्लेख भइसकेको छ । वि.सं.१९५० सालसम्म पाल्पाको 'मच्याक' भन्ने ठाउँमा जगात उठाउने अड्डा भएको र त्यसको शाखा नुवाकोट, गोठादी, बुटवल, सुखा पर्सवास(?) , रिडी आदि ठाउँमा भएको कुरा एक दस्तावेजबाट थाहा हुन्छ ।[३४]

**खानी र उद्योगमा लाग्ने कर**

राणा शासनकालमा पाल्पा गौंडा अन्तर्गतका क्रमशः पर्वत २२ खानी, मगराँत खानी र रुकुम खानी सञ्चालन भएका थिए । ती खानीहरू ठेक्कामा दिई त्यसबाट तामा वा नगद रकम असुल गरिन्थ्यो । खानीको ठेक्काबाट प्राप्त तामा गालेर सिक्का तयार गरिन्थ्यो । त्यसका लागि बेनी, बाग्लुङ, थामी, रामकोट, बुटवल र तानसेनमा टकसार अड्डा राखिएको थियो ।[३५] त्यतिखेर ठाउँ-ठाउँमा गहुँ, मकै आदि अनाज पिस्नका लागि घट्ट सञ्चालन गर्ने चलन थियो । घट्ट सञ्चालन गर्न माल अड्डामा दर्ता गरी तोकिएको तिरो बुझाउनु पर्दथ्यो । वि.सं. १९९१ सालको पाल्पा माल सवाल अनुसार घट्ट सञ्चालन गर्नेलाई अवलको रु. १२।- देखि १६।- सम्म, दोयमको रु. ८।- देखि १२। सम्म, सीमको रु. ४।- देखि ८।- सम्म र चाहारको रु. २।५० तिरो तोकिएको छ ।[३६]

**३.२.जनजीविकाका स्रोतहरू**

पाल्पा गौंडाको सम्पूर्ण इलाका पहाडी क्षेत्र हुनाले र राणा शासनकालमा यो क्षेत्रमा प्रशस्त उद्योगधन्दा नखुलेको हुनाले यहाँका मानिसहरू मुख्य रूपमा कृषि र

पशु व्यवसायमा निर्भर रहेको पाइन्छ । त्यसका साथै केही मानिसहरू स्वदेशी तथा विदेशी नोकरीमा पनि लागेको पाइन्छ भने केही मानिसहरू व्यापार, खानी, उद्योग जस्ता व्यवसायमा पनि संलग्न भएको देखिन्छ ।

### (क) कृषि र पशुपालन

मनिसहरूको मुख्य पेशा नै कृषि भएको हुँदा भीर, पाखा, पखेराका जग्गासमेत आवाद गरिएका थिए । कुनै पनि व्यक्तिले चौतर्फी सिमाना खुलाई कुनै जग्गा आवाद गर्न चाहेमा उसलाई सो जग्गा दिइन्थ्यो । यस्ता जमिनमा धान, मकै, गहुँ, कोदो, मास, फापर, तोरी आदि अनाजको खेती गरिन्थ्यो ।[३७]

कृषिपछि जनजीविकाको अर्को माध्यम पशुपालन व्यवसाय थियो । पशुपालनका लागि राज्यका तर्फबाट नै विभिन्न ठाउँमा गोठको व्यवस्था गरीएको हुन्थ्यो । पाल्पा गौंडा अन्तर्गतको पर्वतमा ढोर, गुर्जाघाट, धारापानी, ताकम, काफलडाँडा, मल्कबाङ, कुइने, सिवाङ, मुदी, दुखु, लोप्रे र पुला भन्ने ठाउँमा गाई, घोडा, भेडा, बाख्रा आदि पशुपालनका गोठ राखिएको पाइन्छ ।[३८] पशुपालनमा बनाउलो सेर्मा भनिने चराइकर लाग्दथ्यो । चराइ रकम तिरेर दुनियाँले पशुपालन गर्ने र  गाई, भैंसी, घोडा , भेडाका गोठ राख्ने चलन थियो । तर उक्त चराई रकम भने वि.सं. १९८६ सालदेखि नै खारेज गरिएको कुरा माथि नै उल्लेख भईसक्यो । खेती गर्न हलोले जोतिने भएकाले गोरुको ठूलो महत्व थियो । किसानका निम्ति हल गोरुको कति महत्व थियो भन्ने कुरा ऋण लिंदा पनि हल गोरु धितो राखिएको वि.सं. १९२८ को लछिन थापाको एक कागजले स्पष्ट गर्छ ।[३९]

### (ख) व्यापार

अधिकाश व्यापार नेवार समुदायले नै गर्ने भएपनि मुसलमान र थकालीहरू पनि व्यापार व्यवसायमा संलग्न हुन्थे । ती व्यापारीले मेला, जात्रा तथा हाटमा विभिन्न किसिमका मालसामानको व्यापार गर्दथे । व्यापार गर्नका लागि मालसामानको पोको पारेर गाउँ गाउँमा पुग्नु पर्दथ्यो । पोकामा लगेको सामानले अनाज साटेर ल्याइन्थ्यो । मुद्राको कमी हुनाले मालसमानको साटासाटबाट नै व्यापार चल्दथ्यो ।[४०] यस क्षेत्रको व्यापारको मुख्य केन्द्र  बुटवल थियो । हिउँदमा अड्डा, अदालत पनि बुटवलमा जाने, भारतबाट मालसामान पनि त्यतिखेर नै त्यहाँ आइपुग्ने र पहाडी इलाकाका मानिसहरू पनि घिउ, जडिबुटी लिएर त्यहीँ आइपुग्ने हुँदा हिउँदमा बुटवलमा व्यापारीहरूको मेला नै लाग्दथ्यो भन्ने पर्सिवल ल्याण्डनको भनाई छ ।[४१]

मुसलमान व्यापारीले मुख्य रूपमा विसाता सामानको व्यापार गर्दथे । उनीहरूले चुरा, पोते, धागो, डोरी र श्रृङ्गारका अन्य सामान भारतका कलकत्ता, दिल्ली, कानपुर, बनारस आदि ठाउँमा गई ल्याउने र गाउँ गाउँमा गई बेच्ने गर्दथे ।[४२]

थाकखोलातिर मुख्य रूपमा नूनको व्यापार हुन्थ्यो । नून अनाजसँग साटिन्थ्यो । खास गरेर चामल, मकै, कोदोले नुन साट्ने र अनाज मुस्ताङ्का गाउँहरू तथा तिब्बतमा पुऱ्याउने काम व्यापारीहरूले नै गर्दथे ।[४३] व्यापारमा लेनदेन गर्दा जोख्नु पर्ने सामान धार्नी, सेर आदिको तुलोमा जोखेर र नापेर बेचबिखन गर्नु पर्ने सामान माना-पाथीको प्रयोग गरी नापेर लेनदेन गरिन्थ्यो । चलन चल्तीको लागि आवश्यक पर्ने ढलौटे माना, पाथी, कुरुवा आदि सरकारी तबरबाटै ढाल्न लगाई बिक्री वितरण गरिन्थ्यो । उक्त माना र पाथी काठ, तामा, फलाम, पित्तल आदि धातुबाट बनाइएका हुन्थे ।[४४]

(ग) जागिर

राणा शासनकालमा नयाँ नयाँ अड्डा अदालत र सैनिक पल्टनहरूको स्थापना र गठन हुँदै गएको हुनाले मानिसहरू सरकारी सेवामा संलग्न हुने क्रम बढ्दै गएको थियो । त्यसबखत पाल्पा गौंडाको तानसेन र ठाडामा रहेका बरख, सबुज, इन्द्रध्वज र भवानी दल पल्टनका विभिन्न ओहदा (सिपाही, बानादार, पिपा, गोलन्दाज आदि) मा सामान्य मानिसहरू भर्ती गरिन्थे । तैनाथवाला र अन्य उच्च ओहदामा भने राणा खलकका व्यक्ति नै नियुक्त हुन्थे । त्यस्तै जिल्लामा रहेका अड्डा, अदालतमा नायब सुब्बा, खरिदार, मुखिया, बहिदार, राइटर आदि पदमा पनि साधारण जनता जागिरे हुन्थे ।[४५]

पाल्पा गौंडाका बासिन्दाहरूको जागिरको अर्को स्रोत भारतीय फौजमा रहेको गोरखा रेजिमेन्ट थियो । सन् १८८५ मा गोरखा भर्ती केन्द्र खोल्ने सम्बन्धमा भारत र नेपालबीच सम्झौता भएपछि नेपालीहरू भारतीय फौजमा भर्ती हुन थाले ।[४६] पश्चिम नेपालबाट गोखा रेजिमेन्टमा विशेषत : ठकुरी, क्षत्री, मगर, गुरुङ, कामी र सार्की जातजातिका मानिसहरू भर्ती हुन्थे ।[४७] ब्रिटिश सेनामा प्रथम विश्वयुद्धमा ५५ हजार र द्वितिय विश्वयुद्धमा १ लाख १० हजार नेपाली भर्ती भएका थिए ।[४८] उद्योग धन्दा नखुलेको र कृषि पेशाबाट जीवन धान्न धौ-धौ परेकाले मानिसहरू आफ्नो आर्थिक भार थाम्न गोरखा रेजिमेन्टमा भर्ती हुने क्रम झन् झन् बढ्दै गएको थियो ।

(घ) उद्योग र खानी

पाल्पा गौंडामा स-साना घरेलु उद्योगहरू जस्तै कपडा बुन्ने, माटा र धातुका भाँडा बनाउने, कागज बनाउने र छालाका सामान बनाउने उद्योगहरू सञ्चालन भएको

पाइन्छ । राणाकालमा छालाका तोडा, हतियारका खोल र सनद सवाल एवं किताबका जिल्द छालाको बनाइन्थ्यो । यसरी छालाको काम प्रशस्त भएकाले भालु, मृग र अन्य जनवारका छाला जम्मा गर्ने काम एउटा पेशाको रूपमा लिइएको थियो । छाला जम्मा गर्ने व्यक्तिलाई छलही कर समेत लाग्दथ्यो ।[४९]

पाल्पा गौंडाको उत्तरी भेकतिर भेडा, च्याङ्ग्रा आदि प्रशस्त पाइने हुँदा तिनीहरूको उनबाट राडी, पाखी, काम्लो बुन्ने काम हुन्थ्यो । पर्वत निसीका जिम्मावाल तुलाराम घर्तीलाई मे.ज. शमशेर जङ्ग राणाले वि.सं. १९७२ सालमा घुम, राडी बनाउन आदेश दिएको एक कागजबाट त्यतिखेर उनी कपडाको उद्योग राम्रोसँग चलेको देखिन्छ ।[५०]

जुद्ध शमशेरको समयमा उद्योग परिषद्को स्थापना गरिएपछि मुलुकका विभिन्न ठाउँमा उद्योग स्थापना गर्न प्रोत्साहन मिलेको थियो । त्यसै सिलसिलामा कपडा बुन्नका निम्ति पाल्पामा पनि तान, चर्खा वितरण गर्ने काम भएको थियो ।[५१]

मकै, कोदो गहुँ आदि अनाज पिस्नका लागि ठाउँ ठाउँमा घट्ट सञ्चालन गरिन्थ्यो । घट्ट सञ्चालन गर्न माल अड्डामा दर्ता गर्नुपर्ने र तिरो तिर्नुपर्ने कुरा माथि नै उल्लेख गरिसकिएको छ ।

पाल्पा गौंडा अन्तर्गतका पर्वत २२ खानी, मगरात खानी र रुकुम खानीमा खानी खन्ने काम सञ्चालन गरिएको थियो । खानी खन्ने काममा छन्त्याल र कामी जातका मानिसहरू संलग्न थिए । त्यसका साथै खानीबाट प्राप्त तामाबाट सिक्का ढाल्नका लागि ठाउँ ठाउँमा टक्सार अड्डा पनि स्थापना गरिएको थियो । त्यसमा पनि मानिसहरूले काम पाएका थिए ।[५२]

### ३.३ खानी सम्बन्धी व्यवस्था

उन्नाइसौं शताब्दीमा नेपालको राजश्व सङ्कलनको एक स्रोत खानी पनि थियो । त्यतिबेला तामा, फलाम र शिसाको खानी प्रशस्त मात्रामा सञ्चालन भएको पाइन्छ भन्ने महेशचन्द्र रेग्मीको भनाइ छ ।[५३] खानी सञ्चालन गर्न सरकारी तवरबाटै तत्परता देखाइन्थ्यो । खानी सञ्चालन सम्बन्धमा पाल्पा माल सवालमा यस्तो व्यवस्था गरिएको छ- 'मेठबन्दी गरेका खानी जगा बाहेक अरु वं जंगल भीर खोलो पैह्रोमा कसैले नयाँ खानी पाया देखेको छु यतिमा ठेका पाउँ वा सरकारबाट अमानत हवस भनी द्रषास्त दिन आया सरजमीन जाँची बुझी ठहराई जाहेर गरी निकासा भै आया बमोजिम गर्नु ।'[५४]

यसरी खानी खन्नका लागि प्रोत्साहन दिने र अमानत वा ठेक्का कुन व्यवस्थाबाट खानी सञ्चालन गरेमा सरकारलाई फाइदा हुन्छ त्यसरी सञ्चालन गर्ने गरिन्थ्यो ।

**(क) अमानत व्यवस्था**

सरकारले आफ्नै तजविजले आग्रीहरू लगाई खानी खन्न लगाउने व्यवस्थालाई अमानत भनिन्थ्यो । खानीमा काम गर्ने मजदूरलाई आग्री भनिन्थ्यो । राणा शासनकालमा पाल्पा गौंडा अन्तर्गत पर्वत २२ खानी मध्येको अरभुङ बरांजा खानी (म्याग्दी) अमानतमा सञ्चालन गरिएको थियो ।[५५] खानी खन्ने काम जोखिमपूर्ण हुनाले अमानत प्रथा धेरै समयसम्म टिकाउ हुन नसकी वीशमशेरको प्रधान मन्त्रीत्वकालमा नै पाल्पा गौंडा अन्तर्गतका बेनी, बाग्लुङ र तानसेनका खानी अमानतबाट खनाउने व्यवस्था बन्द गरी ठेक्कामा दिने चलन चलाइएको थियो ।[५६]

**(ख) ठेक्का वा इजारा प्रथा**

ठेकेदारले आफू खुशी यति तामा, फलाम आदि धातु वा नगद बुझाउँछु भन्ने कबुल गरी खानी सञ्चालन गर्ने प्रथालाई ठेक्का भनिन्छ । ठेक्का दिंदा ३ वर्ष देखि १० वर्ष सम्मका लागि कबुल गर्न सक्ने व्यवस्था थियो । जिन्सी बुझाउने गरी ठेक्का लिएकोमा सो बुझाउन नसके चलन चल्तीको मूल्यमा नगद बुझाउन पाउने पनि व्यवस्था थियो । ठेक्कामा दिइएको खानी राम्रोसँग सञ्चालन हुन नसकेमा ठेक्का तोडी अमानतमा चलाउने गरेको पनि पाइन्छ । वि.सं. १९२८ सालमा पर्वत २२ खानी, मगरांत खानी र रुकुम खानी तीन वर्षे ठेक्का तोडी अमानतमा चलाइएको थियो ।[५७] ठेक्का विग्रँदा खानी र टक्सार अड्डाका कारिन्दाले ढाँट, छल गरेको हुँदा तिनीहरूको छानविन गर्न पाल्पा धरमपानीका नायब सुब्बा नन्दराज गुरुघरानालाई खटाइएको थियो र पछि उनलाई नै अमानतमा खानी सञ्चालन गर्ने जिम्मेवारी दिइएको थियो ।[५८] वीर शमशेरको प्रधानमन्त्रीत्वकालमा सो अमानत व्यवस्था तोडी खानी सञ्चालन गर्न ठेक्कामा दिने व्यवस्था भएपछि सुब्बा रामप्रसाद थकालीले खानी सञ्चालन गर्ने ठेक्का लिएका थिए । ।[५९]

**(ग) खानी, हट्टी र टक्सार अड्डा**

खानी सञ्चालनका लागि खानी भएका ठाउँमा खानीको अड्डा, धातु गालपोल गर्ने ठाउँमा हट्टी अड्डा र खानीबाट प्राप्त तामाका सिक्का बनाउन पायक पर्ने ठाउँमा टक्सार अड्डा स्थापना गरिएको हुन्थ्यो । पाल्पा गौंडा अन्तर्गतका कचलो खानी, पाण्डौ खानी, चाहार्‍या खानी, जोखुं खानी, विर्कुन खानी, भौं खानी, फोगसिं खानी, रुकुम खानी र दरम खानी भन्ने ठाउँमा खानी अड्डा र बेनी, बाग्लुङ, तानसेन, वामी, मगरांत र रिडीमा हट्टी अड्डा थिए भने बेनी, बाग्लुङ, तानसेन, सामाकोट, वामी र बुटवलमा टक्सार अड्डा स्थापना गरिएका थिए ।[६०] यस क्षेत्रका अन्य टक्सार विस्तारै बन्द हुँदै

गए पनि बुटलको टक्सार भने राणा शासनकालको अन्त्यसम्म पनि सञ्चालित थियो ।[६१]

### ३.४ भूमि सम्बन्धी व्यवस्था

राजश्वको प्रमुख स्रोत भूमि थियो भने जनजीविकाको मुख्य स्रोत पनि भूमि नै थियो । त्यतिबेला भूस्वामित्वको आधारमा जमिनलाई रैकर, गुठी, विर्ता, जागिर, रकम, किपट आदि विभिन्न किसिममा विभाजन गरिएको थियो ।

#### (क) रैकर जग्गा

राणा शासनकालमा रैकर प्रणालीमा जग्गा आवाद गर्न दिएमा राजश्व वृद्धि हुने हुनाले नयाँ-नयाँ जमिन विराउन रैती दुनियाँलाई प्रोत्साहित गरिन्थ्यो । रैकर जग्गालाई सिंचाई हुने र नहुने भनि क्रमशः धानखेत र पाखोबारीमा वर्गीकरण गरिएको थियो । वि.सं. १९९१ सालमा जग्गा नापी गरिएकाले खेतलाई अवल, दोयम, सीम, चाहार भनी किसिम छुट्याइएको थियो । कुलो-पानी लाग्ने असल र रसिलो माटो भएको अवल, कुलोको पानी तीनखण्ड जग्गामा लाग्ने असल र रसिलो माटो भएको दोयम, आधा खण्ड जग्गामा मात्र कुलोको पनि लाग्ने बलौटे माटो भएको सीम र भलको पानीले रोप्नु पर्ने सुख्खा माटो भएको जग्गालाई चाहार मानिएको थियो ।[६२] धानखेतमा १ रोपनी अवलमा ३ मुरी १० पाथी, दोयममा २ मुरी १० पाथी, सीममा १ मुरी १५ पाथी र चाहारमा त्यो भन्दा कम उब्जनी हुने आधारमा नापी गरी किसिम छुट्टाइएको थियो ।[६३] पाखोबारीतर्फ नापी भएको जग्गालाई असल मलिलो माटो भएको घैया लाग्ने १ रोपनीमा १ मुरी ५ पाथी उब्जा हुने जग्गालाई अवल, असल माटो भएको १५ पाथीसम्म उब्जा हुने जग्गालाई दोयम, बालुवा ढुङ्ग्यानी माटो भएको १० पाथीसम्म उब्जा हुने जग्गालाई सीम र कुनै पनि उब्जनी नहुने खरबारीलाई चाहार भनी किसिम छुट्टाइएको थियो ।[६४] नापी नभएको पाखो जग्गालाई एक दिनमा एक हल गोरुले जोत्न सक्ने जग्गालाई हले, एक हल गोरुले आधा दिनमा जोत्न सक्ने जग्गालाई पाटे, एक दिनमा एक जनाले कोदालोले खनेर भ्याउने जग्गालाई कोदाले र भीरालो पाखो बारीलाई कुटे भनि वर्गीकरण गरिएको थियो ।[६५] यस्ता रैकर जग्गाको तिरो रैतिले हरेक वर्ष चैत्र मसान्त भित्र बुझाउन नसकेमा जग्गा बालेकुतमा पजनी हुने कुरा पाल्पा माल सवालमा उल्लेख छ ।[६६]

#### (ख) विर्ता जग्गा

राजाले विभिन्न धार्मिक कार्यहरूमा ब्राह्मणलाई जीवन वृत्तिका लागि जग्गा विर्ता दिने चलन प्राचीन समयदेखि चल्दै आएको पाइन्छ । पाल्पामा पनि सेनवंशको समयदेखि चल्दै आएको विर्ता प्रणाली राणा शासनकालमा पनि कायमै थियो ।

पाल्पा गौँडाका तैनाथवाला खड्गबहादुर कुवँरले दशरथ पाध्यालाई सेर्मा, साउने फागु, वलकपात आदि कुनै रकम तिर्न नपर्ने गरी धोवादीको जग्गा विर्ता थमौती गरिदिएको वि.सं. १९०८ सालको कागजले राणा शासनकालमा विर्ता प्रणाली कायम भएको पुष्टि गर्छ ।[६७]

(ग) गुठी जग्गा

राणा शासनकालमा देवालय वा धार्मिक स्थलको नाममा जग्गा गुठी राख्ने प्रचलनलाई विशेष प्रोत्साहन दिइएको थियो । पाल्पा गौँडाको सदरमुकाम तानसेनमा अमर सिंह थापाले स्थापना गरेका नारायण र अन्य देवताका नाममा राखिएको एकहजार माटोमुरी भएको माडीफाँटको धानखेत र वर्तुङको पाखो जग्गा राणा शासनकालमा पनि गुठीको रूपमा यथावत कायम थियो ।[६८] त्यस्तै उजिरसिंह थापाले स्थापना गरेको भगवती मन्दिरको नामको माडीको ५१७ मुरी धानखेत र भारकेसको पाखो जग्गा पनि गुठीको रूपमा यथावत कायम थियो ।[६९] यसरी नै अन्य पुराना गुठी यथावत कायम राख्नुका साथै नयाँ गुठी पनि स्थापना गरिएको थियो । यस्ता गुठीहरूमा वीरशमशेरले स्थापना गरेको तानसेन नारायणस्थान फुलवारीको विष्णुपादुको नामको गुठी एक हो जसको नाममा नायरनमतलेस, चिर्तुङधारा, सोमादी, चापपानी, चिदीपानी, यम्घा, गुंगा र बराङ्दीका जग्गा गुठी राखिएको थियो ।[७०]

खड्गशमशेरले रानीघाटमा रानीमहल र शिवालय निर्माण गराएपछि त्यसको नाममा प्रशस्त जग्गा गुठी राखिदिएका थिए ।[७१] यसरी नै व्यक्तिगत रूपमा पनि प्रशस्त जग्गा गुठी राख्ने प्रचलन भएको कुरा माडी अर्चले बस्ने पदम कुमारी र रेणुका भट्टराईले १८० मुरी धान खेत र पाखो वारी गुठी राखिदिएको उदाहरणबाट स्पष्ट हुन्छ ।[७२]

## ४. निष्कर्ष

मध्यकालमा सवल र प्रभावशाली चौबिसे राज्य पाल्पा एकीकरणपछि पनि नेपालको पश्चिमी पहाडी क्षेत्रको महत्वपूर्ण गौँडाको रूपमा रह्यो । एकीकरणपछि खास गरेर राणा शासनकालमा पाल्पा पश्चिम नेपालको प्रशासनिक केन्द्र बन्यो । सैनिक, निजामती र न्याय प्रशासनको दृष्टिबाट यस गौँडाले पाल्पा, गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट, पर्वत, गलकोट र धुर्कोट क्षेत्रको मात्र प्रशासन हेर्दथ्यो भने आर्थिक प्रशासनको दृष्टिले गुल्मी, प्यूठान, सल्यान, डोटी, जुम्ला, बैतडी, दाङ, देउखुरीसम्मको प्रशासन सञ्चालन गर्ने दायित्व बोकेको थियो । यस क्षेत्रमा मुलुकका अन्य क्षेत्रमा जस्तै भूमि कर राजश्वको प्रमुख स्रोत थियो । त्यसका अतिरिक्त यस क्षेत्रमा पर्वत बाइस

खानी, मगराँत खानी र रुकुम खानी सञ्चालन गरिएकाले यो गौँडाबाट अन्य आर्थिक स्रोतका अतिरिक्त खानी र टकसारबाट पनि राम्रो आम्दानी गर्दथ्यो । यस क्षेत्रका मानिसहरूको जीविकाको मुख्य स्रोत कृषि, जागिर, ब्यापार र खानी सञ्चालन थियो ।

राणाकालीन पाल्पा गौँडाको आर्थिक ब्यवस्थाको महत्वपूर्ण पक्ष के थियो भने यस गौँडाको प्रशासनिक क्षेत्रबाट भएको राजश्वको आम्दानीबाट यस क्षेत्रको प्रशासनिक खर्च कटाएर लाखौं लाख रूपैयाँ जम्मा गरी केन्द्रमा पठाइन्थ्यो । समग्रमा के भन्न सकिन्छ भने राणा शासनकालमा पाल्पा गौँडाको आर्थिक ब्यवस्था सुब्यवस्थित, सुदृढ र सवल थियो ।

## टिप्पणी

[१] विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवनः पदमा घिमिरे, वि.सं.२०४५,पृ.२९ ।

[२] फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल**, न्यू दिल्लीः एशियन एजुकेशनल सर्भिसेज, सन् १९८६, पृ. १७७ ।

[३] कृष्णकान्त अधिकारी, **नेपाल अण्डर जङ्गबहादुर**(१८४६-१८७७),काठमाण्डुः बुकु,सन्१९८४,पृ.२६० ।

[४] सतिश कुमार, **राणा पोलिटी इन नेपाल ओरिजिन एण्ड ग्रोथ**, बम्बई : एशिया पब्लिशिङ हाउस, सन् १९६७, पृ.१०८ ।

[५] महेशचन्द्र रेग्मी, **ल्याण्ड टेन्यूर एण्ड टेक्सेसन सिस्टम इन नेपाल**, काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९७८,पृ. २५१ ।

[६] हेमनारायण अग्रवाल, **द एड्मिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल**, न्यू दिल्ली : विकास पब्लिसिङ हाउस, सन् १९७६, पृ. ७८ ।

[७] "अड्डा अड्डा जिल्ला जिल्लाबाट दाषिला गर्न ल्यायाको रुपैयाँ बुझिलिने काम्, पाल्पा तीन साँचाको सवाल, वि.सं.१९९२-२००६", पृ.४-७ । (श्री ३ महाराज र कम्याण्डर इन चिफबाट पाल्पा तीन साँचा अड्डाका कर्मचारीको नाममा जारी गरिएको वि.सं. १९९२ देखि २००६ सालसम्मका दुई छापे सनद सवालहरूको सङ्कलनलाई पाल्पा तीन साँचाको सवाल भनिएको छ । नेपाली कागजमा लेखिएको र छालाको जिल्द भएको १३६ पृष्ठको किताब, मालपोत कार्यालय पाल्पा ) ।

[८] रामजी उपाध्याय, **नेपालको इतिहास अर्थात् दिग्दर्शन**, बनारस : होमनाथ केदारननाथ, सन् १९५०, पृ.१७-१८ ।

[९] अड्डा अड्डा जिल्ला जिल्लाबाट दाषिला गर्न ल्यायाको रुपैयाँ बुझिलिने काम्",पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं. ७, पृ.५० ।

[१०] तुल्सीराम वैद्य र त्रिरत्न मानन्धर, **आधुनिक नेपालको प्रशासनिक इतिहास**, काठमाडौँ : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ.१९२ ।

[११] "हुकुम मर्जी बक्से बमोजिम गर्ने काम्", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७,पृ.३ ।

१२ "तेस् ३ साँचा र बुटौल सराफी थानाको तहबिलमा ३ साँचा लगाउने काम्", उही, पृ.५४ ।

१३ "अड्डा अड्डा जिल्ला जिल्लाबाट दाखिला गर्न ल्यायाको रुपैयाँ बुझिलिने काम्", उही, पृ.४-७ ।

१४ "दर्शनभेट, टीकाभेट, फत्य ममारष इत्यादि रकं असुल गर्ने काम्", **उही**, पृ.१५ ।

१५ "मौजदात रुपैयाँ दाखिल गर्ने काम्", उही, पृ.२६,२७ र ४२ ।

१६ "मौजदात रुपैयाँ दाखिल चलान गर्ने विषय थप सवाल", **उही**, पृ.४२ ।

१७ "जिम्मावाली तालुकदारी पजनी गर्ने कां", पालपा माल सवाल, वि.सं. १९९१–२००७, पृ.७३–७६ । (श्री ३ महाराज र कम्याण्डर इन चिफबाट पाल्पा मालका हाकिम कारिन्दाको नाममा जारी गरिएको वि.सं. १९९१ देखि २००७ सालसम्मको दुई छापे सनद सवालको सङ्कलनलाई पाल्पा माल सवाल भनिएको छ । नेपाली कागजमा लेखिएको र छालाको जिल्द भएको २७४ पृष्ठको किताब, मालपोत कार्यालय पाल्पा) ।

१८ उही, पृ.७७ ।

१९ उही, पृ.८२ ।

२० बुटौल चौतारा बजार महसुल अड्डाको वि.सं. १९९३ वैशाखको रसिद, (यो कागज तानसेनका निर्मल श्रेष्ठसँग सुरक्षित छ )।

२१ नारायणप्रसाद क्षेत्री, **मुस्ताङ दिग्दर्शन**, काठमाडौं : साझा प्रकाशन, वि.सं. २०४४,पृ.४११-३२ ।

२२ "अड्डा अड्डा जिल्ला जिल्लाबाट दाखिला गर्न ल्यायाको रुपैयाँ बुझिलिने काम्", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७, पृ.४-५ ।

२३ उही ।

२४ महेशचन्द्र रेग्मी, **एन इकोनोमिक हिस्ट्री अफ नेपाल (सन् १८४६-१९०१), वाराणसी** : नाथ पब्लिसिङ हाउस, सन् १९८८, पृ.३९ ।

२५ "दर्शनभेट, टीकाभेट, फत्य ममारष इत्यादि रकं असुल गर्ने काम्", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७ पृ.१५ ।

२६ रेग्मी, **पूर्ववत्**, टिप्पणी नं.२४, पृ.४५ ।

२७ "नापि मेदवंदी गर्दा गर्ने रुल", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.११२ ।

२८ पाल्पा गौंडाका तैनाथवाला लेफ्टीनेन्ट जनरल वीर शमशेर जङ्ग राणाले पाल्पा माझटोल बस्ने विष्णुसिं, भाजु नरसिंललाई वि.सं. १९३३ मा सेर्मा, साउने फागु माफी गरि दिएको कागज, (यो कागज पाल्पा गस्यामका रामेश्वर श्रेष्ठसँग सुरक्षित छ) ।

२९ टेकबहादुर श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रूपरेखा**, कीर्तिपुर : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ.२८०-८१ ।

३० "हाल आवादी पर्ति जग्गाको कुत तिरो ठेक्ने काम", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.४०-४४ ।

३१ "नापि मेदवंदी गर्दा गर्ने रुल", **उही**, पृ. १०८-११० ।

३२ पाल्पा तानसेनका चौधरी ज्योति नारायण श्रेष्ठले बसन्तपुरका गोपी नारानबाट धरगन्दी रकम बुझिलिएको वि.सं. १९९० साल भाद्र ७ गतेको रसिद, (तानसेनका निर्मल श्रेष्ठसँग

भएको कागज )

३३ "नयाँ जग्गा आवाद गर्न पाउँ भनी द्रखास्त विन्तिपत्र गर्न आएमा गर्ने काम", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.३९-४० ।

३४ **अभिलेख**, वर्ष १०, अङ्क १०, वि.सं.२०४९, पृ.४७ ।

३५ "पर्वत बाइस खानी, मगरात खानी, रुकुम खानीको तामा खरीद गर्ने हट्टी माहाल अड्डा", कम्याण्डरी किताब, वि.सं.१९२६, सि.नं. ५५, मू.नं. ६, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

३६ "मोठ नंबरी खडा गर्ने कामको थप सवाल", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.१८६-८८ ।

३७ "मोठ नंबरी लगतमा दरियाको जिन्सी बाली बिक्री गर्ने र श्रेस्ता गर्ने काम", **उही**, पृ.२५-२६ ।

३८ श्रेष्ठ, **पूर्ववत्**, टिप्पणी नं.२९, पृ.१२०-२१ ।

३९ पाल्पा गोर्खेकोटका लछिन थापाले बुद्धिधर उपाध्यायसँग ऋण लिंदा हलगोरु धितो राखेको वि.सं. १९२८ आषाढ शुदी ११ को कागज (तानसेनका द्वारिकाप्रसाद शर्मासँग भएको कागज ) ।

४० तानसेनका ब्यापारी गुनबहादुर श्रेष्ठसँग मिति २०५३/१२/०८ मा लिइएको अन्तर्वार्ता ।

४१ पर्सिभल ल्याण्डन, **नेपाल**, भोलुम २, काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९७६, पृ.९-१० ।

४२ तानसेनका ब्यापारी क्यामुदिन खाँ सँग मिति २०५३/१२/०४ मा लिइएको अन्तर्वार्ता ।

४३ क्षेत्री, **पूर्ववत्**, टिप्पणी नं.२१, पृ.२७२ ।

४४ "ढलौटे माना पाथी बनाउन लगाउने र बनी तयार भयाको बुझिलिने कां", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७, पृ.४-५ ।

४५ "पूर्व पश्चिम गौंडामा रहेका पल्टन, कम्पनी, निजामती आदिको बाली खाने", कम्याण्डरी किताब, वि.सं.१९२०-२००२ साल, सि.नं. २८-७५९, मू.नं.१-६४९, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४६ पुरुषोत्तम बाँस्कोटा, **द गोरखा कनेक्सन**, जयपुर : निराला पब्लिकेशन, सन् १९९४, पृ. १९० ।

४७ सि.जे.मोरिस, **द गोर्खाज एन इथ्नोलोजी**, दिल्ली : लो प्राइस पब्लिकेशन, सन् १९३३,पृ.१३३-३४ ।

४८ बाँस्कोटा, **पूर्ववत्**, टिप्पणी नं.४६, पृ. १३०-३५ ।

४९ "झारा छलही रकं तहसिल गर्ने कां", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.२२ ।

५० श्रेष्ठ, **पूर्ववत्**, टिप्पणी नं.२९, पृ.११८ ।

५१ "तान चर्खा बाँड्न बारेको सवाल", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७, पृ.१२२ ।

५२ "पूर्व पश्चिम गौंडामा रहेका पल्टन, कम्पनी, निजामती आदिको बाली खाने", कम्याण्डरी किताब, वि.सं.१९२०-२००२ साल, सि.नं. २८-७५९, मू.नं.१-६४९, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

५३ रेग्मी, **पूर्ववत्**, टिप्पणी नं.२४, पृ.१३० ।

५४ "खानी विषय गर्ने का", **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.१९-२१ ।

५५ **उही** ।

५६ रेग्मी, **पूर्ववत्**, टिप्पणी नं.२४, पृ.१४२ ।

५७ "पर्वत बाइस खानी, रुकुम, मगरांत खानीको इजारा तोडी अमानत काम गर्ने जवानको तलब खाने", कम्याण्डरी किताब, वि.सं.१९२८ साल, सि.नं. ६६, मू.नं. ८, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

५८ "पर्वत बाइस खानी, गुल्मी, रुकुम खानीको कामकाज गर्न ना.सु. नन्दराज गुरुघरानाको नाउँमा भएको सवाल बमोजिम भर्ना भएका जवानको", कम्याण्डरी किताब, वि.सं.१९२९ साल, सि.नं. ६९, मू.नं. ९, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

५९ रेग्मी, **पूर्ववत्**, टिप्पणी नं.२४, पृ.१४३ ।

६० "पर्वत बाइस खानी, मगरांत, रुकुम खानीको तामा खरिद गर्ने हट्टी, माहाल अड्डा", कम्याण्डरी किताब, वि.सं.१९२३ साल, सि.नं. ३९, मू.नं. ३, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

६१ "बुटौल टक्सारले पाल्पा तीन साँचामा पैसा दाखिल गर्ने बारे थप सवाल", पाल्पा तीन साँचाको सवाल, **पूर्ववत्**, टिप्पणी नं.७, पृ.१०७ ।

६२ "हाल आवादी पर्ति जग्गाको तिरो ठेक्ने काम", पाल्पा माल सवाल, **पूर्ववत्**, टिप्पणी नं.१७, पृ.४०-४४ ।

६३ **उही**,

६४ **उही**,

६५ "नापी मेदवंदी गर्ने रुल", **उही**, पृ.१०८-११० ।

६६ "जिम्मावाली तालुकी पजनी गर्ने का", **उही**, पृ.७३-७६ ।

६७ "कर्णेल खड्गबहादुर कुँवरले दशरथ पाध्यालाई विर्ता थमौती गरिदिएको वि.सं. १९०८ पौष बदी ८ को कागज", कर्णबहादुर बानियाँ क्षत्री, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पबिलकेशन एण्ड डिस्टीब्यूसन प्रा. लि., वि.सं. २०६३, पृ. २६१ ।

६८ "शेरजङ्ग थापाकी महातारीले अमरनारायण गुठीका गुठीयारलाई वि.सं. १९३५ कार्तिक बदी १ मा गरिदिएको दानपत्र," कर्णबहादुर बानियाँ, "तानसेनका मठ, मन्दिर, चैत्य तथा विहारहरूको कलाकौशल र गुठी ब्यवस्था", त्रि.वि., शिक्षाध्यक्षको कार्यालय, अनुसन्धान महाशाखा कीर्तिपुरमा प्रस्तुत लघुअनुसन्धान, वि.सं. २०५६, पृ. १३८-४७ ।

६९ "शेरजङ्ग थापाकी महातारीले राजनरसिंहलाई भगवती मन्दिरको पुजारीमा थमौती गरिदिएको वि.सं. १९३७ आषाढ शुदी ३ को कागज," **उही**, पृ. १६३-६४ ।

७० मालपोत कार्यालय पाल्पाबाट प्राप्त जानकारी ।

७१ **उही** ।

७२ "पाल्पा माडी अर्चले बस्ने पदमकुमारी, रेणुकुमारी ब्राहमणीले वि.सं. १९७० वैशाख शुदी १३ मा शिवालयका नाउँमा गरिदिएको दानपत्र" बानियाँ, **पूर्ववत्**, टिप्पणी नं.६८, पृ. १२२-२६ ।

# ८. पाल्पा गौँडा अन्तरगत सञ्चालित खानीहरू: एक ऐतिहासिक सर्वेक्षण

## १. विषय प्रवेश

मध्यकालमा नेपाल बाइसी, चौबीसी र अनेकौं स-साना राज्यमा विभाजित थियो। ती भुरेटाकुरे राज्यहरूलाई एक सुत्रमा गाँस्ने काम अठारौं शताब्दीको उत्तरार्द्धसम्म निरन्तर रूपमा चलिरहेको थियो। यसै सिलसिलामा नेपालले तिब्बत र अङ्ग्रेजसँगको युद्धको सामना गर्नुपर्‍यो। नेपाल-अङ्ग्रेज युद्धपश्चात् भएको सुगौली सन्धिले नेपालको एकीकरणमा अवरोध उत्पन्न गर्‍यो र नेपाल पहाडी भू-भागमा मात्र सिमित रहन गयो। तर सन् १८५७ (वि.सं.१९१४) मा भारतमा अङ्ग्रेजका विरुद्ध भएको विद्रोहमा नेपालले सहयोग गरेवापत अङ्ग्रेजले नेपाललाई पश्चिम नेपालका बाँके, बर्दिया, कैलाली र कञ्चनपुर इलाका फिर्ता दिएपछि सन् १८६०(वि.सं.१९१७)मा नेपाल र ब्रिटिस भारतको सिमाङ्कन गरियो। वर्तमान नेपाल त्यही सिमाङ्कन भित्रको भू-भागमा पर्दछ। यसरी नेपालको भू-भाग निश्चित भएपछि सो क्षेत्रमा प्रशासनिक सुदृढीकरण गर्ने कार्य सुरु भयो। यसै सिलसिलामा नेपालको पश्चिमी क्षेत्र जसलाई तत्कालीन प्रशासनिक विभाजन अनुसार पाल्पा गौँडा भनिन्थ्यो। सो क्षेत्रमा विभिन्न खानीहरू सञ्चालन गरिएको थियो। ती खानीहरू कसरी सञ्चालन भएका थिए र किन विलोप भए भन्ने बारेमा यस लेखमा चर्चा गरिन्छ।

## २. पाल्पा गौँडा अन्तरगतका खानीहरू

नेपालको पहाडी इलाकामा तामा, फलाम, र सिसाका खानीहरू प्रशस्त मात्रामा भएको कुरा विभिन्न स्रोतबाट थाहा हुन्छ। ती मध्ये हाल पश्चिम नेपालका पाल्पा, गुल्मी, अर्घाखाँची, बाग्लुङ, रुकुम र म्याग्दी जिल्लामा पर्ने विभिन्न क्षेत्रमा उन्नाइसौं शताब्दीमा तामा र फलाम खानी सञ्चालन भएको पाइन्छ। नेपालको पश्चिमी क्षेत्रमा सञ्चालित खानीहरूलाई पर्वत बाइस खानी, मगराँत खानी र रुकुम खानीको नामले चिनिन्थ्यो। नेपाली सेनाको जङ्गी अड्डामा रहेको पुस्तकालयमा सुरक्षित वि.सं. १९०९ को एक अभिलेखमा पश्चिम नेपालका खानी र टक्सारको आम्दानीबाट रु.५८,०३३।- राजश्व प्राप्त भएको देखाइएको छ।[१]

वर्तमान अर्घाखाँची जिल्लामा अर्घा र सकिनधारा भन्ने ठाँउमा सिन्दुरेखानी र धाराखानी नामका तामाखानी सञ्चालित थिए। गुल्मी जिल्लाको भार्सेमा चाहारेडाँडाखानी,

फोक्सिङमा लम्कराखानी, जयामा जयाखानी, जमादीमा हरियोखानी, खड्गकोटमा लुङखानी र मर्भुङमा मुरुङ नामका तामाखानी तथा डडल्कामा डडल्काखानी, इश्मामा हर्याटा खानी र धुर्कोटवस्तुमा धुर्कोट खानी नामका फलाम खानी सञ्चालित थिए। गुल्मीको सदरमुकाम रहेको तम्घासमा धाइथुम नामक खानी थियो जसबाट सविता भन्ने धातु निकालिन्थ्यो। बाग्लुङ जिल्लाका लाममेला, ओख्ले र गलकोटमा लाममेला खानी, ओख्लेखानी र पाण्डवखानी नामका तामाखानी सञ्चालित थिए। म्याग्दी जिल्लाका रुमदेउराली, टीकावाङ, बरङ्जा, भिं र चिमखोला भन्ने ठाँउमा रुमखानी, टीकावाङखानी, बराङ्जाखानी, भिंखानी र चिमखोलाखानी नामका तामाखानी सञ्चालित थिए। त्यस्तै रुकुम जिल्लाका पद्मीसाल र भुम्लाबाङमा पदमीसालखानी र भुम्लाबाङखानी नामका तामाका खानी सञ्चालित थिए।[१]

## ३. खानी सञ्चालन प्रक्रिया

उन्नाइसौं शताब्दीको पूर्वार्द्ध अर्थात राणाशासनकाल पूर्व नेपालका खानीहरू अमानत वा इजारा प्रथाद्वारा सञ्चालन गर्ने गरेको पाइन्छ। वि.सं. १८५१ मा जानकीराम नेवारको नाममा जारी गरिएको सनदमा आग्रीहरूलाई जग्गा वितरण गर्ने, उनीहरूलाई काछोसिर्तो, वलक र दण्डकुण्ड जस्ता कर दस्तुर असुल गर्न पाउने गरी चेपेमर्स्याङदी नदीदेखि पश्चिम भेरी नदीदेखि पूर्वका इलाकामा रहेका फलाम, सिसा र सविता खानी इजारा प्रथाद्वारा सञ्चालन गर्ने अधिकार दिइएको थियो।[३] त्यस्तै वि.सं. १८७२ मा प्रल्हाद थापा र महावीर कार्कीका नाममा जारी गरिएको सनदले पनि पश्चिम नेपालका खानीहरू ठेक्का प्रथामा सञ्चालित हुने कुराको पुष्टि गर्दछ।[४] तर वि.सं. १८५६ मा श्रीकान्त पाध्या र लक्ष्मणको नाममा जारी गरिएको सनदमा भने ठेकेदारले बढी फाइदा लिनका लागि आग्रीहरू उपर अत्याचार गर्ने गरेकोले इजारा प्रथा तोडी अमानतमा खानी सञ्चालन गर्ने जिम्मा दिइएको देखिन्छ।[५]

उन्नाइसौं शताब्दीको उत्तरार्द्ध अर्थात राणा शासनकालमा पनि अमानत र इजारा प्रथाद्वारा नै खानी सञ्चालन गर्ने गरेको पाइन्छ। वि.सं. १९२८ को एक अभिलेखमा सुब्बा हेमलालले तीन वर्षे ठेक्का कबुल अनुसारको रकम बुझाउन नसकेकोले पर्वत बाइसखानी, मगराँतखानी र रूकुमखानीको इजारा तोडी अमानतमा सञ्चालन गर्ने आदेश दिइएको कुरा उल्लेख छ।[६] वि.सं. १९२९ को अर्को अभिलेखमा भने अमानतमा खानी सञ्चालन गर्दा खानी तथा टक्सारका हाकिम र कारिन्दाले ढाँटछल गरी खानीबाट प्राप्त हुने राजश्वमा कमी आएकोले त्यसको छानविन गर्न पाल्पा धरमपानीका ना.सु.

नन्दराज गुरूघरानालाई खटाइएको कुरा उल्लेख छ ।[७] त्यसपछि उनलाई नै ती खानीहरू असानतमा सञ्चालन गर्न दिइएकोमा उनका सहयोगीले आग्रीउपर शोषण र अत्याचार गरेकोले आग्री र इजारादारबीच विवाद उत्पन्न भएको थियो । यो विवादको अन्त्य गरी खानीलाई सुचारू गर्न वि.सं. १९४१ मा सुब्बा रामप्रसाद थकालीलाई ठेक्का दिइएको थियो ।[८]

खानी सञ्चालनका लागि विभिन्न ठाउँमा खानी र हट्टी अड्डा स्थापना गर्न बाग्लुङमा 'पश्चिम बाइसखानी हट्टी टक्सार गोश्वारा अड्डा' स्थापना गरिएको थियो । यो गोश्वारा अड्डामा कप्तान दर्जाका सैनिक हाकिम हुन्थे भने उनको मातहतमा मुखिया, सुवेदार, डिठ्ठा, नौसिन्दा, हवल्दार, अमाल्दार र सिपाही दर्जाका कारिन्दा हुन्थे भन्ने कुरा राष्ट्रिय अभिलेखालयमा सुरक्षित कम्याण्डरी किताबको अभिलेखबाट अवगत हुन्छ ।[९]

खानी सञ्चालनका लागि पाल्पा गौँडा अन्तरगतका (१) कलचोखानी (२) बुंगाखानी (३) पाण्डवखानी (४) चाहन्याखानी (५) जोखुंखानी (६) विर्कुनखानी (७) भिकंखानी (८) फोगसिंखानी (९) रूकुमखानी र (१०) दरमखानीमा खानी अड्डा स्थापना गरिएका थिए ।[१०]

खानीबाट प्राप्त धाउ गालेर धातु र किट छुट्याउन खानीहरूको पायक पर्ने ठाउँमा हट्टी स्थापना गरिएको हुन्थ्यो । त्यसको रेखदेखका लागि हट्टी अड्डा खडा गरिएको थियो । पाल्पा गौँडा अन्तरगतका (१) बाग्लुङ (२) बेनी (३) वामी (४) मगराँत (५) रिडी र (६) तानसेनमा हट्टी अड्डा स्थापना गरिएका थिए ।[११]

खानी सञ्चालनका लागि विभिन्न किसिमका अड्डाहरू स्थापना गर्नुका साथै अमानत वा ठेक्का कुन प्रक्रियाबाट खानी सञ्चालन गर्दा बढीभन्दाबढी राजश्व प्राप्त हुन्छ भन्ने नीति अवलम्बन गरिन्थ्यो । यसरी नीति तय गर्दा सरकारी तवरबाट खानी सञ्चालन गर्नु लाभदायक नभएको भन्ने ठहर गरी वीर शमशेरको पालामा वि.सं.१९५८ मा पश्चिम नेपालका सम्पूर्ण खानी र टक्सार अड्डाहरू खारेज गरिएका थिए ।[१२] त्यसपछि यो क्षेत्रमा रहेका खानी सञ्चालन गर्ने काम पश्चिम बाईसखानी हट्टी टक्सार गोश्वारा अड्डाले इजारा प्रथाद्वारा गर्न थालेको थियो । तर ठेकेदारी प्रथाद्वारा पनि सरकारलाई कुनै फाइदा नभएकाले खानी सञ्चालनको अभिभारा सरकारले नलिने र निजी रूपमा खानी सञ्चालन गर्न पाउने गरी वि.सं.१९७४ मा 'पश्चिम बाइसखानी हट्टी टक्सार गोश्वारा अड्डा' पनि खारेज गरिएको थियो ।[१३] त्यसपछि खानी भएका ठाउँमा बसोबास गर्ने रैतीका जग्गा माल अड्डाको मोठ नम्बरीमा दर्ता गरी खानी रकम भनी निश्चित तिरो तोकिएको थियो ।[१४] खानी सञ्चालनलाई प्रभावकारी बनाउन वि.सं.

१९९८ मा खानी ऐन जारी गरी 'नेपाल ब्यूरो अफ माइन्स' नामक अड्डाको स्थापना गरिएको थियो ।[१५] यसको मुख्य उद्देश्य नेपालभरका खानीहरू वैज्ञानिक तथा व्यवस्थित तरिकाले सञ्चालन गर्ने थियो तर सो योजना कार्य रूपमा परिणत हुन सकेन ।

वि.सं. २००७ सालको राजनैतिक परिवर्तनपछि नेपालमा खानीको सम्भाव्यताबारे अध्ययन गर्न विदेशीहरूको सहयोग लिइएको थियो । त्यसमध्ये स्वीट्जरल्याण्डका भूगर्भविद टोनी हेगन र अमेरिकी खानी विशेषज्ञ रबर्ट एस. स्यानफोर्डले गरेको अनुसन्धान विशेष उल्लेखनीय छन् । अमेरिकाको 'प्वाइण्ट फर प्रोग्राम' का खानी विशेषज्ञ स्यानफोर्डले पाल्पा, प्यूठान र दाङका तामा, सिसा र सविता खानीको अध्ययन गरेका थिए ।[१६] तर टोनी हेगन र स्यानफोर्डको अनुसन्धान प्रतिवेदन सार्वजनिक नगरिकनै वि.सं. २०१२ मा नेपाल सरकारले खानी रकम लागेका जग्गा रैकरमा परिणत गरेको थियो ।[१७]

खानी सञ्चालनको प्रभावकारी नीतिको अभाव र वैज्ञानिक प्रविधिको कमीका कारण नेपालका अधिकांश खानीहरू लोप हुँदै गएको भएतापनि पाल्पा, गुल्मी र बाग्लुङका विभिन्न क्षेत्रमा वि. सं. २०१९ सम्म कोइला, फलाम, तामा, शिसा, सुन र नुनका खानी सञ्चालन भइरहेको कुरा सरकारी तथ्याङ्कबाट ज्ञात हुन्छ ।[१८] पश्चिम नेपालका खानीहरू के कसरी सञ्चालन गर्ने भन्ने बारेमा अध्ययन गर्न वि.स.२०२० मा भारतको विडला कम्पनीले जिम्मा लिएको थियो ।[१९] तर यातायातको असुविधाका कारण खानीसम्म पुग्न कठिनाइ परेको भनी उक्त कम्पनीले सो काम छाडिदिएकोले नेपालमा खानी सञ्चालन गर्ने प्रयास असफल भएको थियो ।[२०] पर्वत बाइस खानी मध्ये म्याग्दी जिल्लाका ओखरबोट र बरञ्जा तथा बाग्लुङ जिल्लाका पाण्डवखानी र खुंखानीमा निजी तवरबाट परम्परागत रूपमा वि.सं.२०३२ सालसम्म खानी सञ्चालन भइरहेको एक प्रतिवेदनबाट ज्ञात हुन्छ ।[२१]

## ४. निष्कर्ष

नेपालको एकीकरण पश्चात आर्थिक स्रोतहरू परिचालन गर्ने सिलसिलामा पश्चिम नेपालमा विभिन्न खानीहरू सञ्चालन गरिएका थिए । ती खानीहरू पर्वत बाइसखानी, मगराँत खानी र रूकुम खानीका नामले परिचित थिए । पश्चिम नेपालमा खास गरेर तामाखानी र केही मात्रामा फलाम तथा सविताका खानी सञ्चालन गरिएका थिए । ती खानीहरू कुनै समयमा राज्यले आफै अमानतमा सञ्चालन गर्दथ्यो भने कुनै समयमा व्यक्ति वा समुहलाई इजारामा दिइन्थ्यो । खानी सञ्चालनका लागि खानी, हट्टी

र टक्सार रहेका ठाउँमा विभिन्न अड्डाहरू समेत स्थापना गरिएका थिए ।

अमानतमा खानी सञ्चालन गर्दा हाकिम र कारिन्दाले काम बिगार्ने र आम्दानीभन्दा खर्च बढी देखाउने तथा ठेक्कामा खानी सञ्चालन गर्दा ठेकेदारहरूले आग्रीहरूलाई शोषण र अत्याचार गर्ने भएकोले खानीबाट फाइदा भएन भन्ने कारण देखाएर प्रधानमन्त्री वीर शमशेरले वि.सं. १९५८ मा खानी सम्बन्धी अड्डाहरू खारेज गरिदिए । त्यसपछि चन्द्र शमशेर प्रधानमन्त्री भएका बखत खानीमा बसेका रैतीलाई खानी रकम तोकी राज्यको तर्फबाट खानी सञ्चालन गर्ने परम्पराको अन्त्य गरियो । तर निजी रूपमा खानी सञ्चालन गर्ने काम भने त्यसपछि पनि भइरहेको पाइन्छ । यसरी सरकारी तवरबाट खानी सञ्चालनमा कुनै पहलकदमी नभएतापनि स्थानीय स्तरमा निजी प्रयासबाट केही स्थानमा खानी सञ्चालन भइराखेकोमा हाल त्यो काम पनि स्थगित भएको छ । नेपालमा खानीको सम्भाव्यता प्रचुर मात्रामा भएको भएतापनि यसतर्फ राज्यको ध्यान नगएको हुनाले खानी खन्ने काम हुन सकेको छैन । नेपालको आर्थिक विकासमा टेवा पुऱ्याउने खानी सञ्चालन गर्ने कार्यमा राज्यको ध्यान जान आवश्यक छ ।

## टिप्पणी

१ "वि.सं. १९०९ को भरमुलुकको नगद, जिन्सी जगाको उद्‌ती र जिल्ला खोलिएको आम्दानी साथै खान्की किताप", पृ. १-५७, तेस्रो भाग किताब, सि.नं. ३(२), नेपाली सेनाको जङ्गी अड्डा पुस्तकालय, काठमाडौं ।

२ कर्णबहादुर बानियाँ क्षत्री, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पब्लिकेशन एण्ड डिस्ट्रीब्यूटर्स प्रा. लि., वि.सं.२०६३, पृ.१८७ ।

३ "जानकीराम नेवारलाई चेपे मर्स्याङ्दी पश्चिम भेरी पूर्वका खानीको इजारादार नियुक्त गरिएको वि.सं. १८५१ साल श्रावण सुदी ११ को रुक्का", मा.फि. रिल नं. ई २४३१/२, पृ. ३०७, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४ "द पर्वत कपर माइन्स", **रेग्मी रिसर्च सेरिज**, वर्ष १८, नं. १२, सन् १९८६, पृ.१८१ ।

५ "माइन्स एण्ड म्यूनिशन्स, सन् १८००", **उही**, वर्ष १०, नं. ६, सन् १९७८, पृ.१०६-१०७ ।

६ "कम्याण्डरी किताब, १९२८ साल, पहाड पूर्व पश्चिम", सि.नं. ६६, मू.नं. ८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

७ **उही**, १९२९ साल, सि.नं. ६९, मू. नं. ९ ।

८ महेश सी. रेग्मी, **एन इकोनोमिक हिस्ट्री अफ नेपाल**, १८४६-१९०१, वाराणसी : नाथ पब्लिसिङ हाउस, सन् १९८८, पृ.१४३ ।

९ "कम्याण्डरी किताब, १९२३-३३ साल, पहाड पूर्व पश्चिम", सि.नं. ३९-८७, मू.नं. ३-१४, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[10] उही ।

[11] उही ।

[12] "वि.सं. १९५८ साल मार्ग वदी ११ मा पश्चिम बाइसखानीका अड्डाहरू खारेज गरिएको रुक्का", मा.फि. रिल नं. ई २५३०/१, पृ. ३६४-८०, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[13] "पश्चिम २२ खानी हट्टी टकसार गोश्वारा अड्डा जिल्लै पर्वत बाग्लुङबाट जारी भयाको ", **गोरखापत्र**, १९६७ साल आषाढ १४ गते ।

[14] "खानी विषय गर्ने काम", पाल्पा माल सवाल, वि.सं. १९९१–२००७, पृ.७३–७६ । (श्री ३ महाराज र कम्याण्डर इन चिफबाट पाल्पा मालका हाकिम कारिन्दाको नाममा जारी गरिएको वि.सं. १९९१ देखि २००७ सालसम्मको दुई छापे सनद सवालको सङ्कलनलाई पाल्पा माल सवाल भनिएको छ । नेपाली कागजमा लेखिएको र छालाको जिल्द भएको २७४ पृष्ठको किताब, मालपोत कार्यालय पाल्पा) ।

[15] इश्वरी प्रसाद, **द लाइफ एण्ड टाइम्स अफ महाराज जुद्ध शमशेर जङ्गबहादुर राणा अफ नेपाल**, न्यू दिल्ली : आशिष पब्लिसिङ हाउस, सन् १९७५, पृ.२७४-७५ ।

[16] **नेपाल गजेट**, २००८ साल फागुन २० गते ।

[17] उही, २०१२ साल मार्ग २ गते ।

[18] **खनिज परिचय**, काठमाडौं : श्री ५को सरकार,उद्योग वाणिज्य मन्त्रालय, खानी विभाग, वि.सं. २०१९, पृ.७९-८० ।

[19] **गोरखापत्र**, २०२० साल कार्तिक १३ गते ।

[20] **मेचीदेखि महाकाली**, भाग ३, पश्चिमाञ्चल विकास क्षेत्र, काठमाडौं : श्री ५को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, वि.सं. २०३१, पृ.६२२ ।

[21] विश्व प्रधान,"नेपालमा खानीको सम्भाब्यता" **प्रज्ञा**, वर्ष ५, अङ्क १, पूर्णाङ्क १५, वि.सं. २०३२, पृ.३४ । (हाल म्याग्दी जिल्लामा पर्ने पर्वत बाइस खानीको ओखरबोटमा वि.सं. २०३४ सालमा सो ठाउँको भ्रमणमा जाँदा निजी तवरबाट परम्परागत रूपमा आग्रीहरूले खानी खनिरहेको दृश्य यो पंक्तिकारले खानीभित्रै पसेर हेर्ने मौका पाएको थियो ) ।

# ९. राणाकालीन नेपालको न्याय प्रशासनमा पाल्पा गौँडाको भूमिका

## १. विषय प्रवेश

ससाना भुरेटाकुरे राज्यलाई एउटै शुत्रमा बाँधेर विशाल नेपाल निर्माण गर्ने अभियानमा नेपाल-अङ्ग्रेज युद्धले अवरोध खडा गरेपछि मुलुकका प्रशासकहरूको ध्यान प्रशासनिक सुदृढीकरणतिर गयो । त्यसको फलस्वरुप भीमसेन थापाको पालामा प्रशासनिक सुदृढीकरणका केही काम भएको थियो । तर उनको पतनपछि नेपालको राजनीतिमा देखा परेको अन्योल र अस्थिरताका कारण उक्त कार्य अगाडि बढ्न सकेन । नेपालको राजनीतिमा देखा परेको अस्थिरता, गुटबन्दी र षडयन्त्रका कारण वि.सं. १९०३ मा राणा शासनको उदय भयो । । यद्यपि राणा शासनकालमा राणाहरूले आफ्नो परिवारको हितभलाई बाहेक अन्य कुनै कार्य गर्न रूचाउँदैन्थे तापनि यिनीहरूले नेपालको प्रशासनिक सुधार कार्यमा पनि महत्वपूर्ण योगदान दिएको पाइन्छ ।

नेपालको न्याय प्रशासनको क्षेत्रमा त राणा शासनकालमा निकै नै प्रगति भएको पाइन्छ । वि.सं. १९१० मा मुलुकी ऐन जारी भएपछि नेपालको न्याय प्रशासनको क्षेत्रमा क्रमिक रूपमा प्रगति हुँदै गएको देखिन्छ । वि.स.१९५२ मा गरिएको प्रशासनिक विभाजन पछि त नेपालको न्याय प्रशासनको क्षेत्रमा निकै नै उन्नति भएको मान्नु पर्दछ । राणा शासनकालमा न्याय प्रशासनमा भएको सुधार अनुसार पश्चिमी क्षेत्रको प्रशासन सञ्चालन गर्ने केन्द्र पाल्पालाई बनाइएको थियो । त्यसकारण राणाकालीन पाल्पामा न्याय प्रशासन कसरी चलेको थियो र त्यसमा पाल्पा गौँडाको के कस्तो भूमिका थियो भन्ने कुरा निकै चासोको विषय भएको हुनाले यस लेखमा त्यस बारे प्रकाश पार्ने प्रयास गरिन्छ ।

## २.राणाकालीन नेपालको न्याय प्रशासन

नेपालको एकीकरण हुनुभन्दा पहिले यहाँ अनेकौं राज्यहरू भएकोले तिनीहरूको आ-आफ्नै किसिमको न्याय प्रणली थियो । एकीकरणपछि नेपालभर एकै प्रकारको न्याय प्रणाली लागु गर्ने प्रयास भयो । नेपालमा ब्रिटिस रेजिडेन्टको रूपमा बसेका हड्सनका अनुसार राणा शासनकाल पूर्व नेपालको न्याय प्रशासनको सबैभन्दा माथिल्लो तहमा भारदारी अदालत थियो जसले राजा वा मुख्तियारको अध्यक्षतामा न्याय सम्पादन गर्दथ्यो, त्यसभन्दा मुनि कोटीलिङ्ग, इटाचपली, टकसार र धनसार नामका चार सदर अदालत थिए भने सबैभन्दा तल्लो तहमा प्रान्तीय अदालतहरू थिए ।[१] राणा शासनकाल

पूर्व न्याय सम्पादनका दृष्टिले नेपालको पहाडी क्षेत्रलाई आठ र तराई क्षेत्रलाई आठ प्रान्तमा बाँडिएको थियो जहाँ प्रान्तीय अदालत थिए भन्ने विद्वानहरूको भनाइ छ ।[२] पहाडि क्षेत्रमा पाल्पा, धनकुटा र डोटीमा पनि अदालत थिए र सदर अदालतले यी अदालत मार्फत प्रान्तीय अदालत उपर नियन्त्रण कायम गर्दथे भने स्थानीय स्तरमा गाउँगाउँमा सानातिना मुद्दामामिला छिन्न र मालपोत असुल गर्न अमाली, द्वारे र फौजदार जस्ता अर्ध न्यायिक पदाधिकारी राखिएको हुन्थ्यो भन्ने पनि विद्वानहरूको भनाइ छ ।[३] तर राणा शासनकाल पूर्व नेपालको न्याय प्रशासन कसरी चलेको थियो भन्ने कुरा त्यति स्पष्ट छैन ।

राणा शासनकालमा वि.सं.१९१० मा मुलुकी ऐन जारी गरिनुका साथै पाल्पा, डोटी, दैलेख, जुम्ला, सल्यान, धनकुटा, कास्की, लमजुङ, गोरखा, बाग्लुङ, कटहरवन, माझखण्ड, जलेश्वर, बर्दिया, बैतडी, स्याङजा, तौलिहवा, चैनपुर, इलाम, तनहु, पाटन र भादगाउँ गरी २२ जिल्लामा अदालत स्थापना गरिएको थियो भने बारा, पर्सा, चितवन, महोत्तरी, सप्तरी, रौतहट, सर्लाही र बुटवल गरी तराइका आठ जिल्लामा गोश्वारा र अमिनी नामका न्यायालय स्थापना गरिएको थियो ।[४] वि.सं. १९४५ मा न्याय प्रशासनमा केही सुधार गरिएको थियो जसअनुसार नेपालमा पाँच तहका अदालत रहने ब्यवस्था गरिएको थियो । यो सुधार अनुसार सबैभन्दा तल्लो तहमा शुरु अदालत रहने, त्यसभन्दा माथि दोस्रो तहमा पाल्पा, डोटी र धनकुटामा गौंडा अदालत रहने, तेस्रो तहमा चार वटा सदर अदालत रहने, चौथो तहमा अदालत गोश्वारा रहने तथा पाँचौं तहमा कमाण्डर इन चिफको अधिनमा मुलुकी अड्डा रहने ब्यवस्था गरिएको थियो ।[५] यसरी कुनै पनि विवादमा अन्तिम फैसलासम्म पुग्दा झगडियाले पाँच तहका अदालतमा धाउनु पर्ने बाध्यता थियो । न्याय प्रशासनमा भइरहेको कठिनाइलाई महसुस गरेर वि.सं. १९५८ मा केही सुधार गरिएको थियो । यो सुधार अनुसार न्याय प्रशासनको तहलाई घटाएर चार वटा बनाइयो भने सबैभन्दा माथिल्लो तहमा निर्णय दिने अधिकारी कमाण्डर इन चिफको सट्टा प्रधानमन्त्रीलाई राखियो । साथै तराइका जिल्लामा पनि पुनरावेदन सुन्ने न्यायिक निकाय स्थापना गरी त्यसलाई गोश्वारा भन्न थालियो ।[६] चन्द्र शमशेरको प्रधानमन्त्रीत्वकाल (१९५८-८६) मा न्याय प्रशासनको क्षेत्रमा ब्यापक फेरबदल गरियो । त्यतिखेर भएको परिवर्तन अनुसार पहाडमा अदालत र तराइमा अमिनी नामका शुरु अदालत राखियो भने त्यसले गरेको फैसला उपर पुनरावेदन गर्न पहाडमा गौंडा र तराइमा गोश्वारा अदालत राखियो । त्यतिखेर केही शुरु अदालत थप गरियो भने अपिल अदालतको रूपमा इलाम गौंडा थपियो ।[७]

नेपालको न्याय प्रशासनको क्षेत्रमा सबैभन्दा महत्वपूर्ण सुधार वि.सं. १९९७ मा भयो । त्यतिखेर न्याय प्रशासनलाई कार्यपालिकाको अधिनबाट मुक्त गरी केन्द्रमा प्रधान न्यायालय स्थापना गर्ने काम भयो । साथै गौँडा र गोश्वारामा पनि बडाहाकिमबाट न्यायिक अधिकार झिकी छुट्टै अपिल अदालत स्थापना गरियो र त्यसको प्रमुख सुब्बा पदको निजामती कर्मचारीलाई बनाइयो ।[८] न्याय प्रशासनको क्षेत्रमा पद्म शमशेरको शासनकाल (२००२-२००५)मा पनि केही सुधार भएको पाइन्छ । त्यतिखेर केन्द्रमा सदर भारदारी खारेज गरिनुका साथै केही अमिनी, अदालत र अपिल अड्डा थप गरिएको थियो ।[९]

## ३. राणाकालीन न्याय प्रशासनमा पाल्पा गौँडाको भूमिका

### ३.१ पाल्पा गौँडाको संक्षिप्त परिचय

नेपालको दक्षिण पश्चिमी क्षेत्रमा पर्ने भूभागमा मध्यकालमा सेनवंशको शासन थियो । सेनवंशको शासन शुरु हुनुभन्दा पहिले त्यस क्षेत्रलाई मगरांत भनिन्थ्यो । वि.सं. १५५० मा यो क्षेत्रमा सेन वंशको शासन शुरु भएको थियो । नेपालको एकीकरणको सिलसिलामा वि.सं. १८६१ मा यो इलाका विशाल नेपालमा विलिन भएको थियो । त्यसपछि यो क्षेत्र नेपालको एक प्रशासनिक एकाइको रूपमा रहन गएको देखिन्छ । तर राणा शासन शुरु हुनुभन्दा पहिले नेपालको प्रशासनिक विभाजन के कसरी भएको थियो भन्ने कुरा स्पष्ट नभएकोले पाल्पा गौँडाको प्रशासनिक क्षेत्र के कति थियो भन्ने कुरा पनि यकिन गर्न कठिन छ । राणा शासनकालमा भने पाल्पा गौँडाको प्रशासनिक क्षेत्र स्पष्ट हुँदै गएको देखिन्छ । राणा शासनकालमा वि.सं. १९०६ मा खड्गबहादुर कुँवरलाई पाल्पा गौँडाको प्रशासक बनाउँदा काली पश्चिम महाकाली पूर्व, मधेश पहाड, खानी-टकसार, रकुम, थाक, गोर्खा समेतको प्रशासन हेर्न पाउने अख्तियारी दिइएको थियो[१०] भने वि.सं. १९३१ मा वीर शमशेरलाई सो गौँडाको प्रशासक बनाउँदा त्रिसुली नदीदेखि पश्चिमका सम्पूर्ण अड्डाहरूको प्रशासन हेर्न पाउने अधिकार दिइएको थियो ।[११] त्यस्तै वि.सं. १९३७ मा भूपेन्द्र जङ्ग राणालाई पाल्पा गौँडाको तैनाथी दिँदा भने काली गण्डकीदेखि पश्चिमका नौ जिल्ला अर्थात् पुराना राज्य पाल्पा, गुल्मी, अर्घा, खाँची, धुर्कोट, मुसिकोट, इस्मा, गलकोट र पर्वत राज्यले चर्चेको भूभागको मात्र प्रशासन हेर्ने जिम्मेवारी दिइएको थियो ।[१२]

नेपालको प्रशासनिक सुदृढीकरणको सिलसिलामा वि.सं.१९५२ मा महत्वपूर्ण

परिवर्तन भयो । त्यतिखेर नेपालको पहाडी भूभागलाई २०, तराईलाई १२ र काठमाडौं उपत्यकालाई ३ गरी ३५ जिल्लामा विभाजन गरियो जसबाट नेपालको प्रशासनिक विभाजनको स्पष्ट खाका निर्धारण भयो ।[१३] यो विभाजन अनुसार पाल्पा पहाडी जिल्ला मध्ये एक थियो । तर प्रशासनिक दृष्टिकोणले पाल्पा नेपालको पश्चिमी क्षेत्रको महत्वपूर्ण केन्द्र थियो । किनभने राणा शासनकालमा प्रशासनिक र जङ्गी बन्दोबस्तको काम गर्ने स्थानीय निकायलाई पहाडमा गौंडा, तराईमा गोश्वारा र भित्री मधेशमा गढी भनिन्थ्यो ।[१४] पाल्पा पनि पश्चिमी नेपालको प्रशासनिक र जङ्गी बन्दोबस्तको काम गर्ने गौंडा थियो । प्रशासनिक हिसाबले पाल्पा गौंडालाई पाल्पा र गुल्मी समेत आठ जिल्ला भनिन्थ्यो जसको सिमाना पूर्वमा काली गण्डकी, उत्तरमा भोट, पश्चिममा प्यूठान र दक्षिणमा बुटौल थियो ।[१५] वि.सं.१९५२ मा भएको प्रशासनिक विभाजन अनुसार यो भौगोलिक क्षेत्रभित्र पाल्पा, गुल्मी र बाग्लुङ जिल्ला पर्दथे जुन पाल्पा, गुल्मी, अर्घा, खाँची, मुसिकोट, इस्मा, धुर्कोट, गलकोट र पर्वत नामका पुराना नौ वटा राज्यले चर्चेको भूभाग पर्दथ्यो ।

यद्यपि निजामती प्रशासन र जङ्गी बन्दोबस्तको हिसाबले पाल्पा गौंडाको भूगोल माथि उल्लेखित भूभागमा सीमित भएको भएतापनि न्याय प्रशासनको दृष्टिले राणा शासनको प्रारम्भमा पाल्पा गौंडाको भूगोल त्रिशुली नदीदेखि पश्चिम महाकाली नदीसम्म फैलिएको थियो । त्यतिखेर दैलेख, जुम्ला, बाँके र कञ्चनपुरका शुरु अदालतले गरेका फैसलाउपर पुनरावेदन सुन्न डोटीमा गौंडा स्थापना गरिएको थियो तापनि उक्त गौंडाले गरेको फैसलाउपर पाल्पा गौंडाले पुनरावेदन सुन्ने अधिकार पाएको थियो ।[१६] वि.सं. १९८० मा न्याय प्रशासनमा भएको सुधारपछि मात्र डोटी गौंडाले स्वतन्त्र क्षेत्राधिकार पाएको हो । त्यसपछि पाल्पा गौंडाको न्याय प्रशासनको क्षेत्राधिकार घट्न गइ बाग्लुङ, पोखरा, प्यूठान, सल्यान, स्याङ्जा र पाल्पाका शुरु अदालतले गरेका फैसलाउपर मात्र पुनरावेदन सुन्न पाउने अधिकार पाएको थियो ।[१७] वि.सं. २००२ मा सल्यानमा पनि अपिल अदालत स्थापना गरिएपछि पाल्पा गौंडाको क्षेत्राधिकार झन् घट्न गयो र बाग्लुङ, स्याङ्जा, थाक र पाल्पाका शुरु अदालतले गरेका फैसलाउपर मात्र पुनरावेदन सुन्न पाउने भयो ।[१८] यसरी राणा शासनको अन्त्यतिर पाल्पा गौंडाको न्याय प्रशासनको क्षेत्र पनि निजामती र जङ्गी बन्दोबस्तको अधिकार क्षेत्र जस्तै पाल्पा, गुल्मी, अर्घा, खाँची, मुसिकोट, इस्मा, धुर्कोट, गलकोट र पर्वत नामका पुराना नौ वटा राज्यले चर्चेको भूभागमा सीमित भएको देखिन्छ ।

## ३.२ पाल्पा गौँडाको न्याय प्रशासन

राणाकालीन न्याय प्रशासनमा केन्द्रदेखि शुरु अदालतसम्मको तह बेलाबखतमा थपघट भइरहन्थ्यो तापनि स्थानीय स्तर अर्थात् अपिल अड्डादेखि मुनि गाउँस्तरसम्मको न्याय प्रशासनमा भने सदैव गौँडा, अदालत र अमाल गरी तीन तह रहने गरेको पाइन्छ।[१९] त्यस अनुसार पाल्पा गौँडा अन्तरगतका न्यायिक निकायको संगठन तालिका निम्नानुसार देखिन्छ-

पाल्पा गौँडा

डोटी गौँडा — जिल्ला अदालत

जिल्ला अदालत — अमाल राज्य अदालत

### ३.२.१ पाल्पा गौँडा

राणाकालमा नेपालको पश्चिमी क्षेत्रको न्याय प्रशासनको अपिल अड्डाको रूपमा रहेको पाल्पा गौँडाको सदरमुकाम तानसेनमा थियो। राणा शासनको पूर्वार्धमा यसको मातहतमा पश्चिम नेपालका सम्पूर्ण शुरु अदालत र डोटी गौँडा थिए। सल्यान, प्युठान, बाग्लुङ, पोखरा, भगवानपुर र तौलिहवाका शुरु अदालतले गरेका फैसलाको सिधै पाल्पा गौँडामा अपिल लाग्दथ्यो भने दैलेख, जुम्ला, बाँके र कञ्चनपुरका शुरु अदालतले गरेको फैसलाउपर डोटी गौँडामा अपिल लाग्दथ्यो। डोटी गौँडाले गरेको फैसलामा चित्त नबुझेमा पाल्पा गौँडामा अपिल लाग्दथ्यो। शुरु अदालत भन्दा मुनि अमाल र राज्य अदालत थिए। न्याय प्रशासनमा वि.सं. १९८० मा भएको सुधारपछि डोटी गौँडाले गरेको फैसलाउपर पाल्पा गौँडामा अपिल नलागि सिधै काठमाडौँको अपिल अड्डामा पुनरावेदन लाग्ने भएपछि पाल्पा गौँडाको क्षेत्राधिकार घट्न गइ सल्यान, प्यूठान, बाग्लुङ, पोखरा, स्याङ्जा र पाल्पाका शुरु अदालतले गरेका फैसलाउपर मात्र अपिल सुन्न पाउने भएको थियो।[२०]

यद्यपि राणा शासनकालमा न्याय प्रशासनका लागि निजामती कर्मचारी नियुक्त गर्ने ब्यवस्था थियो तापनि गौँडाको अदालतमा तैनाथवाला वा बडाहाकिम नै न्याय सम्पादनका प्रमुख हुन्थे। न्याय सम्पादनको सिलसिलामा कानुन र आदेशको पालना गराउन र चोरी, डकैती नियन्त्रण गर्न बडाहामकिमले सैनिक र अर्धसैनिक बलको प्रयोग पनि गर्न सक्दथे।[२१] आफ्नो इलाकाभित्रका जिल्ला अदालतबाट भएका फैसलाउपर पुनरावेदन सुन्ने र आफ्नो मातहतका अदालतको निरीक्षण, सुपरिवेक्षण गर्ने कार्य पनि

बडाहाकिमको हुन्थ्यो । निरीक्षणका सिलसिलामा अदालतका हाकिम र बिचारीले ढिलासुस्ती गरेमा वा भ्रष्टाचार गरेको थाहा पाएमा केन्द्रलाई जानकारी गराएर त्यस्ता कर्मचारीको तलब रोक्का गर्ने, पदबाट निलम्बन गर्ने वा बर्खास्त गर्ने कारबाइसमेत गर्न सक्दथे ।[२२]

पाल्पा गौंडाका बडाहाकिमले आफ्नो इलाकाभित्र परिआउने शुरु मुद्दा हेर्ने र आफ्नो मातहतको अदालतले गरेको फैसलाउपर पुनरावेदन सुन्ने अधिकारकासाथै आफ्नो इलाकाभित्रका आश्रित राज्यका राजारजौटाले गरेका दुर्व्यबहार र अन्यायप्रति जनताले गरेका उजुरी सुन्ने अधिकार समेत पाएका थिए ।[२३] पाल्पा गौंडाको न्याय प्रशासनको प्रमुख गौंडाको तैनाथवाला हुने ब्यवस्था भएकोमा वि.सं. १९९७ को सनदले पाल्पामा पनि अलगै अपिल अड्डाको स्थापना गरेपछि उनको न्याय सम्पादन सम्बन्धी अधिकार कटौती भयो । त्यसपछि पाल्पाको अपिल अड्डाको प्रमुख सुब्बा स्तरका कर्मचारी बन्ने ब्यवस्था भएको पाइन्छ । पाल्पा गौंडाको अपिल अड्डामा न्याय सम्पादनको काममा सहयोग पुऱ्याउन नायब डिठ्ठा, नायब मुखिया, नायब राइटर, नासिन्दा र टहलुवा पदका कर्मचारी नियुक्त भएका हुन्थे ।[२४] वि.सं.२००२ मा सल्यानमा पनि अपिल अड्डा खडा गरिएपछि पाल्पा गौंडाको मातहतमा बाग्लुङ, थाक, स्याङ्जा र पाल्पाका शुरु अदालतले गरेको फैसलाउपर मात्र पुनरावेदन सुन्न पाउने अधिकार रहन गएको थियो ।[२५]

### ३.२.२ जिल्ला अदालत

राणा शासनको शुरुमा केही जिल्ला अदालत स्थापना गरिएको भएतापनि पाल्पा गौंडा अन्तरगत कतिवटा जिल्ला अदालत थिए भन्ने कुरा स्पष्ट छैन । वि.सं.१९४५ बाट न्याय प्रशासनको स्पष्ट खाका बनेको हुनाले त्यसपछि पाल्पा गौंडाको अधिनमा कुन कुन जिल्ला अदालत थिए भन्ने कुरा स्पष्ट हुन्छ । नेपालको न्याय प्रशासनमा बेलाबखतमा भएका सुधारको आधारमा पाल्पा गौंडाको न्याय प्रशासनको ढाँचा निम्न तिथिमिति अनुसार उल्लेख गर्न सकिन्छ ।

#### (१) वि.सं. १९४५-५८

यो समयलाई पाल्पा गौंडाको उत्कर्षकाल मान्न सकिन्छ किनभने यो समयमा नेपालको सम्पूर्ण पश्चिमी क्षेत्र पाल्पा गौंडाको अधिनमा थियो । त्यतिखेर पाल्पा गौंडाको अधिनमा सल्यान, प्यूठान, बाग्लुङ, पोखरा, भगवानपुर र तौलिहवाका जिल्ला अदालतका साथै डोटी गौंडा र त्यसको अधिनका दैलेख, जुम्ला, बाँके र कञ्चनपुरका जिल्ला अदालत थिए ।[२६]

(२) वि.सं. १९५८–८०

वि.सं. १९५८ मा देव शमशेरको शासनकालमा तराईका जिल्लाहरूलाई पनि छुट्टै न्यायिक अधिकार दिइयो । त्यसबखत सप्तरी, वीरगञ्ज, बुटवल र नयाँ मुलुकमा पनि गोश्वारा स्थापना गरिएको हुनाले भगवानपुर र तैलिहवाका जिल्ला अदालत बुटवल गोश्वारा अन्तरगत तथा कञ्चनपुर र बाँके जिल्ला अदालत नयाँ मुलुक गोश्वारा अन्तरगत राखियो । त्यसपछि वि.सं. १९५८–८० सम्म पाल्पा गौँडा अन्तरगत सल्यान, प्यूठान, बाग्लुङ र पोखराका जिल्ला अदालत तथा डोटी गौँडा अन्तरगत दैलेख र जुम्लाका जिल्ला अदालत मात्र रहन गएको देखिन्छ ।[२७]

(३) वि.सं. १९८०–९२

वि.सं. १९८० मा न्याय प्रशासनमा भएको सुधार अनुसार डोटी गौँडाले स्वतन्त्र न्यायिक क्षेत्राधिकार पायो भने स्याङ्जामा पनि जिल्ला अदालत स्थापना गरियो । साथै पाल्पा जिल्ला अदालतलाई पनि पाल्पा गौँडा अन्तरगत राखियो । यस अघि पाल्पा जिल्ला अदालतले गरेको फैसला उपर सदर अदालत काठमाडौँमा मात्र अपील दिन पाइन्थ्यो । यसपछि वि.सं. १९८०–९२ सम्म पाल्पा गौँडा अन्तरगत सल्यान, प्यूठान, बाग्लुङ, पोखरा, स्याङ्जा र पाल्पाका अदालतहरू रहन गएका थिए ।[२८]

(४) वि.सं. १९९२–९७

वि.सं. १९९२ मा न्याय प्रशासनमा भएको सुधार अनुसार सदर भारदारीलाई गौँडा सरहको अदालतमा परिणत गरियो र पश्चिम ३ नं पोखराको अदालतलाई सदर अपील पहिलो अड्डा अन्तरगत राखियो । साथै थाक भन्ने ठाँउमा पनि नयाँ अदालत स्थापना गरी पाल्पा गौँडा अन्तरगत राखियो । त्यसपछि वि.सं. १९९२–९७ सम्म पाल्पा गौँडा अन्तरगत पाल्पा, बाग्लुङ, प्यूठान, सल्यान, स्याङ्जा र थाकका जिल्ला अदालतहरू भएको पाइन्छ ।[२९]

(५) वि.सं. १९९७–२००२

वि.सं. १९९७ मा जारी गरिएको सनदले न्यायपालिकालाई कार्यपालिकाबाट स्वतन्त्र गराउनुका साथै गौँडा र गोश्वाराका तैनाथवाला र बडाहाकिमको न्यायिक अधिकार कटौती गरी छुट्टै अपील अड्डा खडा गर्ने व्यवस्था गऱ्यो । त्यसपछि पाल्पा गौँडाको अदालत पनि पाल्पा गौँडा अपील अड्डामा परिणत भयो । त्यस अनुसार वि.सं. १९९७–२००२ सम्म पाल्पा गौँडा अपील अड्डा अन्तरगत पाल्पा, बाग्लुङ, सल्यान, प्यूठान, पश्चिम ४ न.(स्याङजा) र थाकका जिल्ला अदालत भएको पाइन्छ ।[३०]

(६) वि.सं. २००२–२००७

वि.सं. २००२ मा न्याय प्रशासनमा सुधार गरी अपील अड्डाहरूको संख्या बृद्धि गर्दा सल्यान जिल्लामा पनि अपील अड्डा खडा गरियो । त्यसपछि सल्यान र प्यूठान जिल्लाका अदालत पाल्पा गौंडाको अधिनबाट छुटे र पाल्पा, बाग्लुङ, पश्चिम ४ न.(स्याङ्जा) र थाकका जिल्ला अदालत मात्र पाल्पा गौंडा अन्तरगत रहन गएका थिए ।[३१]

न्याय प्रशासनको तल्लो तहमा रहेको जिल्ला अदालतका हाकिम डिठ्ठा पदका कर्मचारी रहने ब्यवस्था थियो । उनले आफ्नो इलाकामा परिआउने विवादको शुरु मुद्दा हेर्ने र आफ्नो मातहतका अमाल कचहरीले गरेका फैसला उपर पुनरावेदन सुन्ने अधिकार पाएका थिए । साथै उनले आफूभन्दा माथिल्लो निकाय वा केन्द्रको निर्देशनमा रही काम गर्दथे ।[३२]

### ३.२.३ अमाल

राणा शासनकालमा न्याय सम्पादन र मालपोत असुल गर्न सजिलो होस् भन्ने हेतुले प्रत्येक जिल्ला र इलाकाहरूका गाँउ गाँउको समूहलाई थुम वा मौजामा विभाजन गरिएको थियो ।[३३] ती मौजामा एक एक अमाल कचहरी स्थापना गरिएको हुन्थ्यो । यस्ता अमाल कचहरीले आफ्नो मौजामा परिआउने झैझगडाको छिनोफानो गर्ने काम गर्दथे तर यस्ता अमाल कचहरीलाई पञ्चखत सम्बन्धी मुद्दामा फैसला गर्ने अधिकार हुँदैनथ्यो । यस्ता विवादमा अमाल कचहरीले अभियुक्तलाई केरकार गरेर कायलनामा गराई उजुरी तयार गरी नजिकैको अदालतमा मुद्दा दायर गर्नु पर्दथ्यो ।[३४] राणा शासनकालको शुरुमा प्रत्येक थुम र मौजामा एक जना अमाली हुन्थे जसको मातहतमा द्वारे वा फौजदारले न्याय सम्पादन गर्दथे ।[३५] चन्द्र शमशेरको शासनकालमा वि.स. १९५९ मा अमाली प्रथा खारेज गरी तालुकदारी प्रथा लागू गरियो । त्यसपछि राजश्व संकलनका लागि माल अड्डा स्थापन गरी त्यसको हाकिम सुब्बा दर्जाको कर्मचारी रहने व्यवस्था गरियो । साथै गाउँ गाउँका मौजा मौजामा राजश्व संकलन गर्न जिम्मावाल र मुखिया नियुक्त गर्ने व्यवस्था गरियो ।[३६] त्यसपछि आफ्नो मौजामा परिआउने झैझगडाको छिनोफानो पनि तिनै जिम्मावाल र मुखियाले नै गर्न पाउने व्यवस्था भयो र तिनीहरूको सहयोगका लागि कट्टुवाल, थरी, थानी रहने व्यवस्था गरिएको थियो ।[३७]

राणा शासनकालको अन्तिम दशकतिर पाल्पा गौंडा अन्तरगत पर्ने पाल्पा जिल्लामा मालपोत संकलन र न्याय सम्पादनको काम गर्न गाँउ गाँउमा २१८ वटा मौजा खडा गरिएको पाइन्छ ।[३८] स्थानीय स्तरमा रहेका ती मौजा मौजामा रहेका अमाली,

चौधरी, जिम्मावाल, मुखिया, कटुवाल, थरी, थानी आदिको अमाल कचहरीबाट आफ्नो मौजामा परिआएका विवादको टुङ्गो लगाउने काम गरिन्थ्यो ।[३९]

### ३.२.४ राज्य अदालत

नेपालको एकीकरण गर्ने सिलसिलामा युद्धमा अग्रसर नभई आत्मसमर्पण गर्ने राज्यहरूलाई आश्रित राज्य मानी त्यस्ता राज्यलाई नेपालमा गाभे तापनि आफ्नो राज्यको प्रशासन चलाउने अधिकार प्रदान गरिएको थियो । आफ्नो राज्यभित्र मालपोत संकलन गर्ने र न्याय सम्पादन गर्ने अधिकार ती राज्यका राजाहरूले नै पाएका थिए । आफ्नो राज्यभित्र परिआउने मुद्दामामिला छिन्न त्यस्ता राज्यहरूमा अदालत गठन गरिएको हुन्थ्यो जसलाई राज्य अदालत भनिन्थ्यो ।

राणा शासनकालमा नेपालको पश्चिमी क्षेत्र अर्थात पाल्पा गौँडाको भूभागभित्र सल्यान, जाजरकोट, मुस्ताङ, बझाङ, भीरकोट, दर्ना, बाजुरा, थलहरा, गलकोट, गुल्मी, गह्रौँकोट, दुल्लु, पर्वत, नुवाकोट, खुम्रीकोट र उदयपुर नामका राज्य थिए । राज्य अदालतले आफ्नो इलाकाभित्रका मुद्दामामिला हेरी फैसला गर्ने अधिकार पाएका थिए तर न्याय सम्पादन गर्दा नेपाल सरकारबाट जारी गरिएका ऐन, सवालको पूर्ण रूपमा पालना गर्नु पर्दथ्यो । साथै पञ्चखत सम्बन्धी मुद्दा हेर्ने अधिकार पनि राज्य अदालतलाई थिएन । यी राज्य अदालतले गरेको निर्णय विरुद्ध पाल्पा गौँडाको अपिल अदालतमा उजुरी लाग्दथ्यो ।[४०] राज्य अदालतका प्रमुख सोही राज्यका राजा हुन्थे । उनलाई कानुनी सहयोग दिनका लागि केन्द्रबाट एक जना डिठ्ठा सरहका कर्मचारी खटाइएको हुन्थ्यो ।[४१] राज्य अदालत उन्मुलन ऐन २०१७ लागू भएपछि ती अदालतले गर्दै आएका न्याय सम्पादन सम्बन्धी काम कारबाहीहरू नजिकैको इलाका अदालतले हेर्ने गरी राज्य अदालत खारेज गरिएको थियो ।[४२]

## ४. निष्कर्ष

बिशाल नेपालको सुद्धढ प्रशासन संचालनका लागि मुलुकलाई विभिन्न प्रशासनिक क्षेत्रमा विभाजन गर्ने काम नेपाल–अंग्रेज युद्धपछि नै शुरु भएको थियो । राणा शासनकालमा वि.सं.१९५२ मा नेपाललाई ३५ जिल्लामा विभाजन गर्ने काम भयो । साथै प्रशासन संचालन गर्न सजिलो होस् भन्ने हेतुले मुलुकलाई पहाड, तराई, भित्रीमधेश र उपत्यका भनी छुट्याइएको थियो । पहाडलाई केन्द्रबाट पूर्व र पश्चिम दुई क्षेत्रमा बाँडिएको थियो । पश्चिमी पहाडी क्षेत्रमा पाल्पा र डोटी दुई अलग अलग गौँडा थिए तापनि लामो समयसम्म डोटी गौँडा पाल्पा गौँडाको अधिनमा थियो । सैनिक र निजामती प्रशासन जस्तै न्याय प्रशासनलाई पनि सुद्धढ बनाउने उद्देश्यले राणा

शासनकाल पूर्व नै ठाँउठाँउमा अदालत स्थापना गरिएका थिए । राणा शासनकालमा न्याय प्रशासनको स्पष्ट खाका तयार गरियो । राणा शासनकालमा स्थानीय स्तरको न्याय प्रशासन संचालन गर्न गौंडा, अदालत र अमाल गरी तीन तह कायम गरिएको थियो ।

वि.सं. १९४५ मा गरिएको न्याय प्रशासनको सुधार अनुसार पहाडमा पाल्पा, धनकुटा र डोटीमा अपिल सुन्ने गौंडा स्तरका अदालत स्थापना गरिएको थियो तापनि डोटी गौंडा पाल्पा गौंडाको अधिनमा थियो । वि.सं. १९८० मा गरिएको न्याय प्रशासनको सुधार अनुसार डोटी गौंडाले स्वतन्त्र क्षेत्राधिकार पायो । त्यसपछि पोखरादेखि सल्यानसम्मका तल्लो तहका अदालत मात्र पाल्पा गौंडाको अधिनमा रहन गए ।

राणा शासनको प्रारम्भमा पाल्पा गौंडाको मातहतमा त्रिशुलीदेखि महाकालीसम्मका तल्लो तहका अदालत रहने व्यवस्था भएकोमा न्याय प्रशासनमा पटकपटक भएको सुधारले पाल्पा गौंडाको क्षेत्राधिकार साँघुरिँदै गयो र राणा शासनको अन्त्यसम्ममा पाल्पा गौंडाको अधिनमा बाग्लुङ, स्याङ्जा, थाक र पाल्पाको जिल्ला अदालत मात्र रहन गएका थिए ।

पाल्पा गौंडामा न्याय प्रशासनका प्रमुख तैनाथवाला हुने व्यवस्था भएकोमा वि.सं.१९९७ को सनद अनुसार उनको न्यायिक अधिकार कटौती हुन गयो । त्यसपछि पाल्पा गौंडा अपील अड्डाको स्थापना भयो जसका हाकिम सुब्बा दर्जाका कर्मचारी हुने व्यवस्था गरिएको थियो । राणा शासनकालमा न्याय सम्पादन गर्नका लागि मुलुकी ऐन जारी गरिएको थियो । बेलाबखतमा परिआउने बाधा अवरोध फुकाउन सनद, सवाल जारी गरिन्थ्यो । त्यसको आधारमा न्यायकर्ताले न्याय सम्पादन गर्नुपर्दथ्यो । त्यतिखेर पञ्चखतलाई महापाप मानिन्थ्यो र ज्यान सजाय हुन्थ्यो । कुनै पनि अपराधमा जातभात, महिलापुरुष वा राणाखलक छुट्याएर मात्र दण्डसजाय गरिन्थ्यो ।

राणा शासनकालमा पाल्पा गौंडाको अदालत नेपालको पश्चिमी क्षेत्रको न्याय प्रशासनको केन्द्र थियो । नेपालको मस्याङ्दीदेखि पश्चिमको भूभागमा रहेका स्थानीय स्तरको अमाल, तल्लो तहको अदालत र राज्य आदलतले गरेका फैसला उपर पुनरावेदन सुन्ने अधिकार थियो । साथै भारतसँग सिमाना जोडिएका भूभागका बासिन्दाको भारतीय बासिन्दासँग विवाद परेमा त्यसलाई मध्यस्थता गरी मिलाउने अधिकार पनि पाल्पा गौंडा अदालतका हाकिमले पाएका थिए । समग्रमा भन्नुपर्दा राणाकालीन न्याय प्रशासनमा नेपालको पश्चिमी क्षेत्रको न्याय सम्पादनमा पाल्पा गौंडाको महत्वपूर्ण भूमिका थियो ।

## टिप्पणी

[१] बी. एच. हड्सन, **मिसैलेनियस एस्सेज रिलेटिङ टु इण्डियन सब्जेक्ट्स**, भाग २, लण्डन : ट्रूवनर कम्पनी, सन् १८८०, पृ. २११-१२ ।

[२] कृष्णकान्त अधिकारी,"अ ब्रिफ सर्भे अफ द अर्गनाइजेसन एण्ड स्ट्रक्चर अफ नेपाली ल कोर्ट्स् डुरिङ द थर्ड क्वार्टर अफ द नाइन्टिन्थ सेञ्चुरी", **कन्ट्रिब्यूसन टु नेप्लिज स्टडिज**, भो. ६, नं.२, सन् १९७९, पृ. १३-१४ ।

[३] तुल्सीराम वैद्य र त्रिरत्न मानन्धर, **आधुनिक नेपालको प्रशासनिक इतिहास** (सन् १७६८-१९५१), काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द्र, २०५३, पृ.६२-६५ ।

[४] अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. २, पृ.१५-१६ ।

[५] "हाकिमका नाउँमा कराउनेको",**मुलुकी ऐन** १९४५, राष्ट्रिय अभिलेखालय, काठमाडौं, नेभानं.५३९ ।

[६] उही, (१९४३ देखि १९६२ सम्मको संशोधन समावेश गरिएको ), नेभानं. ५६३ ।

[७] उही, १९८४, नेभानं. १४० ।

[८] "वि.सं. १९९७ आषाढ १७ गतेको सनद्", रेवतीरमण खनाल, "नेपालको कानुनी इतिहासमा प्रधान न्यायालयको भूमिका", **न्यायदूत**, नं. २२, वैशाख-जेठ, २०३४, पृ.५ ।

[९] त्रिरत्न मानन्धर, **सम आस्पेक्टस् अफ राणा रुल इन नेपाल**, काठमाण्डु : पूर्ण देवी मानन्धर, सन् १९८३, पृ.६४-६५ ।

[१०] कृष्णकान्त अधिकारी, **नेपाल अण्डर जङ्गबहादुर १८४६-१८७७**, भोलुम १, काठमाण्डु : बुकु, सन् १८८४, पृ. २६० ।

[११] डन एडवार्डस्, "द रिलेशन बिटविन काठमाण्डु एण्ड पाल्पा इन द राणा पिरियड", **कैलाश**, भोलुम ४, नं. १, सन् १९७६, पृ. ७३ ।

[१२] काम्याण्डरी किताब, वि.सं. १९३७ साल, सि.नं. ११०, मू.नं.२०, पहाड पूर्व पश्चिम गौंडा, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

[१३] सतिश कुमार, **राणा पोलिटी इन नेपाल : ओरिजिन एण्ड ग्रोथ**, बम्बई : एसिया पब्लिशिङ हाउस, सन् १९६७, पृ. १०८ ।

[१४] हेमनारायण अग्रवाल, **द एडमिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल फ्रोम ट्रेडिसन टु मोडर्निटी**, न्यू दिल्ली : विकास पब्लिशिङ् हाउस, सन् १९७६, पृ. ७८ ।

[१५] रामजी उपाध्याय, **नेपालको इतिहास अर्थात् दिग्दर्शन**, बनारस : सुब्बा होमनाथ केदारनाथ, सन् १९५०, पृ. १७ ।

[१६] मानन्धर, **पूर्ववत्**, टि.नं.९, पृ.५५-५६ ।

[१७] उही, पृ. ५९-६० ।

[१८] उही, पृ. ७६ ।

[१९] अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. २, पृ.१४ ।

[२०] हाकिमका नाउँमा कराउनेको",**मुलुकी ऐन** १९८०, राष्ट्रिय अभिलेखालय, काठमाडौं, नेभानं. ५७४ ।

[21] अग्रवाल, **पूर्ववत्**, टिप्पणी नं. १४, पृ. ८१ ।

[22] उही, पृ. ८२ ।

[23] अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. १०, पृ.२२४-२५ ।

[24] "अड्डा अड्डालाई रुपञा जिम्मेवारी दिने विषय, पाल्पा तीन साँचाको सवाल, वि.सं.१९९२-२००६", पृ.८९-९० । (श्री ३ महाराज र कमाण्डर इन चिफबाट पाल्पा तीन साँचा अड्डाको नाममा वि.सं.१९९२ देखि २००६ सम्म जारी गरिएका दुई छापे सनद सवालहरूको सङ्कलन )

[25] मानन्धर, **पूर्ववत्**, टिप्पणी नं. ९, पृ. ६४ र ७६ ।

[26] उही, पृ. ६९ ।

[27] उही, पृ. ५७-५८ ।

[28] उही, पृ. ५८-६२ ।

[29] उही, पृ. ७३ ।

[30] उही, पृ. ६३-६५ र ७४ ।

[31] उही, पृ. ७६ ।

[32] (क) अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. १०, पृ.३०३ ।
(ख) "अड्डा अड्डालाई रुपञा जिम्मेवारी दिने विषय, पाल्पा तीन साँचाको सवाल, वि.सं. १९९२-२००६", पृ.८९ ।

[33] सतिश कुमार, **पूर्ववत्**, टिप्पणी नं. १३, पृ. १०८ ।

[34] अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. २, पृ.१७ ।

[35] वैद्य र मानन्धर, **पूर्ववत्**, टिप्पणी नं. ३, पृ.६२ ।

[36] अग्रवाल, **पूर्ववत्**, टिप्पणी नं. १४, पृ. ७५ र ८६ ।

[37] तुलसीनारायण श्रेष्ठ, **नेप्लिज एड्मिनिस्ट्रसन अ हिस्ट्रिकल पर्सपेक्टिभ**, काठमाण्डु : रिनो पब्लिकेशन्स, सन् १९८९, पृ.२७८ ।

[38] "९५ सालमा खडा भयाको १० वर्षे मोठ लम्बरी किताब",(मालपोत कार्यालय पाल्पामा सुरक्षित वि.सं.१९९५ सालमा खडा गरी २००६ सालसम्म हाल साविक गराइएका वि.सं. १९५३ देखि २००६ सम्म दर्ता भएका घरजग्गा र तालुकदारी विवरण

[39] अधिकारी, **पूर्ववत्**, टिप्पणी नं. १०, पृ.३०३ ।

[40] कृष्णकान्त अधिकारी," द स्टाटस, पावर्स एण्ड फङ्सन्स अफ राजा एण्ड रजौटा डुरिङ्ग द नाइन्टिन्थ सेञ्चुरी नेपाल इन द लाइट अफ कन्टेम्पोरेरी डकुमेन्ट्स्", **कन्ट्रिब्युसन टु नेप्लिज स्टडिज**, भो. ८, न..१, सन् १९८०, पृ. १४८-१५० ।

[41] मानन्धर, **पूर्ववत्**, टिप्पणी नं. ९, पृ. ९२ ।

[42] "राज्य अदालत उन्मुलन ऐन", **नेपाल गजेट**, वि.सं. २०१७ जेठ २ गते ।

# १०. विविध जातिको साझा फूलवारी पाल्पा

## १. विषय प्रवेश

कृषि युग शुरु भएपछि मानिसहरू स्थायी रूपमा बसोबास गर्न थालेका हुन् । त्यसभन्दा पहिले मानिसहरू बिना रोकटोक एक ठाउँबाट अर्को ठाउँमा बसाईं सर्दथे । त्यतिखेर कुनै पनि राज्यले मानिसहरूको बसाइसराइमा कुनै प्रकारको अवरोध खडा गरेको थिएन । मानिसहरूका बसाइसराइका विभिन्न कारणहरू थिए । ती कारणहरू मध्ये स्वेच्छाले दुर्गमस्थानबाट सुगमस्थानतिर स्थानान्तरण हुने मानिसहरूको सङ्ख्या अधिक थियो भने राजनैतिक उथलपुथल र दैवी प्रकोपका कारण पनि मानिसहरू एक ठाउँबाट अर्को ठाउँमा बसाईं सर्दथे । त्यही क्रममा प्रागैतिहासिककालदेखि नै विभिन्न कविलाका मानिसहरूले नेपालमा बसोबास गर्न थालेका हुन् भन्ने भनाइ छ ।[१] यस क्रममा ककेसियाली, मंगोल, द्रविड र आग्नेशियाली रक्त समूहका अनेकौं कविलाहरूले नेपालमा बसोबास गर्न थालेको देखिन्छ ।[२] कृषि युगको प्रारम्भमा अलगअलग समुदायका थुप्रै कविलाहरू थिए । अलगअलग भाषा र रहनसहन भएका ती कविलाहरूलाई एकजुट गराउन र विचारको आदानप्रदान गराउन एउटा साझा भाषाको आवश्यकता थियो । त्यसकारण ती कविलाहरूले साझा भाषाको विकास गरे । कृषि युग भएकोले उनीहरूको साझा व्यवसाय खेतिपाति गर्नु थियो । त्यसका लागि जमिन आवाद गर्न आवश्यक थियो । मानिसहरू शिकारी र पशुपालन युगबाट कृषि युगमा प्रवेश गर्दा उत्पादनको साधन जमिन र त्यसलाई आवाद गर्ने औजारहरूमा अधिकार हुन आवश्यक थियो । कृषि युगको प्रारम्भमा जमिनको अभाव थिएन । फसल उत्पादन गर्न आवश्यक पर्ने नयाँ नयाँ प्रविधिको विकास गर्न मात्र जरुरी थियो । त्यसकारण मानिसहरूले अधिक मात्रामा फसल उत्पादन गर्न नयाँ नयाँ प्रविधिको खोजी गर्नुकासाथै खेतिपाति सप्रियोस र अन्नको सह होस भनेर बाली लगाउँदा र भित्राउँदा प्रकृतिको पुजा गर्ने परम्परा बसाले जुन परम्परा कालान्तरमा उनीहरूको संस्कार बन्न गयो । फुर्सतको समयमा मनोरञ्जनका लागि गरिने नाचगान उनीहरूको संस्कृति बन्न गयो । मानिसहरू कृषि युगमा प्रवेश गरेपछि समाजमा विभिन्न झमेला आउन थाले । ती विवाद मिलाउन र समाजमा सुब्यवस्था कायम गराउन एउटा शासकीय स्वरुपको आवश्यकता पर्‍यो जसको फलस्वरुप राज्यको उत्पत्ति भयो । भाषा, आर्थिक क्रियाकलाप, संस्कार र संस्कृति साझा भएका, एकैथलोमा बस्ने मानिसहरूको मनोविज्ञान पनि एकैखालको

हुने हुनाले त्यस्तो मानव समुहलाई एउटा जाति भनियो । किनकि विश्वकोशमा उल्लेख भएअनुसार साझा भाषा, संस्कार, संस्कृति, र रहनसहन भएका मानिसहरूको मनोविज्ञान पनि समान किसिमको हुने भएकोले त्यस्तो मानव समुदायलाई एउटा जातिको रूपमा चित्रित गर्ने गरेको देखिन्छ । यसलाई विभिन्न मानव समुहको  पहिचानको रूपमा लिने गरेको पाइन्छ ।[३]

यसरी नेपालमा प्राचीनकालदेखि नै विविध जातिका मानिसहरूले बसोबास गर्दै आएको पाइन्छ । पाल्पा पनि नेपाल राज्यभित्रको एक भूभाग हो । प्राचीनकालमा मगराँतको नामले परिचित यो क्षेत्र मध्यकालको पूर्वार्द्धमा खस राज्यको अधिनमा थियो भने मध्यकालको उत्तरार्द्धमा यो क्षेत्रमा सेन वंशको स्वतन्त्र राज्य थियो । नेपालको एकीकरणको सिलसिलामा पाल्पा राज्य नेपालमा गाभिएपछि यो क्षेत्र नेपालको पश्चिमी क्षेत्रको प्रशासनिक, सैनिक र न्याय सम्पादनको केन्द्र बनेको थियो । सेनकालको पाल्पा राज्य र त्यसपछिको पाल्पा गौंडा भनेर चिनिने भूभागमा विभिन्न जातिका मानिसहरूको बसोबास भएको पाइन्छ । यस लेखमा ती जातिहरूका बारेमा संक्षिप्तमा प्रकाश पार्ने प्रयास गरिन्छ ।

## २. विविध जातिहरू

नेपालका अन्य भूभागमा जस्तै पाल्पामा पनि ककेसियाली मूलका खस-आर्य जाति, मङ्गोल मूलका मगर, गुरुङ, नेवार, थकाली आदि विभिन्न जाति र मुस्लिम जातिको समेत बसोबास भएको पाइन्छ तापनि यस अध्ययनमा ती मध्ये केही जातिहरूको बारेमा मात्र वर्णन गरिएको छ ।

### २.१ खस-आर्य जाति

कास्पियन र कृष्णसागरको बीचमा पर्ने ककेशस नामको पर्वतमा विचरण गर्ने मानवलाई ककेसियाली भनिन्थ्यो । ककेसश पर्वतबाट पूर्वतिर लागेको एउटा समुह पहाडैपहाड काशगर, खसगर, खसमिहिर, हिन्दुकुश हुँदै हिमवत्खण्डमा पुगेको हो भन्ने भनाइ छ ।[४] बृहत् संहिता, भागवत पुराण, मनुस्मृति, महाभारत, मार्कण्डेय पुराण, वायु पुराण, विष्णु पुराण, स्कन्ध पुराण आदि हिन्दु ग्रन्थहरू र बौद्ध ग्रन्थहरूमासमेत कम्बोज, किरौंत, दरद, पल्लभ, पौण्ड्रक, यमन, सक र हुण जातिका साथमा खस जातिको पनि उल्लेख गरिएको छ ।[५]

यो जातिले शुरुमा हालको तिब्बतमा पर्ने खारी प्रदेशमा आफ्नो राज्य स्थापना गरेको देखिन्छ। त्यसपछि बाह्रौं शताब्दीमा यस जातिका नागराजले वर्तमान नेपालको कर्णाली प्रदेशमा आफ्नो राज्य स्थापना गरेका थिए। खस राज्यको वैभव उत्कर्षमा पुगेका बेला यो राज्य विशाल भूभागमा फैलिएको थियो। त्यतिखेर यो राज्यको सिमाना पूर्वमा त्रिशुली नदी, पश्चिममा गढवाल, उत्तरमा गुँगेपुराङ र दक्षिणमा शिवालिक पर्वतसम्म फैलिएको थियो।[६] त्यहाँबाट पनि पूर्वतिर फैलिँदै जाँदा गढवालदेखि पूर्व आसामसम्म खस जातिको बसोबास भएको पाइन्छ।

ककेशस इलाकाबाट पूर्वतिर लागेको अर्को समूह वर्तमान भारतको मैदानी इलाकामा प्रवेश गरी वर्ण व्यवस्था र वैदिक सभ्यताको विकास गऱ्यो। यही समूहलाई आर्य मूलका मानव भनिन्छ। त्यही समूह मध्ये नेपालको पश्चिम र दक्षिणबाट यस मुलुकमा प्रवेश गर्ने मानव समूहलाई नेपालमा पनि आर्य मूलका मानिस भनिन्छ।[७] नेपालमा प्रवेश गरेका आर्य मूलका मानिसहरू तीन समूहका मानिन्छन्। पहिलो समूहका मानिसहरू सुविधायुक्त बसाइको खोजीमा भारतको उत्तर पश्चिमतिरबाट नेपालमा आएका थिए। दोस्रो समूहका मानिसहरू दैवी प्रकोपका कारण भारतको मैदानी भू-भागबाट नेपालको तराइ इलाकामा प्रवेश गरी त्यहीं बसोबास गरेका थिए।[८] तेस्रो समूहका मानिसहरू भारतमा मुस्लिमहरूको ज्यादती बढेपछि आफ्नो जीवन र धर्म रक्षाको लागि नेपाल पसेका कट्टर हिन्दू र बौद्ध धर्मावलम्वी मानिसहरू थिए।[९] राजनैतिक शरणार्थीको रूपमा नेपाल पसेका मानिसहरू यस मुलुकको भित्री भूभागमा नै प्रवेश गरी कालान्तरमा आ-आफ्नो स्थानमा स-साना राज्य स्थापना गरी त्यहाँका शासक बन्न सफल भएका थिए। यसरी नेपाल प्रवेश गरी आफ्नो राज्य स्थापना गर्ने आर्य मूलका मानिसहरूमध्ये शाह वंशले भीरकोटमा र सेन वंशले पाल्पामा आफ्नो राज्य स्थापना गरेको देखिन्छ।[१०] नेपालको पहाडी इलाकामा बसोबास गर्ने खस र आर्य मिलेर जुन किसिमको संस्कृतिको विकास गरे त्यसलाई खस संस्कृति भनिन्छ। यही खस संस्कृति मान्ने मानव समुह नै खस-आर्य जाति हो।

मध्यकालमा नेपालको पश्चिमी क्षेत्र कर्णाली प्रदेशमा खस जातिको नामले चिनिले मानिसहरूको बसोबास थियो। मध्य एशियाबाट कुमाउँ, गढवाल हुँदै नेपालको कर्णाली प्रदेशमा आइपुगेको यो जातिले त्यहाँ खस सभ्यताको विकास गरेको थियो भन्ने समाजशास्त्रीहरूको भनाइ छ।[११] खस जातिका मानिसहरू पूर्वतिर लाग्ने क्रममा

पाल्पामा पनि तिनीहरूको बसोबास हुन थालेको पाइन्छ ।

नेपालमा बसोबास गर्ने विभिन्न जाति मध्ये खस पनि एक हो । यो जाति बारे विद्वान्हरू बीच मतभिन्नता छ । कतिपय विद्वान्हरूले ब्राह्मणबाट खसेको क्षत्री जातलाई मात्र खस भनेका छन् ।[१२] तर जातित्वको निर्धारक कडी भाषा भएकोले खस कुरा बोल्ने जति सबै खस हुन् भन्ने विद्वान्हरूको तर्क छ ।[१३] तुलसीराम वैद्यको भनाइ अनुसार नेपालको पश्चिमी क्षेत्रका खस भाषा बोल्ने ब्राह्मण, क्षत्री र अन्य सबै मानव समुहलाई खस जाति भनिन्थ्यो ।[१४] नेपालका प्रसिद्ध भाषाविद्को भनाइ अनुसार बाहुन, क्षत्री, घर्ती, दमाई, कामी, सार्की, हुड्के, तमोटे, गाइने वादी आदि जातको मातृभाषा खस कुरा भएकोले तिनीहरू सबैलाई खस भनिन्छ ।[१५] कुनै पनि जातिको पहिचान भाषा र संस्कृति भएको हुनाले खस भाषालाई मातृभाषा मान्ने सबै जात र थरका मानिसहरू खस जाति भित्र पर्दछन् ।

मध्यकालको पूर्वाद्धमा कर्णाली प्रदेशमा खस जातिको राज्य भएको र खस मल्ल शासकहरूले पटक पटक नेपाल उपत्यकामा आक्रमण गरेको कुरा गोपाल राजवंशावलीमा उल्लेख छ ।[१६] खसहरूले मध्य एशियाबाट खशगर, काशगर, हिन्दूकुश, काशमीर, गढवाल र कुमाउँ हुँदै नेपालको कर्णाली प्रदेशमा प्रवेश गरी हिमालयको काखमा आफ्नो राज्य स्थापना गरेका थिए भन्ने एट्किन्सनको भनाई छ ।[१७] खसहरूले कहिलेदेखि नेपालमा बसोबास गरेका थिए भन्ने कुरा यकिनसाथ उल्लेख भएको पाईंदैन तापनि खस राज्य स्थापना गर्ने पहिलो राजा नागराज थिए भन्ने कुरा निश्चित भइसकेको छ ।[१८] खस साम्राज्य चरमोत्कर्षमा पुगेको वेला यसको पूर्वी सिमाना गण्डकी प्रदेशको त्रिशुली नदीसम्म पुगेको र आफूले प्रभाव जमाइसकेको गण्डकी प्रदेश कर्णाली प्रदेशभन्दा बढी उर्वर र बस्ती योग्य भएकोले खसहरूले यतैतिर रस्तीबस्ती बसाल्न पनि थालिसकेको पाइन्छ ।[१९] अङ्ग्रेज विद्वान् भेन्सिटार्टले पनि काश्मीरदेखि नेपाल उपत्यकासम्म र त्यसको दक्षिणी भेग पाल्पा समेतका इलाकामा खस जातिको बसोबास भएको कुरा उल्लेख गरेका छन् ।[२०]

खस साम्राज्यको विघटनपछि कर्णाली प्रदेशमा बाइसी र गण्डकी प्रदेशमा चौबिसी राज्यहरूको स्थापना भयो । यसरी स्थापना भएका राज्यहरू मध्ये पाल्पा राज्यमा पनि खस जातिका मानिसहरूको बसोबास थियो भन्ने कुरा एक अभिलेखबाट अवगत हुन्छ । उक्त अभिलेखमा यस्तो भनिएको छ -

"रत्न मल्लले राज्य गर्दा समय कुकुनाम भोटे देवान आदि भोटेहरू धेरै आइ दुख दियो र तेहौंतिया ब्राह्मण ४ जनाले पाल्पा जाइ आफ्ना शिष्य सेन राजासँग उनका लस्कर मागी ती लश्करले भोटेहरूकन मारि दिए र इन दिनदेखि खसहरू चार थरीकन खेत विर्ता दिई जगा जगामा राखे ।" [२१]

उपर्युक्त भनाइबाट के पुष्टि हुन्छ भने पाल्पा राज्यमा सेन वंशको शासनकालभन्दा पहिलेदेखि नै खस जातिका मानिसहरूको बसोबास थियो र नेपाल उपत्यकामा पनि रत्न मल्लको शासनकाल (वि.सं. १५४१-७७) देखि खस जातिका मानिसहरूको बसोबास शुरु भयो ।[२२]

खस साम्राज्यको पतनपछि गण्डकी प्रदेशमा मगर, गुरूङ र खस जातिका सामन्तहरूले स्वतन्त्र राज्य स्थापना गर्ने सन्दर्भमा धवलागिरि हिमालको काखमा रहेका ताकमकोट, पुलाकोट र ज्यामरुककोटमा थापा वंशका सामन्तहरूले स्वतन्त्र थुम राज्य स्थापना गरेका थिए ।[२३] तिनीहरूलाई परास्त गरी डिम्ब बमले पर्वत राज्यको विस्तार गरेका थिए ।[२४] त्यसैगरी गढवालतिरबाट आएका शाह वंशका शासकहरूले अर्घा, खाँची र धुर्कोट राज्य स्थापना गरेका थिए ।[२५]

यसरी गण्डकी प्रदेशमा खस जातिको बसोबास हुनुका साथै शासन समेत चल्न थालेपछि यहाँ खस भाषा र संस्कृतिको विकास हुन थालेको पाइन्छ । पर्वत राज्यमा त सरकारी कामकाजमा समेत खस भाषा प्रयोग गर्ने गरेको पाइन्छ ।[२६] पर्वत राज्यका विद्वान् प्रेमनिधि पन्तले संस्कृत भाषामा लेखिएको 'प्रायश्चित प्रदीप' नामक ग्रन्थ खस भाषामा उल्था गरेका थिए जुन नेपाली भाषाको विकासका लागि प्रारम्भिक चरणको महत्त्वपूर्ण योगदान मानिन्छ ।[२७]

माथिका उदाहरणबाट के स्पष्ट हुन्छ भने खस भाषालाई मातृभाषाको रूपमा प्रयोग गर्ने कुमाइ र पूर्वीया ब्राह्मण, विभिन्न थरका रजपुत तथा क्षत्री एवं दमाई, कामी, सार्की आदि विभिन्न थरका दलितहरू जसले पाल्पाको भौगोलिक क्षेत्रभित्र बसोबास गरेका थिए ती सबै खस जातिका मानिस थिए ।

## २.२ मङ्गोल मूलका जातिहरू

मङ्गोलियामा विकसित र मानव विकासको क्रममा विश्वको विभिन्न स्थानमा पुगेको मानव समूहलाई मङ्गोल मूलको मानव भनिन्छ । नेपालका विभिन्न भू-भागमा

मङ्गोल मूलका अनेक जातिका मानिसहरूको बसोबास छ । नेपालको थाकखोलामा थकाली, मगराँत क्षेत्रमा मगर, गण्डकी क्षेत्रका हिमालका काखमा गुरूङ, काठमाडौं उपत्यकामा नेवार र त्यसको आसपासमा तामाङ जातिको बाहुल्य भएको पाइन्छ ।[२८] पाल्पा गौंडाको प्रशासनिक क्षेत्र पनि नेपालको उपर्युक्त क्षेत्रभित्र पर्ने हुनाले यहाँ पनि माथि उल्लेखित जातिका मानिसहरूको बसोबास भएको पाइन्छ ।

(१) मगर

पाल्पा गौंडा अन्तर्गतको प्रशासनिक क्षेत्र जसलाई गण्डकी प्रदेश भनिन्छ; मगर जातिको बाहुल्य भएको इलाका हो । यहाँ प्राचीनकालदेखि नै मगर जातिका मानिसहरूले बसोबास गरेको पाइन्छ । लिच्छवीकालमा केन्द्रबाट टाढा रहेका स्थानमा प्रशासन चलाउन मुलुकलाई विभिन्न जिल्लामा विभाजन गरिएको थियो जसमध्ये 'मंग्वर विषय' पनि एक थियो । विद्वानूहरूले 'मंग्वर' लाई 'मगर' शब्दको प्राचीन रूप मानेका छन् । साथै उक्त इलाका नेपालको मध्य पश्चिमी क्षेत्रको मगराँत हो भनेका छन् ।[२९] वि.सं. १८९३ को एक रुक्कामा मर्स्यांदीदेखि पश्चिम प्यूठानसम्मको इलाकालाई 'बाहू मगराँत' भनिएको छ ।[३०] हडसनले सतहुँ, पैयुँ, भीरकोट, ढोर, गरहुँ, रिसीङ, घिरिङ, गुल्मी, अर्घा, खाँची, मुसिकोट र इश्मा आदि राज्यहरू बाहू मगराँत भएतापनि मर्स्यांदीदेखि भेरीसम्म पर्ने नेपालको मध्य पश्चिमी क्षेत्र मगर जातिको बसोबास स्थल हो भनेका छन् ।[३१] तर एक जना विद्वान्‌ले वर्तमान नेपालको नवलपरासी जिल्लाको माथिल्लो भूभाग र महाभारत पर्वत श्रृंखलाको दक्षिणी भाग हुँदै कालीगण्डकीको पश्चिमदेखि लिएर वर्दियाको माथिल्लो भागको पहाडदेखि हुम्ला जुम्लासम्मको भूभाग मगरहरूको मूलथलो भएको उल्लेख गरेका छन् ।[३२] यसैगरी केही विद्वान्‌हरूले मगरलाई बाहू पन्थी र अठार पन्थी भनी दुई समूहमा विभाजन गरेको पाइन्छ । अठार पन्थी मगरहरू नेपालको पश्चिमोत्तर र सुदूर पश्चिमी पहाडी भेकमा बसोबास गर्छन् भने बाहू पन्थी मगरहरू वर्तमान गण्डकी र लुम्बिनी अञ्चलको पहाडी भागमा केन्द्रित छन् भन्ने उनीहरूको भनाइ छ ।[३३] पाल्पा माथि उल्लेखित क्षेत्रमा पर्ने भएकोले यहाँ मगर जातिको बसोबास भएको अवगत हुन्छ । केही विद्वानहरूले यो क्षेत्रमा बस्ने मगरहरू आले, बुढाथोकी, घर्ती, पुन, राना र थापा गरी छ थर र विभिन्न उपथरमा बाँडिएको कुरा बताएका छन् ।[३४]

### (२) गुरूङ

पाल्पामा गुरूङ जातिका मानिसहरूको पनि बसोबास भएको पाइन्छ। गुरूङहरू तिब्बततिरबाट नेपालको उत्तरी क्षेत्रको हिमालयका आसपासका मनाङ, मुस्ताङ, गोरखा, लमजुङ र कास्कीहुँदै नेपालका विभिन्न भूभागमा फैलिएको देखिन्छ।[३५] हडसनले नेपालका प्रमुख सैनिक जातिमा हिमालयको फेदीमा बस्ने गुरूङ जातिलाई पनि उल्लेख गरेका छन्।[३६] एकजना विद्वानूले गुरूङ जातिको मुख्य बस्ती भीरकोट, गोरखा, कास्की, लमजुङ, पैयुँ, सतहुँ र तनहुँ भएको कुरा उल्लेख गरेका छन्। उनको भनाइ अनुसार पाल्पाको प्रशासनिक क्षेत्रमा पर्ने बाग्लुङ, गुल्मी, धुर्कोट, अर्घा र खाँची इलाकामा पनि गुरूङ जातिको बसोबास भएको देखिन्छ।[३७]

### (३) नेवार

व्यापारी र कालिगढको रूपमा नेपालका प्रमुख शहरी क्षेत्रमा छरिएर रहेका नेवारहरूको उत्पत्ति बारे मतभिन्नता छ। कतिपय विद्वान्हरूले दक्षिण भारतको नायर प्रदेशमा बस्ने जातिहरूसँग नेवारहरूको संस्कृति मिल्छ त्यसकारण त्यहाँबाट यिनीहरू कर्णाटवंशी राजा नान्यदेवसँग नेपाल आएका हुन् भनेका छन्।[३८] यो भनाइसँग धेरैजसो विद्वान्हरू सहमत छैनन्। ती विद्वान्हरूले 'नेवार' भनेको कुनै एक जाति नभएर एउटै भाषा, रीतिरिवाज, परम्परा र संस्कृति भएका विभिन्न जातिहरूको समुदाय हो भनेका छन्। उनीहरूले नेवारहरूको मूलथलो नेपाल खाल्डोलाई मान्दछन्।[३९] उनीहरूको के पनि तर्क छ भने नेवारहरूमा गोपाल, आभिर, गुप्त, किराँत, कोलिय, शाक्य, लिच्छवी, ठकुरी, कर्णाटक, मल्ल र कान्यकुब्ज ब्राह्मण समेतका आर्य र मंगोल दुवै मूलका मानिसहरू समावेश छन्।[४०] नेवार जातिमा हिन्दू र बौद्ध दुवै धर्मावलम्बी पाइन्छन्। जिमलेटले बौद्ध धर्मावलम्बी नेवारहरूलाई गुभाजु, उदास र ज्यापु गरी तीन वर्गमा बाँडेका छन्। उनको भनाइ अनुसार हिन्दू धर्मावलम्बी नेवारहरू ब्राह्मण, क्षत्री, वैश्य र शुद्र गरी चार जातमा विभक्त छन्।[४१]

नेवारहरू पाल्पामा कहिलेदेखि आएका हुन भनेर किटान गर्न सकिन्न तापनि एक कागज अनुसार वि.सं. १८३४ भन्दा अगावै उनीहरू यहाँ आइसकेको देखिन्छ। नेपाल सरकारको दूतको रूपमा वेतियामा बसेका शशिधर उपाध्यायले वि.सं. १८३४ मा प्रतापसिंह शाहलाई लेखेको पत्रमा जयनर्सिं नेवार पाल्पाबाट बेतियामा गएको कुरा उल्लेख गरिएकोले उक्त कुराको पुष्टि हुन्छ।[४२]

पर्वत राज्यमा पनि समालवंशी राजाहरूको शासनकालमा नै नेवारहरूको

बसोबास शुरु भएको पाइन्छ । यसको उदाहरणका लागि वि.सं. १८३८ मा महेश्वर नेवारलाई कुशमाचौरमा घरघेडरी प्रदान गरिएको पत्र र वि.सं. १८४० मा भादगाउँका राजकुमार अवधुत सिंहलाई बाग्लुङ उपल्लाचौरमा घडेरी विर्ता दिइएको पत्रलाई लिन सकिन्छ ।[४३]

काली गण्डकीका आसपासका घाट मध्ये वेणी र रिडीमा मध्यकालदेखि नै नेवाहरूको बसोबास भएको कुरा पाल्पामा रहेका एकथरी नेवारहरूको गुठी व्यवस्था सम्बन्धी 'सानतन गुठीको पान्हि म्हिचा २००३' नामक दस्तावेजबाट थाहा हुन्छ ।[४४] रिडीदेखि पूर्व पाल्पा पुरानोकोट नजिक खस्यौलीमा पनि नेवारहरूको पुरानो वस्ती भएको देखिन्छ । उक्त स्थानमा स्थापना गरिएको भीमसेन मन्दिरका लागि वि.सं. १८६५ मा भवसिं नेवारका नाममा गुठी जग्गा प्रदान गरिएको लालमोहरले सो कुराको पुष्टि गर्छ ।[४५]

नेपालको एकीकरणपछि विभिन्न स्थानहरूमा व्यापारको वृद्धि गराउने र कलाकौशलको विकास गराउने उद्देश्यले काठमाडौं उपत्यकाबाट थुप्रै नेवारहरूलाई मुलुकका विभिन्न क्षेत्रमा पुऱ्याइएको देखिन्छ । पाल्पा राज्य नेपालमा विलय भएपछि सो राज्यका प्रशासक भइबसेका सानाकाजी अमरसिंह थापाले काठमाडौंमा जस्तै पाल्पामा पनि कलात्मक मन्दिर, पौवा र पाटी निर्माण गराउने विचार गरेका थिए । त्यसकारण उनले सुन्दर वाँडाको नेतृत्वमा कालिगढहरू तानसेनमा झिकाई अमरगञ्ज पौवा, अमर विनायक र अमरनारायण मन्दिर तथा अमरेश्वर शिवालय निर्माण गराएका थिए ।[४६] वि.सं. १८७८ मा निर्माण गरिएको अमरनारायणको रथयात्रा गराउने खटमा सुन्दर वाँडालाई निर्माण कार्यका मुख्तियार भनी लेखिएको हुँदा उक्त भनाइको पुष्टि हुन्छ ।[४७] नव निर्मित मन्दिरमा विहान बेलुका भजन कीर्तन गर्न पनि काठमाडौंबाटै नेवारहरूलाई झिकाइएको थियो । वि.सं. १८६५ मा जैनसिं समेतका आठ घर नेवारका नाममा भएको रुक्काबाट सो कुरा थाहा हुन्छ । उक्त आदेशमा अमरनारायण मन्दिरमा भजन कीर्तन गरे वापत सो आठघर नेवारलाई घरगनी, साउने, फागु, वेठ, वेगार आदि सम्पूर्ण कर दस्तुर माफी गरिएको छ ।[४८]

उजिरसिंह थापाले तानसेनमा रणउजिरेश्वरी भगवती मन्दिर निर्माण गराएपछि शाक्त परम्परा अनुसार तन्त्रविधिद्वारा मन्दिरमा पूजा गर्न, रथयात्रा चलाउन र गुठीको रेखदेख गर्न समेत काठमाडौं उपत्यकाको पाटन र भक्तपुरका नेवारहरूलाई तानसेनमा ल्याई बसोबास गराएका थिए । यसरी ल्याइएका नेवारहरूमा पाटन वाँडा गाउँका

चन्द्रमान गुभाजू पूजारीको काममा र भक्तपुरका सुक्तमान बौद्धाचार्य गुठीयारको रूपमा तानसेनमा आएका थिए ।[४९]

नेपाल-अङ्ग्रेज युद्धपछि आन्तरिक र वाह्य दुवै प्रकारका युद्ध समाप्त भएकोले मुलुकमा शान्ति स्थापना भएको थियो । यस अवसरमा नेपालका अन्य भू-भागमा जस्तै तानसेनमा पनि नेवार व्यापारीहरूले व्यापारको विकास गरी ठूलै बजार निर्माण गरिसकेका थिए । तर उक्त हाट बजार कच्ची हुनाले वि.सं. १८८६ मा ठूलो आगलागी भयो । त्यसपछि यहाँका नेवार व्यापारीहरूले झिगटीको छाना भएको पक्की घर बनाउन पाउँ भनी विन्ती चढाएको हुनाले सरकारले एक आदेश जारी गरी सो माग पूरा गरिदिएको थियो ।[५०]

राणा शासनकालमा व्यापार व्यवसाय गर्ने, राणाहरूको चाकडी गर्ने र सरकारी जागिर खाने सिलसिलामा थुप्रै नेवारहरू तानसेनमा आइ बसोबास गर्न थालेका थिए भन्ने कुरा तानसेनमा स्थापित मन्दिर, चैत्य तथा विहारहरूका अभिलेखबाट ज्ञात हुन्छ ।[५१] राणा शासनकालमा पाल्पा इलाकाको तानसेन टकसार, सामाकोट, मुंदु हटिया, दर्छा, ताहुँ, खस्यौली, हुमिन आदि मौजामा नेवार जातिको बढी वसोबास भएको पाइन्छ ।[५२]

गुल्मी इलाकाको रिडीमा नेवार व्यापारीहरूले ठूलै बजार स्थापना गरेको देखिन्छ । वि.सं. १८८५ सालमा कच्ची फुसको हाट बजारमा आगलागी भएपछि त्यहाँका नेवार व्यापारीहरूको अनुरोधमा पक्की घर बनाउन पाउने अधिकार प्रदान गरिएको थियो ।[५३]

यस प्रकार पाल्पाको प्रशासनिक क्षेत्रमा पर्ने पाल्पा, गुल्मी र बाग्लुङको व्यापारिक केन्द्र र टकसार भएका ठाउँहरूमा नेवारहरूको बस्ती बसेको पाइन्छ ।

(४) थकाली

पाल्पाको उत्तरतिर पर्ने हिमाली क्षेत्रमा बस्ने प्रख्यात जातिलाई थकाली भनिन्छ । काली गण्डकीको किनारमा रहेको थाकखोला भन्ने ठाउँमा बस्ने बासिन्दा 'थकाली' भनेर चिनिन्छन् ।[५४] वि.सं. १९११-१२ मा भएको नेपाल तिब्बत युद्धमा थकालीहरूले निकै राम्रो सहयोग गरेकोले जङ्गबहादुर राणाले उनीहरूलाई तिब्बततिरको व्यापार गर्ने इजारा सहित 'सुब्बा' पदवी समेत दिएका थिए । त्यसपछि थकालीहरूको आर्थिक उन्नति निकै उर्लेर गएको थियो ।[५५]

थाक सातसयमा बस्ने थकालीहरूलाई गौचन, तुलाचन, शेरचन र भट्टचन गरी चार थरीमा विभाजन गरिएको छ ।[५६] टुकुचे, कोवाङ, तकुं, नाम्र्कोट, टिटी, कुर्ज्या, ताग्लुङ, लेते, घाँस, लाटाजुङ, धंपु, भुर्जुङ्कोट, झौ, खन्ती आदि चौध गाउँका मुखिया नै थकालीहरूका प्रमुख व्यक्ति मानिन्थे जसले त्यो क्षेत्रको बन्दव्यापार र अन्य रीतिस्थितिको बन्दोवस्त मिलाउँदथे ।[५७]

विभिन्न समयमा बन्द व्यापारको सिलसिलामा थकालीहरू थाकखोलाबाट पर्वत राज्यका बेनी र बाग्लुङका साथै पोखरा, गुल्मी, स्याङ्जा, पाल्पा, बुटवल र भैरहवातिर बसाइ सर्दै गए तापनि उनीहरूको मुख्य बस्ती पाल्पा गौंडा अन्तर्गतको थाक सातसय र पर्वत राज्यमा थियो ।[५८]

### २.३ मुस्लिम जाति

पाल्पाको प्रशासनिक क्षेत्रमा मुस्लिम जातिका मानिसहरूको पनि बसोबास भएको पाइन्छ । मुस्लिमहरू सर्वप्रथम रत्नमल्लको समयमा (वि.सं. १५४१-१५७७) नेपालमा आएका थिए ।[५९] उनीहरू व्यापार गर्ने र कालिगढको काम गर्ने सिलसिलामा नेपालका पहाडी क्षेत्रमा पुग्ने क्रममा पाल्पाको प्रशासनिक क्षेत्र अर्घा, खाँची, पाल्पा आदि ठाउँमा पनि पुगेका थिए । मुस्लिमहरूले खास गरेर चुरा, पोतेको व्यापार गर्ने भएकोले पहाडी इलाकामा उनीहरूलाई चुरेटा भन्ने चलन थियो ।[६०] मुस्लिमहरू र हिन्दूहरूमा संस्कार, संस्कृति नमिल्ने भएकोले उनीहरूलाई बस्नको लागि छुट्टै जग्गाको व्यवस्था गरिएको हुन्थ्यो । पाल्पामा पनि जोगेपानी मौजा अन्तर्गत पश्चिम गाउँमा उनीहरूको छुट्टै बस्ती भएको पाइन्छ ।[६१]

पाल्पाको प्रशासनिक क्षेत्रमा पर्ने अर्घाखाँचीको वाङ्ला, बाग्लुङको बलेवा, पाल्पाको रामपुर र पश्चिम गाउँ (तानसेन) आदि इलाकामा मुस्लिमहरूका बस्ती भएको पाइन्छ ।[६२]

## ३. वर्ण व्यवस्थाले समाजमा पारेको प्रभाव

नेपाली समाज प्राचीनकालदेखि नै खस-आर्य, मंगोल र अन्य विविध जातिहरूको सङ्गमस्थल बन्दै आएकोछ तापनि लिच्छवीकालदेखि नेपाली समाजलाई वर्ण व्यवस्थामा लैजाने प्रयास भएको पाइन्छ । अंशुवर्माले समाजमा आर्य मर्यादा कायम राख्न र 'धर्मशंकर' को समस्या उत्पन्न हुन नदिन 'भट्टाधिकरण' नामको अड्डा

समेत स्थापना गरेका थिए ।[६३] वर्ण व्यवस्थालाई कायम राख्नुलाई आर्य मर्यादा भनिन्थ्यो । जात अनुसारको काम गर्नुलाई धर्म भनिन्थ्यो । पेशागत वर्गीकरणबाट विमुख भइ छ्यासमिसे पेशा अपनाउन नदिइ 'धर्मशंकर' हुनबाट जोगाउन उक्त 'भट्टाधिकरण' नामको अड्डा स्थापना गरिएको थियो ।[६४]

मध्यकालको पूर्वाद्धमा वर्ण व्यवस्था लोप हुँदै गयो र मानिसहरूले छ्यासमिसे पेशा अपनाउन थाले । त्यसकारण जयस्थिति मल्लले हिन्दू वर्ण व्यवस्थालाई कडाइका साथ लागू गराइ समाजलाई चार वर्ण र विभिन्न जातमा विभाजन गरेका थिए ।[६५] मध्यकालमा जब भारतबाट नेपालमा पसेका कट्टर हिन्दू धर्मावलम्बीहरूको शासन चल्न थाल्यो तब तिनीहरूले नेपाली समाजलाई अझ बढी हिन्दूकरण गरे । अनि उपत्यका लगायत नेपालका विभिन्न बाइसी चौबिसी राज्यहरूमा वर्ण व्यवस्था लागू गराए ।[६६] पाल्पामा पनि सेनवंशी राजाहरूले हिन्दू वर्ण व्यवस्थालाई अपनाएर समाजलाई सोही अनुसार सञ्चालन गराएका थिए ।[६७] नेपालको एकीकरणपछि मुलुकको राजनैतिक र भौगोलिक क्षेत्रमा परिवर्तन आएतापनि सामाजिक स्वरूपमा खासै परिवर्तन आएको पाइन्न । किनभने त्यतिखेर प्राचीनकालदेखि चल्दै आएको वर्ण व्यवस्थालाई नै मान्यता दिइएको थियो ।[६८] त्यसकारण नेपालको प्रशासनिक सुदृढिकरणका लागि गरिएको भौगोलिक क्षेत्र विभाजन अनुसारको प्रशासनिक एकाई पाल्पा गौंडामा पनि चार वर्ण ब्राह्मण, क्षत्री, वैश्य र शुद्र तथा अनेकौं जातजातिका मानिसहरूको बसोबास भएको पाइन्छ ।

**ब्राह्मण**

वर्ण व्यवस्था अनुसार ब्राह्मणलाई उच्चकोटीको वर्गमा राखिएको थियो । उनीहरूले राज्यबाट अनेकौं सुविधाहरू प्राप्त गरेका हुन्थे । मध्यकालदेखि नै नेपालका विभिन्न राज्यहरूमा राजगुरु, राजपुरोहित, धर्माधिकारी जस्ता उच्चकोटीका पदहरूमा ब्राह्मणहरू रहने हुनाले ती पदहरू प्राप्त गर्नका लागि कुमाइ र पूर्वीया ब्राह्मणहरू बीच प्रतिष्पर्धा चलिरहन्थ्यो ।[६९] यद्यपि यी दुवै थरीका बीचमा विवाहवारी चल्दथ्यो तापनि पूर्वीयाले आफूलाई उच्चकोटीको ठहराउन 'उपाध्याय' वा 'पाध्या' उपाधि लिन्थे भने कुमाइले आफूलाई उपल्लो तहको देखाउन 'गुरुघराना' वा 'पण्डित' पदवी धारण गर्दथे ।[७०]

सेनकालमा पाल्पा राज्यमा विभिन्न थरका ब्राह्मणहरूको बसोबास थियो ।

ती मध्ये तिवारी, रेग्मी, भट्टराई, काफ्ले, गौतम, नेपाल, खनाल, घिमिरे, पाण्डे, बस्याल, ढकाल, अधिकारी, मरासिनी, बराल, पराजुली, गहिरे आदि सो राज्यको उच्च पदमा आसिन थिए । साथै तिनीहरूले विभिन्न स्थानमा विर्ता पाएको हुनाले अलगअलग क्षेत्रमा आफ्नो बस्ती बसालेका थिए ।[७१] पाल्पा राज्य नेपालमा गाभिएपछि पनि सेन राजाहरूको पालामा उनीहरूलाई दिइएका विर्ता थमौती गरिएको हुनाले ती ब्राह्मणहरू आ-आफ्ना गाउँ मौजामा यथावत रूपमा बसेको पाइन्छ ।[७२]

**क्षत्री**

वर्ण व्यवस्थामा ब्राह्मणपछि क्षत्रीलाई उच्च स्थानमा राखिएको थियो । राज्य प्रशासनका उच्च पदहरू खास गरेर सैनिक सेवामा उनीहरू नै बहाल रहेका हुन्थे । उनीहरूलाई राज्यले अनेकौं आर्थिक सुविधाहरू प्रदान गरेको हुन्थ्यो । नेपालका विभिन्न जाति बारे अध्ययन गरेका हड्सनले क्षत्रीलाई ठकुरी, हमाल, झर्रा क्षत्री र खत्री भनी वर्गीकरण गरेका छन् ।[७३] झर्रा क्षत्रीमा ओली, कार्की, कुँवर, खड्का, थापा, बस्नेत, बानियाँ, बिष्ट, बुढा, बोगटी, बोहरा, महत, राउत, रावल, सिंजापति तथा ठकुरीमा कल्याल, खाँड, चन्द, पाल, बम, मल्ल, शाह, शाही, सिंह आदि थरका मानिसहरू पर्दछन् ।[७४] उपाध्याय बाहुनले ठकुरीकी छोरी विवाह गरी जन्मेको सन्तानलाई 'हमाल' भनिन्थ्यो भने क्षत्रीकी छोरी वा पानी चल्ने जातकी कन्या विवाह गरी जन्मेको सन्तानलाई 'खत्री' भनिन्थ्यो ।[७५] त्यसकारण ब्राह्मणका जति थर थिए त्यति नै थरका खत्री क्षत्री हुन्थे तर राणा शासनकालसम्म आफ्नो थर लेख्न नपाइने हुनाले कतिपय मानिसहरूले 'क्षत्री' मात्र लेख्ने गरेको पाइन्छ । पाल्पामा मध्यकालदेखि नै सेन, शाह, मल्ल, थापा, रावल, कुँवर, खडका आदि थरका ठकुरी र क्षत्रीहरूको वसोबास भएको पाइन्छ ।[७६]

**वैश्य**

वर्ण व्यवस्था अनुसार तेस्रो वर्गमा वैश्य पर्न आउँछ तर नेपालको पहाडी मूलका मानिसहरूमा कसलाई वैश्य भन्ने हो भनेर यकिन गर्न अप्ठेरो छ । वि.सं. १९१० को मुलुकी ऐनले पनि वैश्य वर्गको किटान गरेको छैन तर सामाजिक प्रचलनमा नेवार जातिलाई सो वर्णमा राख्ने गरेको पाइन्छ ।[७७] तर पेशा र धार्मिक दुवै दृष्टिकोणले नेवारहरूमा पनि विभेद रहेको पाइन्छ । पाल्पाको प्रशासनिक क्षेत्रमा हिन्दू र बौद्ध दुवै थरी नेवारहरूको बसोबास भएको पाइन्छ । हिन्दू मार्गी नेवारहरूमा राजोपाध्या, आचाजू, श्रेष्ठ, प्रधान, जोशी, अमात्य, कक्षपति, थैव, मास्के, राजभण्डारी, राजलवट,

सैंजू, सिंह, लाकौल आदि थरका मानिसहरू भएको कुरा विभिन्न अभिलेखबाट अवगत हुन्छ ।[७८] बौद्ध धर्मवलम्बीहरूमा बौद्धाचार्य, गुभाजू, महर्जन, उदास, उदय, मलेगो, नापित, ताम्रकार, चित्रकार, तुलाधर, लिगल, आदि थरका मानिसहरू भएको पाइन्छ ।[७९]

### शुद्र

समाजको सबैभन्दा तल्लो तहमा शुद्र वर्णलाई राखिएको थियो । वर्ण व्यवस्था अनुसार यस वर्गमा मतवाली जातका मानिसहरू पर्दथे । मतवाली जातमा नेवार, मगर, गुरूङ, लिम्बु, किराँत, सुनुवार, चेपाङ, माझी, दनुवार, दराई आदि पानी चल्ने जात [८०] र मुसलमान, धोवी, मधेशका तेली, कुलु, कसाही, म्लेच्छ, कुसले, चुरेटा, वादी, भाँड, पोढे, च्यामे, आदि पानी नचल्ने जातका मानिसहरूलाई राखिएको थियो ।[८१]

यसरी नेपाली समाजलाई एकातिर वर्ण व्यवस्था अनुसार चार वर्णमा विभाजन गरी उच्च र नीच जातमा वर्गीकरण गरिएको थियो भने अर्कोतिर तागधारी र मतवाली, पानी चल्ने र नचल्ने आदि विभिन्न वर्गमा विभाजन गरिएको थियो ।

### तागाधारी

वर्ण ब्यवस्था अनुसार तागा अर्थात जनै धारण गर्न पाउने जातका मानिसलाई तागाधारी भनिन्थ्यो । यो जातलाई मतवाली भन्दा उच्च मानिन्थ्यो । तागाधारी जातका पुरुष वर्गले जनै लगाउन अनिवार्य थियो ।[८२] यो जातको कुनै व्यक्तिले जाँड, रक्सी, कुखुरा, सुँगुर, गाइ, भैंसीको मासु जस्ता अभक्ष कुरा खायो भने उसको अंश सर्वश्व गरी मतवाली जातमा पतित गराइन्थ्यो । उपाध्याय ब्राह्मण, जैसी, राजपुत, क्षत्री आदि जातलाई तागाधारी मानिन्थ्यो ।[८३] नेवारहरूमा देउभाजू तथा अन्य उच्चकोटीको जातका नेवारलाई यस वर्गमा राखिएको थियो ।[८४]

### मतवाली

जनै लगाउन नपाउने; जाँड, रक्सी र अभक्ष भनिने वस्तु खान पाउने वर्गलाई मतवाली भनिन्थ्यो ।[८५] यो जातलाई दुई वर्गमा विभाजित गरिएको थियो; नमासिने र मासिने । सामान्यतया सानोतिनो अपराध गरेमा मृत्युदण्ड नदिइने र सामाजिक मर्यादा कायम रहने जातलाई नमासिने वर्ग भनिन्थ्यो । यस वर्गमा नेवार, मगर र गुरूङ जातिलाई राखिएको थियो ।[८६] सानोतिनो अपराधमा पनि ज्यान सजाय हुने र समाजमा निम्न स्तरको मान्यता भएका जातलाई मासिने वर्गमा राखिएको थियो ।

मासिने जातलाई पनि पानी चल्ने र पानी नचल्ने दुई वर्गमा विभाजित गरिएको थियो । जसले छोएको पानी चारवर्ण छत्तिसै जातले खान हुन्थ्यो त्यसलाई पानी चल्ने जात भनिन्थ्यो । लिम्बु, किराँत, सुनुवार, चेपाङ, माझी, दनुवार, दराइ आदि जातलाई मासिने तर पानी चल्ने जातमा राखिएको थियो ।[८७] जुन जातका मानिसले छोएको पानी उच्च जातका मानिसले खान प्रतिबन्ध लगाइएको थियो त्यसलाई पानी नचल्ने जात भनिन्थ्यो । पानी नचल्ने जातलाई पनि दुई वर्गमा बाँडिएको थियो; छोए छिटो हाल्नु नपर्ने र छोए छिटो हाल्नु पर्ने । पानी नचल्ने जात मध्येका पनि केही जातलाई यस्तो वर्गमा राखिएको थियो जुन जातका मानिससँग छोइएमा कुनै प्रायश्चित्त गर्न वा छिटो हाल्न पर्दैनथ्यो । मुसलमान, धोबी, मधेशका तेली, कुलु, कसाही, म्लेछ, कुसले, चुरेटा जातका मानिसलाई यस समूहमा राखिएको थियो ।[८८] पानी नचल्ने जातमध्ये जुन जातका मानिससँग उच्च जातका मानिस छोइएमा प्रायश्चित्त स्वरूप सुन पानी छर्केर छोइछिटो हाल्नु पर्दथ्यो । त्यस्ता जातमा सार्की, कामी, सुनार, चुनारा, हुर्के, दमाइ गाइने, वादी, भाँड, पोढे, च्यामे आदि जातलाई राखिएको थियो ।[८९]

तागाधारी वर्गका मानिसले मतवाली वर्गका मानिसद्वारा पकाइएको खाना खाएमा जातिच्यूत गरिन्थ्यो । अनजानमा घटी जातले पकाएको खाने चिज खाएमा भातपानीमा बोरेको भनिन्थ्यो । यस्तो अवस्थामा प्रायश्चित्त मात्र लिएर पनि चोखिन सकिन्थ्यो । यसको उदाहरणका लागि वि.सं. १८८१ साल श्रावण शुदी ५ मा पाल्पा गौंडाका तैनाथवाला कर्णेल उजिरसिंह थापालाई दिइएको एक आदेशलाई लिन सकिन्छ । उक्त आदेशमा हरिकला सर्किनीले आफ्नो जात छिपाइ खडगसिं रानाको घरमा बास बसी भातपानीमा बोरेकोले निज रानालाई प्रायश्चित गरी चोखिन दिनु भनिएको छ ।[९०] कतिपय अवस्थामा जानाजानी तल्लो जातका मानिसले छोएको खाने कुरा खाएमा पनि प्रायश्चित लिएर मात्र चोखिन सकिन्थ्यो । वि.सं. १८९१ साल श्रावण शुदी ८ मा पाल्पाका तैनाथवाला छोटा जनरल रणवीरसिंह थापालाई दिइएको आदेशले उक्त कुराको पुष्टि गर्छ । उक्त आदेशमा पाल्पाको एक धोबीले काटेको मासु जानाजानी खाने उपल्लो जातका मानिसलाई प्रायश्चित मात्र गरेर चोखिन दिनु भनिएको छ ।[९१]

तल्लो जातको मानिसले उपल्लो जातको हुँ भनी ढाँटेर भातपानीमा बोरेमा त्यस्ता व्यक्तिलाई कडा सजाय गरिन्थ्यो भन्ने कुरा वि.सं. १८९२ साल आश्विन वदी १४ मा पाल्पाका तैनाथवाला छोटा जनरल रणवीरसिंह थापालाई दिइएको आदेशबाट

अवगत हुन्छ । उक्त आदेशमा हरिकृष्ण जैसीले उपाध्याय बाहुन हुँ भनी ढाँटेर उपाध्याय ब्राह्मणको भातभान्सा बोरेकोले निजको अंश सर्वश्व गरी, चारपाटा मुडेर देश निकालाको सजाय गर्नु भनिएको छ ।[५२] त्यस्तै उपल्लो जातको मानिसले तल्लो जातकी आइमाईसँग यौन सम्बन्ध राखेमा त्यस्ता व्यक्तिको जातच्यूत गरिन्थ्यो भन्ने कुरा सोही मितिमा रणवीरसिंह थापालाई दिइएको अर्को एक मुद्दाको आदेशबाट ज्ञात हुन्छ । उक्त आदेशमा अर्घा बस्ने नैनसिं थापा मगरले धर्मी कमीनीसँग यौन सम्बन्ध राखेकोले निजलाई अंश सर्वश्व गरी जात बाहेक गरिदिनु भनिएको छ ।[५३] राणा शासनकालमा वि.सं. १९१० मा बनेको मुलुकी ऐन हिन्दू वर्ण व्यवस्थामा आधारित जाति भेद र छुवाछुत प्रथामा आधारित हुनाले सो ऐनले परम्परादेखि चल्दै आएको सामाजिक संरचनालाई लिखित कानूनी रूप दिने काम गरेको थियो । यो मुलुकी ऐनले हिन्दू वर्ण व्यवस्था अनुसारका ब्राह्मण र क्षत्रीलाई तागाधारी जातमा राखेको थियो भने मतवाली जातलाई शुद्र वर्गमा राखेको थियो ।[५४]

राणा शासनकालमा नेपालमा बसोबास गर्ने मानव समुदायलाई विभिन्न वर्गमा विभाजन गरी आर्थिक सुविधा, सामाजिक मान्यता र कानूनी हक अधिकार प्राप्तिमा भेदभाव गरिएको थियो । राणा शासनको समाप्तीपछि मुलुकमा प्रजातन्त्रको अभ्यास गर्नका लागि 'नेपाल अन्तरिम शासन विधान २००७' लागू गरियो । उक्त विधानमा राज्यनीतिका निर्देशक सिद्धान्तको रूपमा अनेकौं बुँदाहरू राखिएको थियो । त्यसमध्ये नेपालभर मुलुकका नागरिकहरूका निमित्त एकै नासको देवानी ऐन जारी गर्ने तथा धर्म, जाति, जात (वर्ण), लिङ्ग, जन्मस्थान वा यस्ता कुनै विषयको आधारमा नागरिकलाई भेदभाव नगर्ने उद्देश्य पनि राखिएको थियो ।[५५] यस्तै 'नेपाल अधिराज्यको संविधान २०१५' ले सबै नागरिक कानूनको समान संरक्षणको हकदार हुने, सामान्य कानूनको प्रयोग र सरकारी सेवाको नियुक्तिमा कुनै पनि नागरिकमाथि धर्म, वर्ण, लिंग तथा जातजातिको आधारमा भेदभाव नगरिने घोषणा गरेको थियो ।[५६] यसरी नै 'नेपालको संविधान २०१९' ले पनि सोही प्रतिबद्धतालाई निरन्तरता दिएको पाइन्छ ।[५७] परन्तु उक्त कुरालाई कार्यान्वयन गर्ने मुलुकी ऐनमा कुनै संशोधन नभएकोले व्यवहारिक रूपमा धर्म, वर्ण र जातजातिको आधारमा गरिने भेदभाव कायमै थियो । वि.सं. १९१० देखि चल्दै आएको पुरानो मुलुकी ऐन तथा सबै ऐन, सवाल र सनदहरू खारेज गरी वि.सं. २०२० भाद्र १ गते नयाँ मुलुकी ऐन जारी गरियो जसले वर्तमान राजनीतिक, आर्थिक र सामाजिक व्यवस्थाको विचारबाट विभिन्न वर्ग, जाति र क्षेत्रका जनताको

बीचमा सुसम्बन्ध बनाइ राख्ने उद्देश्य राखेको थियो ।[९८] उक्त मुलुकी ऐनमा जातभातको आधारमा छुवाछुतको भेदभावपूर्ण व्यवहार गरेमा, सार्वजनिक स्थलमा उपस्थित हुन वा सार्वजनिक उपभोगका कुराहरूको प्रयोग गर्नबाट वञ्चित गरेमा दण्ड सजाय गरिने व्यवस्था गरिएको थियो ।[९९]

वर्ण व्यवस्थाले नेपाली समाजमा ज्यादै गहिरो जरा गाडेको छ जसलाई सजिलै उखेलेर फाल्न कठिन छ । त्यसकारण नयाँ मुलुकी ऐन २०२० ले पनि सबै नागरिक उपर समान व्यवहार गर्ने कानूनी व्यवस्था गरेतापनि जातभात र छुवाछुत प्रथालाई उन्मुलन गर्न सकेको छैन भन्ने विद्वानहरूको कथन छ ।[१००]

माथिको चर्चाबाट के स्पष्ट भएको छ भने पाल्पाको प्रशासनिक क्षेत्रको समाजको संरचनामा हिन्दू वर्ण व्यवस्थाले अत्यधिक मात्रामा प्रभाव पारेकोले यहाँका विभिन्न जाति र धार्मिक संप्रदायका मानिसहरू ब्राह्मण, क्षत्री, वैश्य र शुद्र वर्णमा विभाजित गरिएका थिए । साथै चार वर्णमा समेटिएका विभिन्न जात र पेशाका मानिसहरूलाई तागाधारी र मतवाली वर्गमा वर्गीकरण गरिएको थियो । हिन्दू वर्ण व्यवस्थाका हिमायती शासकहरूले गरेको नेपाली समाजको हिन्दूकरणको प्रयासलाई वि.सं. १९१० को मुलुकी ऐनले लिखित कानूनी मान्यता दिएको थियो । राणा शासनको पतनपछि समाजका हरेक मानिसलाई समानता प्रदान गर्ने र वर्ग भेद समाप्त गर्ने प्रयास गरिएको थियो । वि.सं. २०२० को नयाँ मुलुकी ऐनले त जातभातको आधारमा भेदभाव गरेमा दण्ड सजाय गर्ने व्यवस्था समेत गरेको थियो । तर पाल्पाको प्रशासनिक क्षेत्रमा परम्परागत रूपमा चल्दै आएको चार वर्ण र विविध जात बीचको भेदभाव सो मुलुकी ऐन जारी भएपछि पनि यथावत रूपमा कायम रहेको कुरा वि.सं. २०२५ मा सरकारी निकायबाट नै प्रकाशित एक पुस्तकबाट ज्ञात हुन्छ । उक्त पुस्तकमा यस्तो भनिएको छ- 'यद्यपि कानुनका दृष्टिबाट सबै वर्ण एक छन् । कुनै प्रकारको भेदभाव गर्न पाइँदैन तैपनि पाल्पामा बाहुन, क्षत्री, वैश्य, शुद्र चार वर्ण छन् । चार वर्ण छत्तीस जात भन्ने वर्ण भेद यहाँ अहिलेसम्म रहेकै छ ।'[१०१]

## ४. निष्कर्ष

पाल्पामा खस-आर्य, मगर, नेवार, गुरुङ, थकाली आदि विभिन्न जातिका मानिसहरूको बसोबास थियो । तापनि तिनीहरूलाई वर्ण व्यवस्थाले ब्राहमण, क्षत्री, वैश्य र शुद्र भनी चार जातमा विभाजन मात्र गरेको थिएन वर्गभेद समेत गरेको थियो ।

नेपालका अन्य क्षेत्रका बासिन्दालाई जस्तै पाल्पाका विभिन्न जातिका मानिसलाई पनि तागाधारी र मतवाली, पानी चल्ने र नचल्ने भनी विभेद गरिएको थियो । यद्यपि २०२० सालमा जारी गरिएको मुलुकी ऐनले जातिय विभेद हटाउन कानुनी व्यवस्था गरेको थियो तापनि समाजमा जरो गाडेर रहेको कुप्रथा सो ऐन लागु भएको दशकौं बित्दा पनि हट्न सकेको थिएन ।

**टिप्पणी**

१ कृष्ण बि. थापा, **मेन आस्पेक्टस अफ सोशल, इकोनोमिक एण्ड एडमिनिस्ट्रेटिभ हिस्ट्री अफ मोडर्न नेपाल**, काठमाण्डू : अम्बिका थापा, सन् १९८८, पृ. १ ।

२ शरदचन्द्र शर्मा, **नेपाल र यसका निवासी परिचयात्मक विवरण**, (दोस्रो संस्करण), काठमाडौं : श्री ५ को सरकार संचार मन्त्रालय, मुद्रण तथा प्रकाशन विभाग, वि.सं. २०४५, पृ. १७ ।

३ **द न्यू इन्साइक्लोपेडिया ब्रिटानिका**, भोलुम ३, सिकागो : इन्साइक्लोपेडिया ब्रिटानिका इन्क, सन् १९७५, पृ. ९८० ।

४ इ.टि.एटकिन्सन, **कुमाउँ हिल्स**,(रिप्रिन्ट), दिल्ली: कस्मो पब्लिकेशन्स,सन्१९७४,पृ.३७५-८१,३९७ ।

५ बालकृष्ण पोखरेल, **खस जातिको इतिहास**, विराटनगर : उदात्त अनुसन्धान अड्डी, वि.सं. २०५५, पृ.३४२–४७ ।

६ सूर्यमणि अधिकारी, **द खश किंगडम**, जयपुर : निराला पब्लिकेशन्स, सन् १९८८, पृ.४२ ।

७ जनकलाल शर्मा, **हाम्रो समाज : एक अध्ययन**, (द्वितीय संस्करण), काठमाडौं : साझा प्रकाशन, वि.सं. २०४९, पृ. ३७-३८ र ४४-४५ ।

८ थापा, **पूर्ववत्**, टि.नं. १, पृ. ४ ।

९ तुलसीराम वैद्य र अन्य, **सोशल हिस्ट्री अफ नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स प्रा.लि., सन् १९९३, पृ. १३ ।

१० फ्रान्सिस बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल**, (रिप्रिन्ट), न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिसेज, सन् १९८६, पृ. १५-१८ ।

११ डोरबहादुर विष्ट, **पिपुल अफ नेपाल**, (फस्ट एडिशन), डिपार्टमेन्ट अफ पब्लिसिटी, मिनिस्ट्री अफ इन्फर्मेसन एण्ड ब्रोडकास्टीड, हिज म्याजेस्टीज गभर्नमेन्ट अफ नेपाल, सन् १९६७, पृ. १-३ ।

१२ हेमिल्टन, **पूर्ववत्**, टि. नं. १०, पृ. १८ ।

१३ पोखरेल, **पूर्ववत्**, टि. नं. ५, पृ. १८ ।

१४ तुलसीराम वैद्य, **पृथ्वीनारायण शाह द फाउण्डर अफ मोडर्न नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३,पृ. २५४-५५ ।

१५ बालकृष्ण पोखरेल, **नेपाली भाषा र साहित्य**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं.

२०२५, पृ. २९ ।

१६ धनबज्र बज्राचार्य र कमलप्रकाश मल्ल, **द गोपालराजवंशावली**, काठमाण्डू : नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स, सन् १९८५, पृ. ८२ ।

१७ एटकिन्सन, **पूर्वपवत्**, टि. नं.४, पृ. ३८०, ३९७ ।

१८ योगी नरहरिनाथ, **इतिहास प्रकाश**, अंक २, भाग १, काठमाडौं : इतिहास प्रकाशक संघ, वि.सं. २०१३, पृ. ५९-६२ ।

१९ अधिकारी, **पूर्वपवत्**, टि.नं. ६, पृ. ४३ ।

२० इडेन भेन्सिटार्ट, **द गुर्खाज**, (रिप्रिन्ट), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स्, सन् १९९३, पृ.६३-६४ ।

२१ धनबज्र बज्राचार्य र अन्य, **इतिहास संशोधनको प्रमाण प्रमेय**, पहिलो भाग, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०१९, पृ. १८१ ।

२२ ढुण्डीराज भण्डारी, **नेपालको आलोचनात्मक इतिहास**, खण्ड २, नेपाल : प्रकाश प्रकाशन, वि.सं. २०२७, पृ. ६१-६३ ।

२३ योगी नरहरिनाथ, **इतिहास प्रकाश**,अङ्क १, काठमाडौं: इतिहास प्रकाश मण्डल, वि.सं.२०१२,पृ. ११९ ।

२४ मोहनबहादुर मल्ल, "पर्वतको इतिहास", **प्राचीन नेपाल**, संख्या १६, वि.सं. २०२८, पृ. ४२ ।

२५ टेकबहादुर श्रेष्ठ, "गलकोट, अर्घा, खाँची तथा पैयुँ राज्यको ऐतिहासिक रूपरेखा", नेपाल र एशियाली अनुसन्धान केन्द्र, कीर्तिपुरमा प्रस्तुत शोधपत्र, वि.सं. २०४०, पृ. १३-१४ ।

२६ टेकबहादुर श्रेष्ठ, **पर्वतराज्यको ऐतिहासिक रूपरेखा**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ. १४० ।

२७ बालकृष्ण पोखरेल,**पाँच सय वर्ष**, (तेस्रो पटक), ललितपुर : साझा प्रकाशन, वि.सं.२०५०, पृ.१०५-१७ ।

२८ शर्मा, **पूर्ववत्**, टि.नं. २, पृ. ३०-६६ ।

२९ महेशराजपन्त र ऐश्वर्यधर शर्मा, **द टू अर्लिस्ट कपरप्लेट इन्सक्रीप्सन फ्रम नेपाल**, काठमाण्डू : नेपाल रिसर्च सेन्टर, सन् १९७७, पृ. २१ ।

३० चित्तरञ्जन नेपाली, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, तेस्रो संस्करण, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३५, पृ. १४४ ।

३१ ब्रेन एच. हडसन, **एस्सेज अन द ल्याङ्ग्वेज, लिटेरेचर एण्ड रिलिजन अफ नेपाल एण्ड तिब्बत**, न्यू दिल्ली : मंजुश्री पब्लिकेशन्स, सन् १९७२, पृ. ४० ।

३२ शर्मा, **पूर्ववत्**, टि. नं. ७, पृ. २७७ ।

३३ केशरजंग बराल मगर, **पाल्पा, तनहुँ र स्याङ्जाका मगरहरूको संस्कृति**, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०५०, पृ. ३१ ।

३४ भेन्सिटार्ट, **पूर्ववत्**, टि. नं. १६, पृ. ८४-८९ ।

३५ जगमान गुरूङ, **गुरूङ जाति तथा संस्कृति**, कास्की : लेखक स्वयम्, वि.सं. २०३४, पृ. ७-८ ।

३६ हड्सन, **पूर्ववत्**, टि. नं. ३१, पृ. ३९-४० ।

३७ सि.जे. मोरिस, **द गुर्खाज : एन इथ्नोलोजी**, (रिप्रिन्ट), दिल्ली : लो प्राइस पब्लिकेशन्स, सन् १९९३, पृ. ६४ ।

३८ गोपालसिंह नेपाली, **द नेवार्स : एन इथ्नो-सोशोलोजिकल स्टडी अफ हिमालयन कम्युनिटी**, बम्बई : यूनाइटेड एशिया पब्लिकेशन्स, सन् १९६५, पृ. २८ ।

३९ जि.एच.डि. जिमलेट, **नेपाल एण्ड द नैप्लिज**, (रिप्रिन्ट), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३, पृ. २० ।

४० वैद्य, **पूर्ववत्**, टि.नं. १४, पृ. २५५-५६ ।

४१ जिमलेट, **पूर्ववत्**, टि.नं. ३९, पृ. २०-२१ ।

४२ धनबज्र बज्राचार्य र ज्ञानमणि नेपाल (सम्पा.) **ऐतिहासिक पत्र संग्रह**, भाग १, काठमाडौं : नेपाल सौंस्कृतिक परिषद, वि.सं. २०१४, पृ.२९ ।

४३ श्रेष्ठ, **पूर्ववत्**, टि.नं. २६, पृ. ६४-६६ ।

४४ पाल्पा, तानसेनका श्री जगतबहादुर जोशीको संकलनमा रहेको सनातन गुठीको विधान "सनातन गुठीको पान्हि म्हिचा वि.सं. २००३" ।

४५ "पाल्पा खस्यौलीमा स्थापना गरिएको भीमसेन मन्दिरको लागि भवसिं नेवारका नाममा जग्गा गुठी राखिएको वि.सं. १८६५ को लालमोहर", माइक्रोफिल्म रिल नं. के. १९/४५ ए, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

४६ छत्रराज शाक्य, "पाल्पामा बुद्ध धर्म : एक संक्षिप्त विवरण", **सत्य**, वर्ष ७, अङ्क ३४, वि.सं. २०४६, पृ. ९० ।

४७ कर्णबहादुर बानियाँ, "तानसेनका मठ, मन्दिर, चैत्य तथा विहारहरूको कलाकौशल र गुठी व्यवस्था", त्रिभुवन विश्वविद्यालय, शिक्षाध्यक्षको कार्यालय, अनुसन्धान महाशाखामा प्रस्तुत लघुशोधपत्र, वि.सं. २०५६, पृ. १३७ ।

४८ "अमरनारायण मन्दिरमा आरती, भजन गर्ने नेवारहरूलाई घरगनी, सा.फा., वेठ वेगार माफ गरिएको वि.सं. १८६५ को रुक्का", **उही**, पृ. १३४-३५ ।

४९ कर्णबहादुर बानियाँ, **पाल्पाको भगवती जात्रा**, तानसेनः श्रेष्ठ पुस्तक भण्डार, वि.सं.२०५३,पृ.३६ ।

५० नेपाली, **पूर्ववत्**, टि. नं. ३०, पृ. १६०-६१ ।

५१ बानियाँ, **पूर्ववत्**, टि. नं. ४७, पृ. १६७-९९ ।

५२ "९५ सालमा खडा भयाको १० वर्खे मोठ लम्बरी किताप", (मालपोत कार्यालय पाल्पामा, सुरक्षित राखिएका छालाका जिल्द भएका, नेपाली कागजमा लेखिएका, वि.सं. १९९५ सालमा खडा गरी २००६ सालमा हाल साविक गरिएका पाल्पा माल अन्तरगतका मौजा मौजाका पाखो जग्गाका मोठ लगत किताव । यी किताव दुई ठेली छन् ।)

५३ नेपाली, **पूर्ववत्**, टि. नं. ३०, पृ. १६१ ।

५४ क्रिस्टोफ भान फुरर-हेमन्डर्फ, **हिमालयन ट्रेडर्स : लाइफ इन हाइल्याण्ड नेपाल**, लण्डन : जोन मुरे, सन् १९७५, पृ. १२४ ।

५५ उही, पृ. १४३-४६ ।

५६ सुरेन्द्र गौचन र माइकल भिण्डिड, "द हिस्ट्री अफ द थकाली एकोर्डिङ टू द थकाली ट्रेडिसन", **कैलास**, भोलुम ५, नं. २, सन् १९७७, पृ. ९७-९८ ।

५७ श्रेष्ठ, **पूर्ववत्**, टि. नं. २६, पृ. २६६-६७ ।

५८ सुसाने भान डर हेइड, **द थकालिज अफ नर्थ वेस्टर्न नेपाल**, काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९८८, पृ. ३-१२ ।

५९ समिमा सिद्धिका, **मुस्लिम्स् अफ नेपाल**, काठमाण्डू : गजला सिद्धिका, सन् १९९२, पृ. १०६ ।

६० शंकर थापा, "सम आस्पेक्टस् अफ मुस्लिम माइनरिटी इन नेपाल", रिसर्च डिभिजन, त्रि.वि. मा पेश गरिएको शोधपत्र, सन् १९९७, पृ. १३ ।

६१ "९५ सालमा खडा भयाको १० वर्खे मोठ लम्बरी किताप", **पूर्ववत्**, टि. नं. ५२ ।

६२ तानसेनका ७५वर्षीय श्री क्यामुदिन खाँसँग मिति २०५३।१२।४ मा लिइएको अन्तरवार्ता ।

६३ जगदीशचन्द्र रेग्मी, **लिच्छवी इतिहास**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ. १०६-१०७ ।

६४ धनबज्र बज्राचार्य, **लिच्छवीकालका अभिलेख**, (द्वितीय संस्करण), कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृ. २९७-९९ ।

६५ देवीप्रसाद लंसाल (सम्पा.), **भाषा वंशावली**, भाग २, श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ३७-५० ।

६६ वैद्य र अन्य, **पूर्ववत्**, टि. नं. ९, पृ. ३३-४० ।

६७ विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पदमा घिमिरे, वि.सं. २०४५, पृ. ११४-१५ ।,

६८ थापा, **पूर्ववत्**, टि. नं. १, पृ. १२-१३ ।

६९ हेमिल्टन, **पूर्ववत्**, टि. नं. ६, पृ. १७ ।

७० (क) श्रेष्ठ, **पूर्ववत्**, टि. नं. २६, पृ. २०९-८१ । (ख) घिमिरे, **पूर्ववत्**, टि. नं. ६७, पृ. १९५-२५७ ।

७१ उही, पृ. ११४, १२८ ।

७२ उही, पृ. २३५-५२ ।

७३ हडसन, **पूर्ववत्**, टि. नं. ३१, पृ. ३७-४४ ।

७४ बिष्ट, **पूर्ववत्**, टि. नं. ११, पृ. ५ ।

७५ शर्मा, **पूर्ववत्**, टि. नं. ७, पृ. ६९ ।

७६ घिमिरे, **पूर्ववत्**, टि. नं. २७, पृ. ११४ ।

७७ वैद्य र अन्य, **पूर्ववत्**, टि. नं. ९, पृ. ४९ ।

७८ बानियाँ, **पूर्ववत्**, टि. नं. ४७, पृ. १७४-८७ ।

७९ सुलोचना उदय चित्रकार,"तानसेनका बौद्ध धर्मावलम्बी नेवारहरूको संस्कृति", त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र संकाय डीनको कार्यालयमा प्रस्तुत शोधपत्र, वि.सं. २०५७, पृ. २६-२७ ।

[80] वैद्य र अन्य, **पूर्ववत्**, टि. नं. ९, पृ. ४८ ।

[81] **श्री ५ सुरेन्द्र विक्रम शाह देवका शासनकालमा बनेको मुलुकी ऐन**, श्री ५ को सरकार, कानुन तथा न्याय मन्त्रालय, कानुन किताब व्यवस्था समिति, वि.सं. २०२२, पृ. ६८०-६८१ ।

[82] **उही**, जनै दिन्याको महल, पृ. ४१३-१४ ।

[83] **उही**, मदपान अछुतीको महल, पृ. ३६९-७६ ।

[84] वैद्य र अन्य, **पूर्ववत्**, टि.नं. ९, पृ. ३८ र ४७ ।

[85] मुलुकी ऐन, जनै दिन्याको महल, **पूर्ववत्**, टि.नं. ८१, पृ. ४१३-१४ ।

[86] वैद्य र अन्य, **पूर्ववत्** टि. नं. ९, पृ. ४८ ।

[87] **उही** ।

[88] मुलुकी ऐन, पानी नचलन्या घटिवढी जातको महल, **पूर्ववत्**, पा.टि. नं. ९३, पृ. ६७८-८१ ।

[89] **उही** ।

[90] कृष्णकान्त अधिकारी, **नेपाल अण्डर जंगबहादुर १८४६-१८७७**, भोलुम १, काठमाण्डु : बुकु, सन् १९८४, पृ. ३२१-२२ ।

[91] शंकरमान राजवंशी (सम्पा.), **पुरातत्व पत्र संग्रह**, दोश्रो भाग, काठमाडौं : श्री ५ को सरकार, पुरातत्व र संस्कृति विभाग, वि.सं. २०१८, पृ. ८९ ।

[92] अधिकारी, **पूर्ववत्**, टि. नं. ९०, पृ. ३२५-२६ ।

[93] **उही** ।

[94] वैद्य र अन्य, **पूर्ववत्**, टि. नं. ९, पृ. ४८-४९ ।

[95] गृष्मबहादुर देवकोटा, **नेपालको राजनैतिक दर्पण**, भाग १, द्वितीयावृत्ति, काठमाडौं: अर्जुनबहादुर देवकोटा, वि.सं. २०३५, पृ. ७३२ ।

[96] **उही**, भाग २, वि.सं. २०३६, पृ. ७१६ ।

[97] **नेपालको संविधान** २०१९, (छैठौं संस्करण) श्री ५ को सरकार, कानून तथा न्याय मन्त्रालय, कानून किताव व्यवस्था समिति, वि.सं. २०३५, पृ. ६ ।

[98] **गोरखापत्र**, २०२० साल भाद्र १ गते ।

[99] **मुलुकी ऐन**, अदलको महल, श्री ५ को सरकार, कानुन, न्याय तथा संसदीय मन्त्रायल, कानुन किताब व्यवस्था समिति, वि.सं. २०५१, पृ. २४८ ।

[100] तुलसीराम वैद्य र त्रिरत्न मानन्धर, **क्राइम एण्ड पनिसमेन्ट इन नेपाल ए हिस्ट्रीकल पर्सपेक्टिभ**, काठमाण्डु : विनी वैद्य एण्ड पूर्णदेवी मानन्धर, सन् १९८५, पृ. २८६ ।

[101] **यो हो पाल्पा**, योजना, प्रगति तथा तथ्यांक शाखा, गृह पंचायत मन्त्रालय, वि.सं. २०२५,पृ.३७ ।

# ११. सेनकालीन पाल्पामा भाषा, साहित्य र संस्कृति : एक ऐतिहासिक विवेचना

## १.विषय प्रवेश

पाल्पा नेपालको पश्चिमाञ्चल विकास क्षेत्रमा पर्ने लुम्बिनी अञ्चलका छ जिल्लामध्येको एक पहाडी जिल्ला हो जसको इतिहास निकै महत्वपूर्ण छ । प्राचीनकालमा मगर मुखियाहरूका ससाना भुरेटाकुरे थुम राज्य भएको यो क्षेत्रमा बाह्रौं शताब्दीदेखि पन्ध्रौं शताब्दीसम्म खस राज्यको प्रभुत्व थियो । खस राज्यको विघटन पछि यो क्षेत्र पुनः भुरेटाकुरे राज्यमा विभाजित भयो जसलाई आफ्नो अधिनमा पारेर सेन वंशका शासकहरूले तीन शताब्दीसम्म शासन गरेका थिए । इसाको पन्ध्रौं शताब्दीको उत्तरार्द्धदेखि उन्नाइसौं शताब्दीको प्रारम्भसम्म कायम रहेको सेनकालीन पाल्पा राज्यमा भाषा, साहित्य र संस्कृतिको स्थिति के कस्तो थियो भन्ने बारेमा चर्चा गर्नु यो लेखको उद्देश्य रहेको छ ।

## २. सेनकालीन पाल्पाको भौगोलिक क्षेत्र

प्राचीनकालमा हिमालयको काखमा नेपाल नामको देश थियो । पश्चिममा कुमाउ र पूर्वमा आसामसम्म आफ्नो प्रभाव विस्तार गर्न सफल यो मुलुकको प्रशासन सञ्चालन गर्न विभिन्न प्रशासनिक एकाइ स्थापना गरिएको थियो जसलाई 'विषय' भनिन्थ्यो । त्यतिखेर आजकाल पश्चिमाञ्चल विकास क्षेत्र भनेर चिनिने गण्डकी क्षेत्रमा गण्डीगुल्म, धवलश्रोत र मंग्वर नामका विषय थिए भन्ने विद्वानहरूको भनाइ छ ।[१] लिच्छवी वंशको शासनपछि बृहद् नेपालको पतन भयो र पुनः ससाना भुरेटाकुरे थुम राज्य स्थापना भए । बाह्रौं शताब्दीमा ती राज्यहरूलाई आफ्नो प्रभावमा पारेर कर्णाली प्रदेशमा नागराजले खस राज्य स्थापना गरे भने नेपालको दक्षिण-पूर्वी भागमा नान्यदेवले सिमरौनगढ राज्य स्थापना गरे । त्यस्तै उपत्यकामा नेपाल मण्डल नामक राज्यको पुनः उत्थान भयो ।

पन्ध्रौं शताब्दीमा पश्चिमको खस राज्य विघटन भइ कर्णाली प्रदेशमा बाइसी र गण्डकी प्रदेशमा चौबिसी राज्य स्थापना हुन गए । नेपाल मण्डल राज्य पनि तीन टुक्रामा विभाजित भयो भने सिम्रौनगढ राज्यको अस्तित्व नै समाप्त भयो । गण्डकी प्रदेशमा स्थापना भएका चौबिसी राज्य मध्ये पाल्पा पनि एक थियो । यो राज्यको स्थापना वि.सं. १५५० मा रुद्र सेनले गरेका थिए । सेनवंशको शासन वि.सं. १५५० देखि १८६१ सम्म

कायम थियो । यस वंशका सबैभन्दा महत्वपूर्ण शासक मुकुन्द सेन प्रथम हुन् । उनको शासनकालमा पाल्पाको भूगोल पूर्वमा बराह क्षेत्र, पश्चिममा रुरु क्षेत्र, उत्तरमा मुक्ति क्षेत्र र दक्षिणमा हरिहर क्षेत्रसम्म फैलिएको थियो तर उनको निधनपछि पाल्पा राज्य टुक्रिन गइ पाल्पा, विनायकपुर, तनहुँ, रिसिङ, घिरिङ, मकवानपुर, चौदण्डी र विजयपुर नामका अनेकौं राज्यहरू स्थापना हुन गए । त्यसकारण मुकुन्द सेन प्रथमको निधनपछि पाल्पाको राजगद्दीमा बसेका माणिक्य सेनको पालामा पाल्पाको अधिनमा पूर्वमा देवघाट, पश्चिममा रिडी, उत्तरमा काली गण्डकी र दक्षिणमा चुरे पर्वतसम्मको भूभाग मात्र रहन गयो । पाल्पाका राजा त्रिलोक सेनको देहान्त भएपछि उनका उत्तराधिकारी नभएको हुनाले विनायकपुरका राजा अमर सेनले पाल्पा र विनायकपुरलाई एकै ठाउँमा गाभेर राज्य गर्न थाले । त्यसपछि पाल्पाको दक्षिणतिरको सिमाना पुन : मैदानी इलाकासम्म विस्तार हुन गयो । गन्धर्व सेनको शासनकालमा बलिहाङ (बल्ढेङ्गढी) राज्य कब्जा गरेपछि पाल्पाको दक्षिणपश्चिमी सिमाना पनि विस्तार भएको थियो । महादत्त सेनको शासनकालमा नेपालको एकीकरण कार्यमा पश्चिमी विजय अभियानमा गोरखालीलाई सहयोग गरेबापत पाल्पाले गुल्मी, अर्घा र खाँची राज्यको भूभाग पाएपछि यो राज्यको पश्चिमी सिमाना प्युठानसम्म विस्तार भएको थियो । पृथ्वीपाल सेनको समयमा रणबहादुर शाहले गुल्मी, अर्घा र खाँची पाल्पाबाट खोसेर आफ्ना जेठान सिद्धीप्रताप शाहलाई दिएपछि यो राज्यको पश्चिमी सिमाना पुन : रिडीखोलासम्म कायम भएको थियो । यसरी पाल्पा राज्यको भौगोलिक क्षेत्र बेलाबखतमा फैलिँदै र खुम्चिँदै गरेको पाइन्छ तापनि यो राज्यको पूर्वमा देवघाट, पश्चिममा रिडी, उत्तरमा कालीगण्डकी र दक्षिणमा गोरखपुरसम्मको इलाकामा मुकुन्द सेन प्रथमदेखि पृथ्वीपाल सेनको पालासम्म प्रभाव रहेको देखिन्छ ।[२] अत : यही भूभागलाई यस लेखमा सेनकालीन पाल्पाको भौगोलिक क्षेत्र मानिएको छ ।

## ३. सेनकालीन पाल्पाको संस्कृति

शब्दकोशमा संस्कृतिको अर्थ 'कला, साहित्य, इतिहास, भाषा, धर्म, दर्शन, आदि विभिन्न विषय वा मूल्य परम्पराको समष्टी नाम' हो भनिएको छ ।[३] समाजशास्त्रीहरू मानव जातिका सबै क्रियाकलापको प्रतिक नै संस्कृति हो भन्दछन् । उनीहरूका अनुसार संस्कृतिले एकातिर मानव समुहका संस्कार र सभ्यतालाई अभिव्यक्त गरेको हुन्छ भने अर्कोतिर मानिसका भौतिक र आत्मिक पक्षलाई पनि समेटेको हुन्छ । संस्कृति मानव समुदायले विकास गरेको ज्ञान, कला, साहित्य, विश्वास, मान्यता र परम्परा हो भन्ने उनीहरूको धारणा छ ।[४]

'संस्कृति' शब्दलाई अङ्ग्रेजीमा Culture भनिन्छ । यसको विकास ल्याटिन भाषाको Cultura बाट भएको मानिन्छ । मध्ययुगमा कृषिमा आधारित अर्थ व्यवस्था भएकोले कृषि उत्पादनको वृद्धिका लागि अनेकौं उपाय अपनाइन्थ्यो । त्यतिखेर जमिनलाई उर्वराशील बनाउनु (Cultivation of soil) लाई ल्याटिन भाषामा Cultura भनिन्थ्यो । त्यही शब्दको विकसित रूपबाट Culture शब्दको विकास भएको मानिन्छ।[१] समाज विकासको क्रममा मानिसहरू कृषि युगमा प्रवेश गरेपछि कविला युग समाप्त भयो । खेतिपाति गर्नका लागि ठूलो जनशक्ति चाहिने हुनाले विभिन्न कविलाहरू आपसमा मिलेर काम गर्न आवश्यक थियो । कविला (Tribe) भनेको कुनै निश्चित भूभागमा एउटा मुखियाको नेतृत्वमा रहेको एकै रक्त समुह, एकै प्रकारको भाषा, परम्परा र धर्म भएको मानव समुह हो ।[२] कृषि युगको प्रारम्भमा थुप्रै कविलाहरू थिए । अलगअलग भाषा र रहनसहन भएका ती कविलाहरूलाई एकजुट गराउन र विचारको आदानप्रदान गराउन एउटा साझा भाषाको आवश्यकता थियो । त्यसकारण ती कविलाहरूले साझा भाषाको विकास गरे । कृषि युग भएकोले उनीहरूको साझा व्यवसाय खेतिपाति गर्नु थियो जसका लागि जमिन आवाद गर्न आवश्यक थियो । कृषि युगको प्रारम्भमा जमिनको अभाव थिएन । फसल उत्पादन गर्न आवश्यक पर्ने नयाँ नयाँ प्रविधिको विकास गर्न मात्र जरुरी थियो । त्यसकारण मानिसहरूले अधिक मात्रामा फसल उत्पादन गर्न नयाँ नयाँ प्रविधिको खोजी गर्नुकासाथै खेतिपाति सप्रियोस र अन्नको सह होस भनेर बाली लगाउँदा र भित्राउँदा प्रकृतिको पूजा गर्ने परम्परा बसाले । साथै फुर्सतको समयमा मनोरञ्जनका लागि गरिने नाचगान उनीहरूको परम्परा बन्न गयो । मानिसहरूले जन्मदेखि मृत्युसम्म अनेक प्रकारका रीती-रिवाज गर्न थाले जुन कार्य उनीहरूका संस्कार बन्न गए । मानिसहरू कृषि युगमा प्रवेश गरेपछि समाजमा विभिन्न झमेला आउन थाले । ती विवाद मिलाउन र समाजमा सुव्यवस्था कायम गराउन एउटा शासकीय स्वरुपको आवश्यकता पऱ्यो जसको फलस्वरुप राज्यको उत्पत्ति भयो । भाषा, आर्थिक क्रियाकलाप, संस्कार र परम्परा साझा भएका, एकैथलोमा बस्ने मानिसहरूको मनोविज्ञान पनि एकैखालको हुने हुनाले त्यस्तो मानवको एउटै किसिमको संस्कृति बन्न गयो । एउटै किसिमको संस्कृतिको सघनता भएको त्यस्तो भौगोलिक क्षेत्रलाई 'राष्ट्र' (Nation) भन्ने संज्ञा दिइयो । त्यसपछि एउटा राष्ट्रमा बस्ने मानिसले अर्को राष्ट्रमा बस्ने मानिसलाई त्यो क्षेत्रको नामबाट चिन्न थाले । कालान्तरमा त्यो नाम उनीहरूको पहिचान बन्न गयो जसलाई 'जाति' भनियो ।[३] उदाहरणका लागि नेपालको कर्णाली क्षेत्रमा विभिन्न समयमा अनेकौं थरी कविलाका मानिसहरू आएर बस्न थालेका थिए ।

कृषि युग शुरु भएपछि उनीहरू त्यहीं नै स्थायी रूपमा बसोबास गर्न थाले । स्थायी रूपमा बस्न थालेपछि एक कविलाको अर्को कविलासँग सम्पर्क हुन थाल्यो र उनीहरूले बोल्ने साझा भाषा खस कुरा भनेर चिनिन थाल्यो । त्यसपछि खस कुरा बोल्ने र मष्टो वा भगवतीलाई इष्ट देवता मान्ने मानव समुहलाई 'खस जाति' भन्न थालियो । त्यस्तै नेपाल मण्डलमा बस्ने मानिसहरूले साझा भाषा नेवारी (नेपाल भाषा) बोल्ने र भीमसेन वा मच्छिन्द्रनाथलाई इष्ट देवता मान्ने भएकोले तिनीहरूलाई नेवार भनेर चिन्न थालियो ।

कर्णाली प्रदेशको खस राज्य र काठमाडौं उपत्यकाको नेपाल राज्यको बिघटनपछि गण्डकी प्रदेशमा स्थापित कुनै पनि चौबीसी राज्यमा एकै प्रकारको संस्कृतिको विकास हुन सकेन । किनभने यो क्षेत्रमा विविध जातिको बसोबास थियो जसलाई एउटै शुत्रमा बाँध्ने आर्थिक र सामाजिक परिवेश निर्माण हुन सकेको थिएन । किनभने कृषि युग भरखर शुरु भएको थियो र त्यसलाई विस्थापित गर्ने नयाँ आर्थिक प्रणाली शुरु भएको थिएन । त्यसकारण चौबीसी राज्य मध्येको एक पाल्पा राज्य जसलाई सेनकालीन पाल्पा भनिन्छ; यहाँ पनि एकै प्रकारको संस्कृतिको विकास भएको थिएन । सेनकालीन पाल्पामा सांस्कृतिक विविधता थियो ।

## ३.१ संस्कृतिका प्रतिकहरू

कुनै पनि मानव समुदायको संस्कृति बारे जानकारी दिने विभिन्न प्रतिकहरू हुन्छन् । त्यसकै आधारमा कुन संस्कृति कुन जाति वा मानव समुहको हो भन्ने कुराको पहिचान गर्न सकिन्छ । ती प्रतिकहरूमध्ये भाषा, साहित्य, कला, धर्म, संस्कार र चाडपर्व मुख्य मानिन्छन् । त्यसकै आधारमा यो लेखमा पनि सेनकालीन संस्कृतिको बारेमा चर्चा गर्ने प्रयास गरिन्छ ।

### ३.१.१ भाषा

कुनै पनि मानव समुदायको संस्कृति बारे जानकारी दिने मुख्य आधार भाषा हो । विश्वकोशमा उल्लेख भएअनुसार एकै प्रकारका समुदाय वा एउटै भौगोलिक क्षेत्रमा बस्ने मानिस या एकै किसिमको सांस्कृतिक परम्परा भएका मानव समुहले आफ्नो काम व्यवहारमा प्रयोग गर्ने साझा शब्दको नाम भाषा हो । अर्थात् मानव व्यवहारलाई ध्वनीका माध्यमबाट सम्प्रेषण गरिने क्रियाकलापलाई भाषा भनिन्छ ।' भाषालाई कथ्य र लेख्य रूपमा दुई किसिमले अभिब्यक्त गर्न सकिन्छ । यहाँ सजिलोका लागि कथ्य भाषालाई बोलीचालीको भाषा तथा लेख्य भाषालाई सरकारी भाषा र साहित्यको रूपरेखाको रूपमा प्रस्तुत गरिएको छ ।

**(१) बोलीचालीको भाषा**

कुनै पनि मुलुकको पहिचान उसको भाषा र संस्कृतिबाट हुन्छ। विश्वकोशमा उल्लेख भएअनुसार साझा किसिमको भाषा, संस्कार, संस्कृति, रहनसहन भएका मानिसहरूको मनोविज्ञान पनि समान प्रकारको हुनेहुनाले त्यस्तो मानव समुहलाई एक जातिको रूपमा चिनिन्छ * जसलाई विभिन्न मानव समुहको पहिचानको रूपमा लिइएको छ। सेनकालीन पाल्पाको भौगोलिक क्षेत्रभित्र आ-आफ्नै किसिमको पहिचान भएका अनेकौं जातिका मानिसहरूको बसोबास भएको पाइन्छ। ती बासिन्दामध्ये पहाडी इलाकामा मुख्य रूपमा मगर र खस-आर्य तथा मैदानी इलाकामा थारु र वैदिक-आर्य जातिको बसोबास भएको पाइन्छ। त्यसकारण यहाँ ती जातिहरूले बोल्ने भाषाका बारेमा चर्चा गरिन्छ।

(क) मगर ढुट

प्राचीनकालमा गण्डकी प्रदेशमा 'मंग्वर' नामक स्थानीय प्रशासनिक निकाय भएको कुरा माथि उल्लेख गरिएको छ। मंग्वरलाई नै कालान्तरमा मगराँत भन्न थालिएको हो र सो क्षेत्र मगर जातिको बसोबास स्थल हो भन्ने विद्वानहरूको भनाइ छ।[१०] मध्यकालमा मर्स्याङ्दीदेखि पश्चिम प्युठानसम्मको इलाकालाई 'बाहू मगराँत' भनिन्थ्यो भन्ने कुरा वि.सं. १८९३ को एक अभिलेखबाट ज्ञात हुन्छ।[११] हेमिल्टनले पनि पाल्पा क्षेत्रमा मगर मुखियाहरूद्वारा शासित बाहूवटा थुम राज्य भएको र ती राज्यहरूलाई हराएर सेन वंशी शासकले आफ्नो राज्य स्थापना गरेको कुरा उल्लेख गरेका छन्।[१२] त्यस्तै वि.सं. १८७७ देखि १८९९ (सन् १८२०-१८४२) सम्म नेपालमा बसेका र नेपालका विभिन्न जातिको बारेमा अध्ययन गरेका ब्रेन एच. हड्सनले पनि मर्स्याङ्दीदेखि भेरीसम्मको इलाकालाई 'मगराँत' भनेका छन्।[१३] सेनकालीन पाल्पा राज्यको पहाडी प्रशासनिक क्षेत्र माथि उल्लेखित इलाकाभित्र पर्ने हुनाले यो क्षेत्रमा मगर जातिको बसोबास थियो भन्ने कुरा स्पष्ट हुन्छ।

मगरहरूले बोल्ने भाषालाई मगर ढुट, खाम र काइके भनी वर्गीकरण गरिएको छ। विश्वकोशमा उल्लेख भएअनुसार बाहू मगराँतका बासिन्दाले बोल्ने भाषालाई मगर ढुट, अठार मगराँतका बासिन्दाले बोल्ने भाषालाई खाम र डोल्पाका तराली मगरले बोल्ने भाषालाई काइके भनिन्छ।[१४] बाहू मगराँत गण्डकी प्रदेशको मर्स्याङ्दीदेखि प्युठानसम्मको इलाका भएको कुरा माथि उल्लेख गरिसकिएको छ। सेनकालीन पाल्पा यही क्षेत्रमा पर्ने हुनाले यो इलाकामा बस्ने मगरहरूले मगर ढुट बोल्थे भन्ने कुरा स्वतसिद्ध हुन्छ। साथै मगर जातिका आले, थापा, राना र सिंजापति थर भएका मगरहरूले मगर ढुट बोल्ने कुरा विश्वकोशमा उल्लेख छ।[१५] बाहू मगराँतभित्र पर्ने पाल्पामा प्राचीनकालदेखि अहिलेसम्म पनि आले, थापा र राना थरका मगर जातिको बसोबास भएको र तिनीहरूले मगर ढुट

बोल्ने गरेको कुरा "पाल्पाको मगर संस्कृति"नामक शोधप्रबन्धमा उल्लेख छ ।[१६] माथि उल्लेखित उदाहरणहरूले के सावित गर्दछन् भने सेनकालीन पाल्पामा मगर जातिको बसोबास थियो र उनीहरूको बोलीचालीको भाषा मगर ढुट थियो ।

**(ख) खस कुरा**

मध्यकालको पूवार्द्धमा कर्णाली प्रदेशमा खस जातिको राज्य भएको कुरा गोपालराजवंशावलीमा उल्लेख छ ।[१७] खसहरू प्राचीनकालमा मध्य एसियाबाट खसगर, काशगर, हिन्दुकुश, काश्मीर, गढवाल, कुमाउँ हुँदै नेपालको कर्णाली प्रदेशमा प्रवेश गरी आफ्नो राज्य स्थापना गरेका थिए भन्ने एट्किन्सनको भनाइ छ ।[१८] खस राज्यको समृद्धि र वैभव चरमोत्कर्षमा पुगेका बेला यो राज्य पूर्वमा गण्डकी प्रदेशको त्रिशुली नदीसम्म, पश्चिममा गढवाल, उत्तरमा गुँगेपुराङ् र दक्षिणमा शिवालिक प्रदेशसम्म फैलिएको थियो । त्यतिखेर गण्डकी प्रदेशमा खसहरूले स्थायी रूपमा बसोबास गरिसकेका थिए भन्ने विद्वानहरूको भनाइ छ ।[१९] कान्तिपुरका राजा रत्न मल्ललाई भोटेहरूले दुख दिएर सताउँदा उनले पाल्पाका राजा मुकुन्द सेन प्रथमसँग गुहार मागेका थिए । त्यतिखेर पाल्पामा खस र मगर जातिका सेना थिए । ती दुई थरी सेनामध्ये खस जातिका सेना निडर र युद्धकौशलमा पोख्त भएकोले तिनीहरूलाई नै मुकुन्द सेनले कान्तिपुरका राजाको सहयोगका लागि पठाएका थिए । खस सेनाको सहयोगले रत्न मल्लले भोटेहरूलाई आफ्नो राज्यबाट धपाउन सफल भएकोले उनले खसहरूलाई कान्तिपुरमा स्थायी रूपमा बसोबास गर्ने प्रबन्ध मिलाएका थिए ।[२०] सेनकालीन पाल्पाको इतिहासका शोधकर्ता विष्णुप्रसाद घिमिरेले पनि सेनकालीन पाल्पामा खसहरूको बसोबास भएको कुरा उल्लेख गरेका छन् । साथै तत्कालीन अभिलेखहरूको अध्ययनबाट पनि सेनकालीन पाल्पामा खस जातिको बसोबास भएको ज्ञात हुन्छ ।[२१] खसहरूको आफ्नै भाषा र संस्कृति थियो । खसहरूले बोल्ने भाषालाई 'खस कुरा' भनिन्थ्यो ।[२२] खस जाति अर्थात् बाहुन, क्षत्री, घर्ती, दमाई, कामी, गाइने, हुड्के, तमोटे, वादी जातका मानिसहरूको मातृभाषा 'खस कुरा' हो भन्ने बालकृष्ण पोखरेलको भनाइ छ ।[२३] भारतका भाषाहरूको अध्ययन गर्ने विद्वान ग्रियर्सनले खस-आर्यले बोल्ने भाषालाई 'खस कुरा वा खस बोली' भनिन्थ्यो; नेपालको एकीकरणताक सो भाषा गोरखालीले बोल्ने हुनाले 'गोरखा भाषा' पनि भनियो, साथै पहाडपर्वतका मानिसले बोल्ने हुनाले 'पर्वते भाषा' पनि भनिन्थ्यो भनेका छन् ।[२४] माथि दिइएका उदाहरणले सेनकालीन पाल्पामा खस जातिको बसोबास थियो र उनीहरूले बोल्ने भाषालाई खस कुरा भनिन्थ्यो भन्ने कुराको पुष्टि हुन्छ ।

### (ग) भोजपुरी भाषा

पाल्पाका राजा मुकुन्द सेन द्वितीयले अवधका नवाबसँग मित्रता गरी गण्डकीको पश्चिमपट्टिका राजपुर र तिलपुर नामक इलाका प्राप्त गरेका थिए भने महादत्त सेनले तराइको उब्जाउशील जमिन प्राप्त गरेका थिए भन्ने विद्वानहरूको भनाइ छ।[२५] यो कुराले सेनकालीन पाल्पाको दक्षिणी सिमाना तराइको मैदानी इलाकासम्म फैलिएको थियो भन्ने कुरा ज्ञात हुन्छ। नेपालको तराइ इलाकामा प्राचीनकालदेखि थारु जाति र भारततिरबाट आएका वैदिक-आर्य जातिका मानिसहरूको बसोबास भएको पाइन्छ।[२६] सेनकालीन पाल्पाको तराइको भूभाग वर्तमान नेपालको नवलपरासी, रुपन्देही र कपिलवस्तु तथा भारतको विहार र उत्तरप्रदेश पर्दथ्यो।

भाषाशास्त्रीहरूले नेपालको नवलपरासी र रुपन्देही तथा भारतको विहार र उत्तरप्रदेशमा बस्ने मानिसहरूले भोजपुरी भाषा र रुपन्देहीको केही भाग, कपिलवस्तु, बाँके र बर्दिया तथा त्यसको सिमावर्ती भारतका बासिन्दाले अवधी भाषा बोल्ने गरेको कुरा उल्लेख छन्।[२७] साथै थारु जाति बारे अध्ययन गर्ने विद्वानहरूले नेपालको पूर्वमा बस्ने थारुले मैथिली, मध्य क्षेत्रमा बस्नेले भोजपुरी र पश्चिममा बस्नेले अवधी भाषा बोल्ने गरेको बताएका छन्।[२८] नेपालको मध्य क्षेत्र नवलपरासी, रुपन्देही र कपिलवस्तु पर्ने हुनाले भाषाशास्त्री र समाजशास्त्रीको भनाइलाई आधार मान्ने हो भने यो क्षेत्रमा बस्ने बासिन्दाले भोजपुरी भाषा बोल्ने गरेको देखिन्छ। साथै हिन्दी भाषाका विद्वानहरूले पनि माथि उल्लेखित स्थानहरूका सीमावर्ती भारतका गोरखपुर, आजमगढ, बलिया, बस्ती, चम्पारन आदि क्षेत्रमा भोजपुरी भाषा बोलिन्छ भनेका छन्।[२९] सेनकालीन पाल्पा राज्यको तराइ इलाका यही क्षेत्रमा पर्ने हुनाले सो क्षेत्रमा भोजपुरी भाषा बोलिन्थ्यो भन्ने कुराको पुष्टि हुन्छ।

### (घ) अन्य भाषा

सेनकालीन पाल्पामा माथि उल्लेखित जाति बाहेक कुमाल, बोटे, मुस्लिम आदि विभिन्न जातिका मानिसहरूको पनि बसोबास थियो भन्ने विद्वानहरूको भनाइ छ।[३०] ती जातिहरूको पनि आफ्नै भाषा भएकोले सेनकालीन पाल्पामा मगर ढुट, खस कुरा, भोजपुरी, कुमाल, बोटे र उर्दु भाषा बोलिन्थ्यो भन्ने कुरा थाहा हुन्छ।

## २. सरकारी कामकाजको भाषा

मुलुकको प्रशासन सञ्चालनका सिलसिलामा तयार गरिने अभिलेखहरू लेख्दा प्रयोग गरिने भाषालाई सरकारी कामकाजको भाषा भनिन्छ। सेनकालीन पाल्पामा सरकारी

कामकाजमा लेखिएका कागजहरू 'शौरसेनी भाषाबाट अपभ्रंस भएको राजस्थानी भाषा' मा लेखिएको छ भन्ने एक थरी विद्वानहरूको भनाइ छ।[३१] भाषाशास्त्री चुडामणि बन्धुले शौरसेनी भाषालाई प्राचीनकालको मध्येदेशीय संस्कृत भाषाबाट विकसित शुरसेन प्रदेशको आधारमा राखिएको भाषाको नाम हो भनेका छन्। शौरसेनीबाट अपभ्रंस भएर आधुनिक कन्नौजी, बुन्देली, ब्रज, राजस्थानी र हिन्दुस्थानी भाषा बनेको हो भन्ने उनको भनाइ छ।[३२] शुरसेन प्राचीनकालको भारतवर्षका अङ्ग, मगध, काशी, कोशल, वृजी, मल्ल, चेदी, वत्स, कुरु, पाञ्चाल, मत्स्य, शुरसेन, अस्मका, अवन्ती, गान्धार र कम्बोज नामका सोह्रवटा जनपद मध्येको एक मानिन्छ जसको राजधानी मथुरा थियो।[३३]

अर्का विद्वान सूर्यमणि अधिकारीले माथि दिइएको भनाइमा फरक मत राख्दै पाल्पाका सेनवंशी शासकको पालामा वि.सं. १५७१ देखि १८५० सम्म प्रसारित विष्णुप्रसाद धिमिरेको **पाल्पा राज्यको इतिहास**, भाग १ नामक पुस्तकमा प्रकाशित अभिलेखहरूमा अवधी, भोजपुरी र मैथिली भाषाको प्रभाव पाइन्छ भनेका छन्।[३४] उदाहरणका लागि वि.सं. १७८० को गन्धर्व सेनले जारी गरेको स्याहामोहरलाई लिन सकिन्छ जसमा यस्तो व्यहोरा उल्लेख छ–

> "स्वस्ति श्रीरूपनारायणेत्यादि विविध विरूदावलि विराजमानमनोन्नत श्री
> महाराजाधिराज श्री श्री श्री मद्‌गंधर्वसेन देवानां सदा समरविजयिनाम्
> आगे. धनराम जोइसिकै कुसुम षोला षेत मुरी १४० लगापात समेत
> डिही आगे हम कुश वृत्ति दिहल पिछे गौचर समेत हमै
> वन थपक से धनराम जोइसिकै कुशवृत्ति दिहल. सिवाने
> पूर्व देउराली षोलाके ददोमही से उपर दर्लाम दोबाटा
> वल्ड्‌याग जान्या बाटा गोहादी पोषरी समेत उपर बाटा
> दषिन वयर्दीप कुवा गाजुंदु वाहुंडाडा बाटा आगिढाल
> पानीढाल लप्सीषोला साँध दिहल. सम्वत १७८० मिति
> बैसाष सुदी रोज ५ मु. प्रभास शुभम् ... ... ..."[३५]

हेमिल्टनले भवदत्तकृत सेन वंशावली र समरबहादुर सेनले दिएको विवरणलाई आधार मानेर पाल्पाली सेनहरूका पुर्खा तुथा सेनले प्रयागबाट धपिएपछि पहिले बुटवल कब्जा गरेको अनि केही समयपछि राजपुर राजधानी भएको चम्पारन कब्जा गरेर बसेको तथा त्यहाँबाट पाल्पा र बुटवलको बीचमा पर्ने रिसियाङ (मसिहाङ ?) कब्जा गरेका थिए; उनका छोराले रिब्दीकोट कब्जा गरेका हुन् भन्ने कुरा उल्लेख गरेका

छन् ।[३६] वर्तमान भारतको चम्पारनमा (राजपुर र तिलपुर) पाल्पाका सेन वंशी शासकको जमिन्दारी भएको र मुकुन्द सेन प्रथमको निधनपछि पाल्पा राज्य विभाजित हुँदा कुवेर सेन सो क्षेत्रको राजा भएको देखिन्छ ।[३७] साथै पाल्पा राज्य नेपालमा गाभिएपछि सेन वंशका राज परिवार अर्थात् पृथ्वीपाल सेनकी विधवा रानी, उनका छोरा रत्न सेन, भाइ समरबहादुर सेन र काका सुरवीर सेन आदि पाल्पाबाट लखेटिएपछि मधुवनी तिलपुरमा बस्न गएको कुरा हेमिल्टनले उल्लेख गरेका छन् ।[३८] चम्पारन र मधुवनी भन्ने स्थानहरू विहारमा पर्दछन् र ती इलाकाहरू भोजपुरी भाषा प्रभावित क्षेत्र मानिएको छ । किनकि भोजपुरी भाषा प्राचीन समयको भारतका सोह्रवटा जनपदमध्ये काशी जनपदको भाषा थियो र यो भाषा बनारस, मिर्जापुर, जौनपुर, गाजापुर, बलिया, गोरखपुर, बस्ती, आजमगढ, शाहाबाद, चम्पारन, सारन र नागपुरसम्म फैलिएको थियो भन्ने विद्वानहरूको भनाई छ ।[३९] सेन वंशी शासकहरू भोजपुरी भाषा प्रभावित क्षेत्रबाट पाल्पामा आएको र त्यहाँ उनीहरूको सम्पर्क पनि भइरहेको तथा त्यतिखेर पाल्पामा लेखनपढ्न जान्ने मानिसहरू पनि नदेखिएको हुँदा सेनहरूले सरकारी कामकाजमा लेखपढ गर्न त्यही क्षेत्रका भोजपुरी भाषा जान्ने विद्वानलाई प्रयोग गरेका हुन सक्दछन् । त्यसकारण सेनकालीन सरकारी कागजपत्रमा भोजपुरी भाषा प्रयोग भएको प्रमाणित हुन्छ । तथापि यस विवादको निर्क्योल गर्ने जिम्मा भाषाशास्त्रीहरूलाई नै दिंदा उचित होला ।

सेनकालीन सरकारी कामकाजमा प्रयोग भएका कागजहरूमा वि.सं. १८३४ पछि भने खस भाषाको प्रभाव पाइन्छ । उदाहरणका लागि मुकुन्द सेन द्वितीयले प्रसारण गरेको एक कागजलाई लिन सकिन्छ जसमा खस भाषामा यस्तो लेखिएको छ –

> "श्री श्री श्री मन्मुकुन्द सेन बहादुर देवानां सदा समर विजयिनां
> आगे. सर्दार अंवरसिंघ थापाले विंति गऱ्या. विंति
> सुन्या. सर्वस्ता षसको अपुताली माफ गरिबक्स्या.
> सम्वत १८३४ साल कार्तिक सुदि ७ रोज ६
> मोकाम श्री राजधानी नआंकोट शुभम् ... ... ..."[४०]

सेनकालीन पाल्पामा खस भाषाको प्रयोग गर्न थालिएको भएतापनि यो भाषालाई पूर्ण रूपमा अङ्गीकार गरी सरकारी कामकाजमा प्रयोग गरेको पाईंदैन । वि.सं. १८३४ देखि १८६१ सम्मका ३३ वटा अभिलेखहरूमध्ये ७ वटामा मात्र खस भाषा प्रयोग भएको पाइन्छ । सेन वंशी अन्तिम राजा पृथ्वीपाल सेनको पालासम्म पनि भोजपुरी भाषा नै प्रयोग गरेको पाइन्छ । उदाहरणका लागि वि.सं. १८६० को पृथ्वीपाल

सेनले प्रसारण गरेको कागजलाई लिन सकिन्छ–

"१. स्वस्ति श्री मन्महाराजाधिराज श्रीश्रीश्रीमत्पृथ्वी
२. पाल सेन बहादुरदेवानां सदा समरविज
३. यिनाम ... ... ...
४. आगे. विष्णु महाजन वौझगरि महाजन कै
५. सामाकोट कै टक्सार वत्तीससव ३२०१
६. रूपैया मध्ये आधा आधा कै के इजारा कै दि
७. हल आपने षात्रजम्मा से दुई जने मिलि
८. के एकै टक्सार चलावै आधा आधा पट्टा
९. वमोजिम रूपैया सर्कार दाखिल कहल क
१०. रै. नफा टोटामे दुव जने वरोवर कै के षाहि
११. सन् १२११ साल अगन वदि १० रोज ५ मु.
१२. काठमाडौं शुभम् ... ... ... "[४१]

नेपालको एकीकरणको सिलसिलामा पाल्पा राज्य नेपालमा विलय भएपछि पाल्पामा पनि सरकारी कामकाजमा पूर्ण रूपमा खस भाषाको प्रयोग हुन थालेको कुरा वि.सं. १८६१ मा नागेश्वर पण्डितको विर्ता थमौती गरिएको कागजबाट ज्ञात हुन्छ। उक्त कागजमा लेखिएको ब्यहोरा यस्तो छ–

"१. श्री महाराजाधिराजकस्य रुक्का–
२. आगे. नागेश्वर पंडितके पाल्पाका तिम्रा वितलवको
३. कुसही विसही अघि पनि श्री वुवाज्यूबाट माफगरी
४. वक्स्याको हो. उही धर्म थामी आज पनि कुसही
५. विसही माफगरी वक्स्यौं. संवत् १८६१ साल
६. पौष वदि ११ रोज ५ शुभम् ... ... ... "[३५]

नेपालको एकीकरण अभियान सँगसगै खस भाषाले पनि विभिन्न नाम पाउँदै गयो। नेपाल उपत्यकामा नेवारी भाषी मल्लहरूको शासन चलेको बेला त्यहाँका बासिन्दाले यो भाषालाई पर्वते भाषा भन्दथे।[४१] गोरखालीको नेतृत्वमा नेपालको एकीकरण अभियान सञ्चालन भएको र खस कुरा उनीहरूले बोल्ने भाषा भएकोले यसलाई 'गोरखा भाषा' भन्न थालियो। यो भाषामा पाठ्यपुस्तक, ऐन, सनद, सवाल र पत्रिकासमेत छापिन थालेपछि वि.सं. १९७० मा 'गोरखा भाषा प्रकाशिनी समिति' नामक

संस्था स्थापना गरियो । यो भाषामा साहित्यको विकास हुन थालेपछि र नेपाल विश्वमा चिनिन थालेपछि गोरखा भाषालाई 'नेपाली भाषा' भन्न थालियो । साथै वि.सं. १९८९ मा गोरखा भाषा प्रकाशिनी समितिको नाम पनि परिवर्तन गरी 'नेपाली भाषा प्रकाशिनी समिति' बनाइएको हो भन्ने विद्वानहरूको भनाइ छ ।[४४]

## ३.१.२ साहित्य

शब्दार्थ अनुसार 'जीवन र जगतसँग सम्बद्ध विविध विषयमा सौन्दर्य, रूप, गुण, भावुकता आदिका दृष्टिले अभिव्यक्त हुने वा रचिने हृदयस्पर्शी लेख, ग्रन्थ आदि साहित्य हो' ।[४५] त्यसकारण जुन देशमा सभ्यताको विकास हुन्छ त्यो देशमा साहित्यको विकास भएको हुन्छ । कला र साहित्यको विकास आवश्यकता र ब्यापकताबाट हुन्छ । जहाँ जनताले बोल्ने भाषा र संस्कारको कदर भएको हुन्छ त्यहाँ साहित्यको विकास अत्यधिक मात्रामा भएको पाइन्छ । किनकि साहित्यको विकास हुन ब्यापक जनसहभागिताको आवश्यकता पर्दछ । नेपाल उपत्यकामा रहेका मल्ल राज्यहरूमा जनताले बोल्ने, सरकारी कामकाजमा प्रयोग गर्ने र साहित्य सिर्जना गर्ने एउटै भाषा थियो जसलाई 'नेपाल भाषा' भनिन्थ्यो । त्यसकारण नेपाल भाषामा प्राचीनकालदेखि नै साहित्यको विकास भएको थियो ।[४६] यसको उदाहरणको रूपमा गोपालराजवंशावलीलाई लिन सकिन्छ । त्यस्तै धवलागिरी हिमालको काखमा रहेको पर्वत राज्यमा पनि धेरैजसो जनताले बोल्ने र सरकारी कामकाजमा प्रयोग हुने 'खस भाषा' थियो भन्ने कुरा सो राज्यबाट प्रसारित अभिलेखबाट ज्ञात हुन्छ ।[४७] पर्वत राज्यका विद्वान प्रेमनिधि पन्तले संस्कृत भाषामा लेखिएको 'प्रायश्चित्त प्रदिप' भन्ने पुस्तकमा लेखिएको उपदेश साधारण जनताले पनि बुझुन भनेर वि.सं. १७८० मा खस भाषामा उल्था गरेका थिए ।[४८] यता पाल्पा राज्यमा जनताले मगर, खस, भोजपुरी र अन्य अनेकौं भाषा बोल्दथे भने सरकारी कामकाजमा संस्कृत र भोजपुरी भाषा प्रयोग भएको पाइन्छ । साथै साहित्य साधनामा संस्कृत भाषा प्रयोग गरिन्थ्यो भन्ने विद्वानहरूको भनाइ छ ।[४९] त्यसकारण सेनकालीन पाल्पामा जनसाहित्यको विकास ब्यापक रूपमा हुन सकेको देखिँदैन । लालित्यपूर्ण साहित्यको विकास कम मात्रामा भएको भएतापनि तत्कालीन आवश्यकता अनुसार जनताका आवश्यकता पूरा गर्न गरिने सरकारी कामकाज भने लिखित रूपमा गर्ने गरेको पाइन्छ जसले तत्कालीन भाषा र साहित्यको बारेमा अध्ययन गर्न सहज बनाएको छ । वास्तवमा साहित्य जनतासँग सम्बद्ध क्रियाकलापको प्रतिबिम्ब भएकोले तत्कालीन अवस्थामा आवश्यक पर्ने कागजपत्र, लेख र रचनाहरूले प्राथमिता पाएको देखिन्छ जुन कुरा सेनकालीन साहित्यको चर्चा गर्दा पनि पाउन सकिन्छ ।

सेनकालीन साहित्यको चर्चा गर्दा वि.सं. १७२३ मा लक्ष्मीनारायणले 'समयाचार', नामक ग्रन्थ तयार गरेको देखिन्छ । अमर सेनको शासनकालमा (वि.सं. १६९९-१७५०)मा तिथिको गडबडका कारण चाडबाड मनाउन अप्ठेरो परेको हुनाले गंगादास द्विवेदीले 'तिथि निर्णय' नामक ग्रन्थ तयार गरेका थिए ।[५०] पं. काशीराजले वि.सं. १७७१ मा 'गण्डकी महात्म्य' तयार गरेको पाइन्छ जसमा मुकुन्द सेन प्रथमको यश तथा कीर्तिको बयान गरिएको छ ।[५१] मुकुन्द सेन द्वितीयको समय (वि.सं.१८०९-१८३९)मा हिन्दु विधि अनुसार पूजापाठ र नित्यकर्म गर्न सजिलोहोस भन्ने हेतुले कुलनिधि शर्माले 'सुत्रार्थ दर्पण', 'कर्मकाण्ड विधि', 'कर्मकाण्ड निबन्ध', र 'नित्यकर्म प्रकाश' नामक पुस्तक तयार गरेका थिए । महादत्त सेनको शासनकाल वि.सं १८४२ मा जोतिर्विद जगन्नाथले 'रसतरंगिणी" नामक ग्रन्थ तयार गरेका थिए । त्यही समयका डम्बर सेनले वि.सं. १८४३ मा 'बाजी शालीहोत्रम्', नामक ग्रन्थ रचना गरेका थिए । यसरी नै पृथ्वीपाल सेन (वि.सं.१८५०-१८६१)ले 'प्रसाद कौमुदी', र उनका भाइ रणबहादुर सेनले 'गण्डकीस्तोत्रम्', 'तर्पण विधि', र 'ब्रह्मशब्द निर्णय', र गंगाविष्णुले 'आचार दिपक' नामक ग्रन्थ रचना गरेको पाइन्छ ।[५२] चुडामणि बन्धुले 'गण्डकीस्तोत्रम्', शंकरप्रसाद उपाध्यायले रचना गरेका हुन् भनेका छन् ।[५३] यही क्रममा रत्न सेनका सहयोगी भवदत्त पण्डितले वि.सं.१८५९ मा पाल्पा, विनायकपुर र गुल्मीका सेनको वंशवृक्षलाई आधार बनाएर तयार गरेको 'सेन वंशावली', नामक ग्रन्थको नाम आउँछ ।[५४] यी सबै ग्रन्थहरू संस्कृत भाषामा लेखिएका छन् ।

सेनकालीन पाल्पामा आम रूपमा शिक्षा दिने ब्यवस्था थिएन । साथै आम रूपमा जनताले बोल्ने बोलीचालीको भाषामा न त पढाइ नै हुन्थ्यो न त साहित्य नै सिर्जना गरिन्थ्यो । त्यसकारण सेनकालीन पाल्पामा साहित्य साधना र अध्ययनमा कम मात्र चासो भएकोले साहित्यको क्षेत्रमा कम मात्र विकास भएको पाइन्छ ।

### ३.१.३ धर्म

मध्यकालमा नेपालका बाइसी तथा चौबीसी राज्यहरूमा हिन्दु धर्मको प्रभाव बढ्दै गएको पाइन्छ । पाल्पाको सेन राज्यमा पनि त्यसको प्रभाव देखिन्छ । यस राज्यका राजाहरू हिन्दु धर्मका अनुयायी थिए भन्ने कुरा तत्कालीन समयमा निर्मित विभिन्न देवालयहरूको अध्ययनबाट थाहा हुन्छ । सेन वंशका शासकहरूले हृषीकेशलाई इष्टदेवता तथा भवानीलाई इष्टदेवी मान्दथे । त्यसकारण सेन वंशका शासकहरूले प्रसारण गरेका स्याहामोहरहरूका शिरमा 'श्री भवानी हृषीकेशौ जयत :' भन्ने वाक्य

लेखिएको पाइन्छ ।[५५] सेन राजाहरू हिन्दु धर्मका शैव, वैष्णव र शाक्त तीनवटै संप्रदायमा विश्वास राख्दथे जुन कुराको साक्षीको रूपमा रहेका तत्कालीन समयमा निर्मित देवालयहरू अद्यापि विद्यमान छन् । सेनकालीन शैव संप्रदायका देवालयहरूमा रुद्र सेनको समयमा निर्माण गरिएको प्रभासको शिवालय, मुकुन्द सेन प्रथमको समयमा निर्मित रिडीको मुकुन्देश्वर महादेव मन्दिर, उनकै समयमा निर्माण गरिएको पाल्पा भैरवको मन्दिर, नवलपरासीको सिखौली तथा देवघाटमा निर्मित शिवालय तथा महादत्त सेनको समयमा तानसेन अमरगञ्जमा निर्मित भैरव मन्दिरलाई उदाहरणका रूपमा लिन सकिन्छ । वैष्णव संप्रदायका देवालयहरू मुकुन्द सेन प्रथमद्वारा रिडीमा निर्मित हृषिकेश मन्दिर र प्रभासमा निर्मित वंशगोपालको मन्दिर हुन् । सेनकालमा शाक्त संप्रदायको पनि धेरै नै विकास भएको पाइन्छ । पाल्पाको पहाडी भेकमा बस्ने बासिन्दाहरूमध्ये खस जातिले भगवतीलाई र मगर जातिले चन्डीलाई तथा सेन वंशले भवानीलाई इष्ट देवी मान्ने भएकाले पनि त्यतिखेर शाक्त संप्रदायको  महत्व बढेको देखिन्छ । त्यसकारण सेनकालमा शैव र वैष्णव संप्रदायका मन्दिरहरूमा पनि देवीका मूर्ति राख्ने परम्परा भएको पाइन्छ । यसको उदाहरणका लागि पाल्पा भैरव मन्दिर र रिडीको ऋषिकेश मन्दिरमा राखिएका देवीका मूर्तिलाई लिन सकिन्छ । सेनकालमा निर्मित शाक्त संप्रदायको मन्दिर तानसेनको भगवती मन्दिर हो । मगरहरूले चण्डी पूजा गर्ने स्थानमा सेनकालमा प्रस्तर मूर्ति स्थापना गरी मन्दिर बनाइएको थियो । नेपाल-अङ्ग्रेज युद्धका बेला उजिरसिंह थापाले लडाईंमा विजय प्राप्त गर्ने शक्ति पाएमा ठूलो मानमनितो गर्ने छु भनी त्यही मूर्ति सामु भाकल गरेका थिए र युद्ध समाप्त भएपछि कलात्मक मन्दिर निर्माण गराउनुका साथै धातुको अठार बाहु भएको भगवतीको मूर्ति प्रतिस्थापना गरेका थिए ।[५६]

## ३.१.४ संस्कार र चाडपर्व

मनिसको जन्मदेखि मृत्युसम्म गरिने विभिन्न प्रकारका रीति-रिवाजलाई संस्कार भनिन्छ । मानिसको संस्कारलाई उसले मान्ने धर्म तथा परम्पराले असर गरेको हुन्छ । सेनकालीन पाल्पामा खस-आर्य, मगर, थारु, आर्य, बोटे, कुमाल र मुस्लिम जातिको बसोबास भएको हुनाले उनीहरूले आ-आफ्नै रीत र परम्परा अनुसारका संस्कार र चाडपर्व मनाउँदथे । तापनि सेनकालीन पाल्पामा राज्यले मुख्य रूपमा हिन्दु धर्म अनुसारको संस्कार र चाडपर्वलाई प्राथमिकता दिएको देखिन्छ । यसै उद्देश्य पूर्तिका लागि मुकुन्द सेन द्वितीयको समय (वि.सं.१८०९-१८३९) मा कुलनिधि शर्मालाई मानिसले हिन्दु धर्म अनुसार जन्मदेखि मृत्युसम्म गर्नुपर्ने संस्कार र मनाउनु पर्ने चाडपर्वको विधान

उल्लेख गरेर 'कर्मकाण्ड विधि', 'कर्मकाण्ड निबन्ध' र 'नित्यकर्म प्रकाश' नामक पुस्तक तयार गर्न लगाइएको थियो ।[५३] यसबाट सेनकालीन पाल्पाका शासकहरूले समाजलाई हिन्दुकरण गर्ने कार्यलाई प्राथमिकता दिएका थिए भन्ने देखिन्छ ।

### ३.१.५ कलाकौशल

मध्यकालमा गण्डकी प्रदेशमा स्थापित सेनकालीन पाल्पा राज्यमा कलाकौशलको क्षेत्रमा निकै धेरै विकास भएको पाइन्छ । यस क्षेत्रमा भएको विकासमध्ये वास्तुकला र मूर्तिकलाको मात्र यहाँ चर्चा गरिन्छ ।

**(१) वास्तुकला**

सेनकालीन पाल्पामा भएको वास्तुकलाको विकासलाई आवासीय वास्तुकला र धार्मिक वास्तुकला भनी वर्गीकरण गर्न सकिन्छ । आवासीय वास्तुकलाका नमुना सेनकालमा बनेका दरबारहरू हुन् । सेन राजाहरूका दरबार पाल्पा (पुरानोकोट), प्रभास, बुटवल र श्रीनगरमा बनेको कुरा ती स्थानहरूबाट प्रसारित कागजहरूबाट ज्ञात हुन्छ ।[५८] पाल्पा दरबार अर्थात् पुरानोकोटमा बनेको दरबार भैरवस्थान नजिकमा रहेको थियो । यो दरबार भग्न अवस्थामा रहेकाले यसको निर्माणमा कुँदेका ढुङ्गा, पाका इटा र झिँगटी प्रयोग भएको कुरा मात्र बताउन सकिन्छ । त्यस्तै प्रभासको दरबार पनि दरबार थुम्काको नामले मात्र जीवित छ अन्य कुनै आकृति प्राप्त हुन सकेको छैन ।[५९] बुटवल फूलवारीमा बनेको रङ्गमहल विनायक सेनको समयमा निर्माण भएको अनुमान गरिएको छ । विद्वानहरूले यो दरबार मुगल शैलीमा निर्माण भएको कुरा सो दरबारको बाँकी रहेको उत्तरतर्फको भित्ताको अध्ययनबाट थाहा हुन्छ भनेका छन् ।[६०] पाल्पा पुरानोकोटमा रहेको दरबारमा आगलागी भएपछि महादत्त सेनले वि.सं. १८४२ मा श्रीनगरमा दरबार निर्माण गरेका थिए । यो दरबारको निर्माणमा कुँदेका ढुङ्गा, पाका इटा, टायल, झिँगटी, काठ र माटो प्रयोग भएको थियो ।[६१]

सेनकालीन धार्मिक वास्तुकलाका नमुनामा भैरवस्थान मन्दिर, देवघाटको मुनि मुकुन्द सेन मन्दिर, रिडीको मुकुन्देश्वर शिवालय र हृषिकेश मन्दिर, प्रभासको शिवालयलाई लिन सकिन्छ । यी मन्दिरहरूको निर्माण शैलीलाई हेर्दा वास्तुकलाको विविधता पाइन्छ । यी मन्दिरहरूमध्ये रिडीको मुकुन्देश्वर शिवालय, देवघाटको मुनि मुकुन्द सेन मन्दिर गुम्बज शैलीमा तथा प्रभासको शिवालय र हृषिकेश मन्दिर गुम्बज र शिखर दुवै शैली मिश्रित गरेर बनाइएको छ भने भैरवस्थान मन्दिर तले शैलीमा निर्माण गरिएको छ ।[६२]

(२) मूर्तिकला

सेनकालीन पाल्पामा प्रस्तर मूर्तिकलाको अधिक मात्रामा विकास भएको पाइन्छ। त्यतिखेर चिल्लो कालो ढुङ्गालाई मिहिन तरिकाले कुँदेर मूर्ति बनाउने चलन भएको पाइन्छ। यस प्रकारका वैष्णव मूर्तिहरूका उदाहरणको रूपमा रिडीको हृषिकेश मूर्ति, देवघाटको विष्णु मूर्ति, प्रभासको विष्णु मूर्ति र पाल्पा नुवाकोटको विष्णु मूर्तिलाई लिन सकिन्छ।[६३] सेनकालीन शाक्त संप्रदायका मूर्तिहरूमा तानसेनको भगवती मन्दिरमा रहेको प्रस्तर मूर्ति कलात्मक छ। यो मूर्ति कालो चिल्लो ढुङ्गालाई मिहिन तरिकाले कुँदेर बनाइएको छ। यसमा भगवतीका अठार भुजा र प्रत्येक हातमा आयुध धारण गरेको देखाइएको छ।[६४] सेनकालीन पाल्पामा स्थापित भैरव मूर्ति मध्ये पाल्पा भैरवस्थान र तानसेन अमरगञ्ज स्थापित धातुका भैरव मूर्ति उल्लेखनीय छन्। पाल्पा भैरवस्थानमा काठमाडौंबाट ल्याइएको काल भैरवको मूर्ति दर्शनार्थीका लागि खुला गरिएको छैन। मन्दिरको माथि तलामा राखिएको मूर्ति चाँदीको भैरवको मुकुण्डो आकारको छ। तानसेनको अमरगञ्जमा रहेको बटुक भैरवको मूर्ति तामाको भैरवको मुकुण्डो आकारको छ।[६५] यसबाट के थाहा हुन्छ भने सेनकालमा अत्यधिक मात्रामा प्रस्तर मूर्ति कलाको विकास भएको भएतापनि केही मात्रामा धातु मूर्तिकलाको पनि विकास भएको थियो ।

४. निष्कर्ष

मध्यकालमा गण्डकी प्रदेशमा स्थापित चौबिसी राज्यमध्ये पाल्पा पनि एक थियो। यो राज्यमा वि.सं.१५५० देखि १८६१ सम्म सेन वंशका शासकहरूले शासन गरेको हुनाले सो समयको पाल्पा क्षेत्रलाई सेनकालीन पाल्पा पनि भनिन्छ। यो राज्यको भूभाग बेलाबखतमा फैलिने र खुम्चिने गरेको पाइन्छ तापनि यो राज्यको भौगोलिक क्षेत्र पूर्वमा देवघाट, पश्चिममा रिडी, उत्तरमा कालीगण्डकी र दक्षिणमा गोरखपुरसम्मको इलाका भने सेन वंशका प्रख्यात राजा मुकुन्द सेन प्रथमको पालादेखि सो वंशका अन्तिम राजा पृथ्वीपाल सेनको पालासम्म अकण्टक रूपमा रहेको पाइन्छ।

पाल्पा राज्यको पहाडी इलाकामा मगर, खस-आर्य, बोटे, कुमाल र मुस्लिम तथा तराई इलाकामा वैदिक-आर्य र थारु जातिका मानिसको बसोबास भएको देखिन्छ। त्यसकारण सेनकालीन पाल्पाका बासिन्दाको बोलीचालीको भाषा मगर ढुट, खसकुरा, भोजपुरी, बोटे, कुमाल, थारु र उर्दु भएको पाइन्छ। तापनि पहाडमा मगर र खस-आर्य तथा तराईमा वैदिक-आर्य र थारु जातिको प्रभाव बढी पाइएकोले पहाडी इलाकामा मगर ढुट र खस कुरा तथा तराई इलाकामा भोजपुरी भाषाको प्रभाव बढी भएको

पाइन्छ ।

सेनकालीन पाल्पामा सरकारी कामकाजमा संस्कृत र भोजपुरी भाषा प्रयोग गरिन्थ्यो भने साहित्य सिर्जना गर्दा संस्कृत भाषा प्रयोग गरिन्थ्यो भन्ने कुरा माथिका उदाहरणहरूबाट स्पष्ट भइसकेको छ । त्यतिखेर शिक्षित मानिसहरूको कमी भएको र साहित्य सिर्जना गर्न संस्कृत भाषा जानेको हुनुपर्ने कारणले पनि साहित्य सिर्जनामा मानिसहरूको ध्यान कम गएको हुन सक्दछ । सेनकालीन शासकहरूले मुख्य रूपमा हिन्दु धर्मलाई प्राथमिकता दिएको कुरा तत्कालीन समयमा निर्माण गरिएका देवालय र स्थापना गरिएका देवदेवीका मूर्तिबाट स्पष्ट हुन्छ । साथै राज्यले हिन्दु धर्म अनुसारको रीत, परम्परा र चाडपर्व मनाउनका लागि सजिलोहोस भन्ने हेतुले सो धर्म अनुसारको कर्मकाण्ड विधि तयार गर्नुले पनि सेनवंशी शासकहरूले समाजलाई हिन्दुकरण गर्ने कार्यलाई प्राथमिकता दिएको देखिन्छ । यसबाट के स्पष्ट हुन्छ भने सेनकालीन पाल्पामा विविध जातिको बसोबास भएको र तिनीहरूका आ-आफ्नै किसिमका संस्कृति भएको भएतापनि राज्यको तर्फबाट हिन्दु धर्म र संस्कृतिलाई नै बढी महत्व दिइएको थियो ।

**टिप्पणी**

१ टेकबहादुर श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रूपरेखा**, कीर्तिपुर : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५९, पृ. १५ ।

२ कर्णबहादुर बानियाँ क्षत्री, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पब्लिकेशन एण्ड डिष्ट्रिब्यूसन प्रा.लि., वि.सं. २०६३, पृ.१४-१८ ।

३ बालकृष्ण पोखरेल र अन्य (सम्पा.), **नेपाली बृहत् शब्दकोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि. सं. २०४०, पृ. १२८० ।

४ जोहन स्कट एण्ड गोर्डन मार्शल (सम्पा.), **अक्सफोर्ड डिक्सनरी अफ सोशियोलोजी**, न्यू योर्क : अक्सफोर्ड युनिभर्सिटी प्रेस, सन् २००५, पृ.१३२-३३ ।

५ "कल्चर", ए.एस.हर्नवाई र अन्य (सम्पा.), **अक्सफोर्ड एडभान्स्ड डिक्सनरी अफ करेन्ट इङ्गलिस**, सी डी रोम, एट्थ एडिसन, न्यू योर्क : अक्सफोर्ड युनिभर्सिटी प्रेस, सन् २०१० ।

६ "ट्राइब", उही ।

७ "नेशन", उही ।

८ **द न्यू इन्साइक्लोपेडिया ब्रिटानिका**, भोलुम ६, सिकागो : इन्साइक्लोपेयिा ब्रिटानिका इङ्क, सन् १९७५, पृ.३२ ।

९ उही, भोलुम ३, पृ. ९८० ।

१० महेशराज पन्त र ऐश्वर्यधर शर्मा, **द टु अर्लिस्ट कपर प्लेट इन्स्क्रीप्सन फ्रम नेपाल**, काठमाण्डु

: नेपाल रिसर्च सेन्टर, सन् १९७७, पृ. ६,७ र २१ ।

११ चित्तरञ्जन नेपाली, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३५, पृ.१४४ ।

१२ फ्रान्सिस् बुचानन् हेमिल्टन, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल**, (रिप्रिन्ट), न्यू दिल्ली : एसियन एजुकेशनल सर्भिस, सन् १९८६, पृ.२७ र १७८ ।

१३ ब्रेन हुटन हड्सन, **एस्सेज अन द ल्याङ्गेज, लिटेरेचर एण्ड रिलिजन अफ नेपाल एण्ड तिब्बत**, पार्ट-२, (रिप्रिन्ट), न्यू दिल्ली : मञ्जुश्री पब्लिसिङ हाउस, सन् १९७२, पृ.४० ।

१४ http: // : wiki / magar

१५ उही ।

१६ सूर्यबहादुर जी.सी., "पाल्पाको मगर संस्कृति" त्रि.वि.मानविकी तथा सामाजिकशास्त्र संकाय डीनको कार्यालय कीर्तिपुरमा पेश गरेको शोधप्रबन्ध, वि.सं.२०६७, पृ.७९-८५ ।

१७ धनबज्र बज्राचार्य र कमलप्रकाश मल्ल, **द गोपालराजवंशावली**, काठमाण्डु : नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स, सन् १९८५, पृ. ८२ ।

१८ इड्विन टी. एट्किन्सन्, **कुमाउ हिल्स**, दिल्ली : कस्मो पब्लिकेशन्स,सन् १९७४,पृ.३८० र ३९७ ।

१९ सूर्यमणि अधिकारी, **द खश किंगडम**, जयपुर : निराला पब्लिकेशन्स, सन् १९८८, पृ. ४३ ।

२० बज्राचार्य र अन्य, (सम्पा.), **इतिहास संशोधनको प्रमाण प्रमेय**, पहिलो भाग, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०१९, पृ.१८१ ।

२१ विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पदमा घिमिरे, वि.सं. २०४५, पृ. ११४-१५ र १८५-२३२ ।

२२ हड्सन, **पूर्ववत्**, टि. नं. १३, पृ.१-२ ।

२३ बालकृष्ण पोखरेल, **नेपाली भाषा र साहित्य**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०२५, पृ.२९ ।

२४ ग्रियर्सन,जी.ए., **लिङ्ग्वुएस्टिक सर्भे अफ इण्डिया**, भोलुम १९, पार्ट ४, कलकत्ता : सन् १९१६, पृ. १८ ।

२५ हेमिल्टन, **पूर्ववत्**, टि. नं. १२, पृ.१७१-७२ र २३९ ।

२६ दिपक चौधरी, **नेपालको मधेसी समाज**, काठमाडौं: रत्न पुस्तक भण्डार, वि.सं.२०६५,पृ.३२-३६ ।

२७ चूडामणि बन्धु, **नेपाली भाषाको उत्पत्ति**, (पाँचौं संस्करण), काठमाडौं : साझा प्रकाशन, वि.सं. २०५२, पृ.१९४-९६ ।

२८ चौधरी, **पूर्ववत्**, टि. नं. २६, पृ.१६० ।

२९ धीरेन्द वर्मा,, **हिंदीभाषा का इतिहास**, इलाहावाद : हिन्दुस्तानी एकेडेमी, सन् १९८८, पृ.५७ ।

३० घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.११४-१५ ।

३१ चूडामणि उपाध्याय रेग्मी, **नेपाली भाषाको उत्पत्ति**, काठमाडौं : साझा प्रकाशन, वि.सं. २०४७, पृ.४७ ।

३२ बन्धु, **पूर्ववत्**, टि. नं. २७, पृ.३५-४२ ।

३३ आ.सी. मजुमदार, एण्ड एट.अल., **एन एड्भान्स्ड हिस्ट्री अफ इण्डिया**, मद्रास : एस.जी. वासानी फर म्याकमिलन इण्डिया लिमिटेड, सन् १९८८, पृ.५४ ।

३४ सूर्यमणि अधिकारी, **नेपाली भाषाको इतिहास**, काठमाडौं : भुँडीपुराण प्रकाशन, वि.सं.२०५६,.पृ.६४ । (मातृभाषा अवधी भएका कपिलवस्तु निवासी अङ्ग्रेजी विषयका विद्वान श्री बालजी श्रीवास्तव, मातृभाषा भोजपुरी भएका महाराजगञ्ज उत्तरप्रदेश निवासी अङ्ग्रेजी विषयका विद्वान श्री शिवकुमार मिश्र र मातृभाषा थारु भएका रुपन्देही निवासी विद्वान श्री अशोककुमार चौधरीसँग मिति २०६८ फागुन १०–१५ मा विष्णुप्रसाद घिमिरेद्वारा लिखित **पाल्पा राज्यको इतिहास** भाग १ नामक पुस्तकको पृ.१८५ देखि २३२ सम्ममा प्रकाशित अभिलेखहरूमा प्रयोग भएको भाषाका विषयमा छलफल गरिएको थियो । उहाँहरूको भनाइ अनुसार ती अभिलेखहरूमा भोजपुरी भाषा प्रयोग भएको छ । यो पुस्तकका लेखकले पनि यसलाई परिमार्जन गरी पुन : प्रकाशन गर्दा यस पुस्तकमा प्रकाशित अभिलेखहरूमा अवधि र भोजपुरी भाषा प्रयोग भएको कुरा उल्लेख गरेका छन्- विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पदमा घिमिरे, वि.सं.२०६९, पृ. १८६) ।

३५ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.१८७-८८ ।

३६ हेमिल्टन, **पूर्ववत्**, टि. नं. १२, पृ.१३०-३१ ।

३७ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.३९ ।

३८ हेमिल्टन, **पूर्ववत्**, टि. नं. १२, पृ.१७७ ।

३९ वर्मा, **पूर्ववत्**, टि. नं. २९, पृ.५७ ।

४० घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.२०९ ।

४१ **उही**, पृ.२३०-३१ ।

४२ **उही**, पृ.२३५ ।

४३ हेमिल्टन, **पूर्ववत्**, टि. नं. १२, पृ.१६ ।

४४ गोपीनाथ शर्मा, **नेपालको शैक्षिक इतिहास**, काठमाडौं : लुम्बिनी पुस्तक भण्डार, वि.सं.२०५७, पृ.८२-८४ ।

४५ पोखरेल र अन्य, **पूर्ववत्**, टि. नं. ३, पृ.१३४२ ।

४६ बन्धु, **पूर्ववत्**, टि. नं. २७, पृ.१८४ ।

४७ श्रेष्ठ, **पूर्ववत्**, टि. नं. १, पृ.१३९-४० ।

४८ बालकृष्ण पोखरेल, **पाँच सय वर्ष**, (तस्रो पटक), ललितपुर : साझा प्रकाशन, वि.सं. २०५०, पृ. १०५-१०७ ।

४९ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.१२४ ।

५० **उही**, पृ.१२३-२८ ।

५१ सूब सेन, **पालपाली सेन (पालपादेखि पुरकोटसम्म)**, काठमाडौं : खडग सेन ओली, वि.सं. २०५९, पृ. १२-१३ ।

५२ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.१२३-२६ ।

५३ चूडामणि बन्धु, **नेपाली साहित्यको इतिहास**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०६०, पृ.१३९ ।

५४ शंकरमान राजवंशी (सम्पा.), **सेन वंशावली**, काठमाडौं : श्री ५ को सरकार, पुरातत्व र संस्कृति विभाग, वि.सं. २०२०, पृ. क-ख ।

५५ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.१८५-२३२ ।

५६ कर्णबहादुर बानियाँ, **पाल्पाको भगवती जात्रा**, तानसेन : श्रेष्ठ पुस्तक भण्डार, वि.सं.२०५३,पृ. ६ ।

५७ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.११६-१७ ।

५८ उही, पृ.१८५-२३२ ।

५९ उही, पृ.१५२ ।

६० डिल्लीराज शर्मा, **नेपालको किल्ला वास्तुकला**, काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५५, पृ.६८-६९ ।

६१ घिमिरे, **पूर्ववत्**, टि. नं. २१, पृ.१५२-५३ ।

६२ डिल्लीराज शर्मा, **गण्डकीप्रस्रवण क्षेत्रको सांस्कृतिक सम्पदा : कला र वास्तुकला**, काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०६०, पृ.८४-१०४ ।

६३ उही, पृ.२२-२३ ।

६४ स्थलगत अवलोकन ।

६५ स्थलगत अवलोकन ।

# १२. पाल्पामा शिक्षा र साहित्यको विकास: एक ऐतिहासिक सर्वेक्षण

## १. विषय प्रवेश

शिक्षा र साहित्यको विकासको दृष्टिले पश्चिम नेपालमा पाल्पाको अग्रणी स्थान रहेको पाइन्छ। यहाँ प्राचीनकालदेखि नै शिक्षा र साहित्यको क्षेत्रमा उन्नति भएको देखिन्छ। पाल्पामा शिक्षा र साहित्यको विकास कसरी हुँदै आयो र यो क्षेत्रमा आम जनताको पहुँच कहिलेदेखि भयो भन्ने विषयमा जिज्ञासा लाग्नु स्वभाविकै हो। अतः यो लेखमा त्यस विषयमा चर्चा गर्न थालिएको छ। त्यसका लागि प्राचीनकालदेखि आधुनिककालको वि.सं.२०२२ सम्म अर्थात् पाल्पा गौंडाको अस्तित्व छउञ्जेलको अवधीमा पाल्पामा शिक्षा र साहित्यमा भएको विकास बारे चर्चा गरिने छ।

## २. पाल्पामा शिक्षाको विकास

नेपालमा प्राचीनकालमा धर्म ग्रन्थहरू र दर्शनमा आधारित शिक्षा दिइन्थ्यो। शिक्षा आर्जनका लागि कुनै सार्वजनिक विद्यालय थिएनन्। गुरुकुलमा पढाउने परम्परा थियो। हिन्दूहरूमा यस किसिमको शिक्षा आर्जन गर्ने सुविधा उच्च जाति जस्तै ब्राह्मण, क्षत्री र केही वैश्यलाई मात्र थियो। शुद्रहरू शिक्षा लिने अवसरबाट वञ्चित थिए।[१] बौद्धहरूमा भने यस किसिमको भेदभाव थिएन। महिला, पुरुष र जुनसुकै जातका मानिसहरूले शिक्षा लिन सक्दथे। बौद्ध धर्म र दर्शनका ज्ञाता भिक्षुहरू भएकोले शिक्षा प्रदान गर्ने अधिकार पनि उनीहरूलाई नै थियो। बौद्ध विहार, बहाल, मठ र भिक्षुहरूको संघमा बौद्ध शिक्षा दिइन्थ्यो।[२]

मध्यकालमा शिक्षा सर्वसुलभ थिएन तापनि उच्च वर्गका मानिसहरूलाई शिक्षा लिने अवसर प्राप्त थियो। काठमाडौं उपत्यकामा रहेका मल्ल राज्यहरू, कर्णाली प्रदेशको खस राज्य र बाइसी, चौबिसी राज्यहरूका राजा, रजौटा, युवराज, राजकुमार आदि सबै शिक्षित हुन्थे। उनीहरूको शिक्षादिक्षाको लागि हिन्दू र बौद्ध गुरु, पुरोहित र भिक्षुहरू खटिएका हुन्थे।[३]

आधुनिककालको प्रारम्भमा पनि उच्च वर्गका मानिसहरूले मात्र शिक्षा आर्जन गर्ने सुविधा पाएका थिए; निम्न वर्गका मानिसहरू उक्त सुविधाबाट वञ्चित थिए। नेपालका अन्य क्षेत्रमा जस्तै पाल्पामा पनि राणा शासनकालको पूर्वाद्धसम्म कुनै

किसिमको संस्थागत शिक्षाको व्यवस्था थिएन । उच्च वर्गका मानिसहरूका लागि भने गुरुकुल शिक्षाको व्यवस्था गरिन्थ्यो भन्ने कुरा वि.सं. १९४८ सालतिर पाल्पा गौंडाका प्रशासक खड्ग शमशेरले अर्घाखाँचीका पण्डित ढुण्डिराज पोखरेललाई तानसेनमा बोलाई आफ्ना छोरा भतिजालाई शिक्षादिक्षा दिने व्यवस्था मिलाउनु जस्ता कार्यबाट स्पष्ट हुन्छ ।[४]

२.१ पाल्पामा संस्थागत शिक्षाको विकास

नेपालमा संस्थागत शिक्षाको विकास हुन थालेपछि पाल्पामा पनि संस्कृत पाठशाला स्थापना हुन थालेको पाइन्छ । यस क्षेत्रमा सरकारी तवरबाट स्थापना गरिएका संस्कृत पाठशाला मध्ये रिडीको संस्कृत पाठशाला सबैभन्दा पहिलो मानिन्छ जसको स्थापना वि.सं. १९६६ सालमा भएको थियो । यो पाठशाला हृषिकेश मन्दिरको सत्तल सञ्चालनका लागि राखिएको सदावर्त गुठीको आयस्ताबाट सञ्चालन गर्ने व्यवस्था मिलाइएको थियो ।[५] त्यसपछि वि.सं. १९६९ मा पाल्पा गौंडाको सदरमुकाम तानसेनमा पनि एक संस्कृत पाठशाला स्थापना गरिएको पाइन्छ ।[६]

यस क्षेत्रमा संस्कृत शिक्षाको विकास गराउनमा निजी स्तरमा खोलिएका पाठशालाहरूको पनि महत्त्वपूर्ण योगदान छ । यसरी खोलिएका विद्यालयहरू मध्ये अर्घाखाँचीको खिदिममा हरिहर गौतमले वि.सं. १९८१ मा स्थापना गरेको संस्कृत पाठशाला एक हो ।[७] त्यस्तै पूर्वी पाल्पाको हुंगीमा सरदार उमादेव पन्तद्वारा वि.सं. १९९१ मा अर्को संस्कृत पाठशाला स्थापना भएको पाइन्छ ।[८] संस्कृत शिक्षाको जगेर्ना गर्ने उद्देश्यले वि.सं. २००९ मा तानसेनको अमरनारायण मन्दिरको पेटीमा अध्यापन गराउने गरी देववाणि विद्यालय स्थापना भएको थियो ।[९] तर संस्कृत शिक्षा ब्राह्मणहरूका लागि मात्र दिइने हुँदा आम जनता यस्तो शिक्षाबाट वञ्चित रहेको पाइन्छ ।

भाषा पाठशाला

देव शमशेर प्रधानमन्त्री भएपछि उनले नेपाली भाषाको विकास गराउने उद्देश्यले भाषा पाठशाला स्थापना गरेका थिए जुन कार्यमा जयपृथ्वीबहादुर सिंहले उनलाई सहयोग गरेका थिए ।[१०] त्यसपछि जनसाधारणलाई शिक्षा दिने उद्देश्यले नेपालका विभिन्न स्थानमा भाषा पाठशाला खोलिएको भएतापनि मर्स्यांदीदेखि पश्चिमको क्षेत्रमा त्यस्ता पाठशालाहरू नभएको हुँदा त्यहाँका साधारण जनता अशिक्षित थिए । त्यसकारण अङ्ग्रेजहरूले त्यो क्षेत्रबाट आफ्नो फौजमा भर्ती गर्ने नेपालीलाई आफैले शिक्षा

दिनुपर्दथ्यो ।[११] यसरी शिक्षा दिंदा समय र पूंजी बढी लाग्ने भएकोले ब्रिटिश सरकारले प्रथम विश्वयुद्धताक ब्रिटिश गोरखा सैनिकमा भर्ती हुन चाहने नेपालीलाई साक्षर हुनुपर्ने प्रावधान राख्यो । त्यसकारण नेपालका प्रधानमन्त्री चन्द्र शमशेरले नेपालको पश्चिमी क्षेत्रमा भाषा पाठशाला खोल्ने व्यवस्था मिलाए ।[१२] यसै सिलसिलमा पाल्पा गौंडाको प्रशासनिक क्षेत्रमा पर्ने बाग्लुङ चौरमा वि.सं. १९७६ मा एक भाषा पाठशाला स्थापना भएको देखिन्छ ।[१३] त्यसपछि वि.सं. १९८२ सम्ममा पाल्पा गौंडा अन्तर्गतका बाग्लुङ इलाकामा पर्ने भीमपोखरा तथा गुल्मी इलाकामा पर्ने सियालडाँडा, भुर्तुङ, बलकोट, खाँची रजस्थल र अर्घा रजस्थलमा पनि भाषा पाठशाला स्थापना भएको पाइन्छ ।[१४] यही क्रममा तानसेनको संस्कृत पाठशाला पनि वि.सं. १९८२ मा भाषा पाठशालामा परिणत गरिएको देखिन्छ ।[१५]

गुल्मीको भार्सेबाट ब्रिटिश गोरखा सैनिकमा धेरै मानिसहरू भर्ती हुने गरेका थिए । उक्त सेनामा भर्ती हुन साक्षर हुनु पर्ने बाध्यता भएपछि सो गाउँमा जनताहरूको सक्रियतामा वि.सं. १९९३ सालमा निजी तवरबाट एक भाषा पाठशाला स्थापना गरिएको पाइन्छ ।[१६]

**आधुनिक शिक्षाका विद्यालयहरू**

नेपालमा आधुनिक शिक्षा दिने कार्य अङ्ग्रेजी शिक्षाका विद्यालयहरूको स्थापनापछि प्रारम्भ भएको मानिन्छ । नेपालको एकीकरणपछि अङ्ग्रेजहरूसँगको सम्बन्ध बढ्दै गएको हुनाले नेपालका शासकहरूले अङ्ग्रेजी शिक्षाको आवश्यकता बोध गर्दै जान थालेका थिए । तसर्थ रणबहादुर शाहको शासनकालदेखि नै नेपालका केही भारदारहरूले आफ्ना छोराहरूलाई विदेशमा पठाएर भएपनि अङ्ग्रेजी शिक्षा दिन थालेको देखिन्छ ।[१७] नेपालमा अङ्ग्रेजी शिक्षाको विद्यालय स्थापना गर्ने श्रेय भने जङ्गबहादुर राणाले पाएका छन् । उनले बेलायतको यात्रा गर्दा त्यहाँको शिक्षा प्रणालीबाट प्रभावित भएर नेपालमा फर्केपछि आफ्ना छोरा भतिजाहरूलाई अङ्ग्रेजी शिक्षा दिन वि.सं. १९१० मा थापाथली दरबारमा एक स्कूल स्थापना गरेका थिए ।[१८] यसरी राणा शासनकालको प्रारम्भमा नै नेपालमा अङ्ग्रेजी शिक्षा प्रणालीको शुरुवात भएको भएतापनि पाल्पामा भने राणा शासनको अन्तिम समयतिर मात्र अङ्ग्रेजी शिक्षाका विद्यालय स्थापना गर्न प्रारम्भ भएको पाइन्छ । यो क्षेत्रमा वि.सं.२००४ साल वैशाख १ गते मात्र सर्वप्रथम अङ्ग्रेजी शिक्षा दिने पद्मोदय पाल्पा पब्लिक हाइ स्कूल स्थापना भएको थियो ।[१९] त्यसपछि वि.सं. २००७ साल भाद्र १६ गते मोहन

कन्या स्कूल स्थापना भएको थियो ।[२०] नेपालमा प्रजातन्त्रको स्थापना भएपछि मुलुकका अन्य क्षेत्रहरूमा जस्तै पाल्पामा पनि शैक्षिक जागरण आएको देखिन्छ । वि.सं.२००९ सालपछि गुल्मी र बाग्लुङ जिल्ला पाल्पाको प्रशासनिक क्षेत्राधिकारबाट अलग भएको हुनाले उक्त समयपछि सो क्षेत्रमा भएको शैक्षिक विकास बारे यहाँ उल्लेख गरिएको छैन । प्रजातन्त्रको उदयपछि सर्वप्रथम तानसेनमा वि.सं. २००८ सालमा जनता विद्यालय स्थापना भएको थियो ।[२१] सदर मुकाममा मात्र विद्यालय भएर गाउँका जनताले पढ्न नपाउने कुरा महसुस गरी भैरवस्थान भन्ने गाउँमा पनि वि.सं. २००९ सालमा भैरव जनता स्कूल स्थापना भयो ।[२२]

पाल्पा र यसको आसपासका क्षेत्रमा माध्यमिक तहका विद्यालयहरू स्थापना गर्ने लहर चलेतापनि उच्च शिक्षा अध्ययन गर्ने सुविधा भने यो क्षेत्रमा थिएन । यही कुरा महसुस गरेर वि.सं. २०११ साल आषाढ २५ गते तानसेनमा त्रिभुवन इन्टर कलेज स्थापना गरिएको थियो ।[२३] शुरुमा यो कलेजमा कला विषयमा प्रमाणपत्र स्तर सम्मको पढाइ हुने गरेकोमा वि.स. २०१६ सालदेखि स्नातक स्तरको अध्यापन गराउने व्यवस्था भएको पाइन्छ ।[२४] पाल्पामा विभिन्न विद्यालयहरू स्थापना हुँदै गएको भएतापनि सबै विद्यालयहरू दिउँसो सञ्चालन हुने हुँदा कैयौं युवाहरूले दिनभर काम गर्नु पर्दा शिक्षाको उज्यालो देख्न पाएका थिएनन् । यही कुरा महसुस गरेर तानसेनमा वि.सं. २०१९ सालमा महेन्द्र रात्री हाई स्कूल स्थापना गरिएको देखिन्छ ।[२५]

यसरी विद्यालयहरू स्थापना गर्ने सिलसिलामा वि.सं. २०२५ सम्ममा पाल्पामा त्रिभुवन डिग्री कलेज नामक एक कलेज, छ वटा हाई स्कूल, सातवटा मिडिल स्कूल, देववाणि संस्कृत विद्यालय नामक एक संस्कृत विद्यालय र थुप्रै प्राथमिक विद्यालयहरू स्थापना भएको पाइन्छ ।[२६] ती मध्ये मुख्य मुख्य निम्न अनुसार छन् :

**हाई स्कूलहरू :** (१) पदमोदय पाल्पा पब्लिक हाई स्कूल, तानसेन (२) मोहनकन्या हाई स्कूल, तानसेन (३) जनता हाईस्कूल, तानसेन (४) भैरवजनता हाई स्कूल, भैरवस्थान (५) सौभाग्य हाई स्कूल, चिदीपानी (६) महेन्द्र रात्री हाईस्कूल, तानसेन ।

**मिडिल स्कूलहरू :** (१) जनकल्याण मिडिल स्कूल, ढूलाहुँगी (२) रम्भा मिडिल स्कूल, ताहुँ (३) उद्बुद्ध मिडिल स्कूल, पूर्वखोला (४) कृष्ण मिडिल स्कूल, दर्लमडाँडा (५) शारदा मिडिल स्कूल, मदनपोखरा (६) विष्णु मिडिल स्कूल, पोखराथोक (७) किसान मिडिल स्कूल, झडेवा ।

माथिको विवरणबाट के स्पष्ट हुन्छ भने पाल्पाको शैक्षिक विकासको केन्द्र तानसेन थियो । पाल्पामा कलेज, हाईस्कूल, मिडिल स्कूल, संस्कृत विद्यालय र प्राथमिक तहका अन्य विद्यालयहरू पनि सञ्चालन भएकोमा धेरैजसो तानसेनमा नै केन्द्रित थिए ।

## २.२ पुस्तकालयहरूको स्थापना

चेतनशील मानवले नै समाजको सर्वांगीण विकासमा टेवा पुऱ्याउन सक्दछ भन्ने भावनालाई आत्मसात गरी ज्ञानार्जनद्वारा चेतना बृद्धि गर्ने उद्देश्यले मुलुकका विभिन्न स्थानहरूमा जस्तै पाल्पामा पनि राणा शासनकालदेखि नै पुस्तकालय स्थापना गर्न शुरु गरेको पाइन्छ । पाल्पामा स्थापना गरिएका पुस्तकालयहरूको छोटकरी परिचय तल दिइन्छ ।

### पुस्तक पढ्ने दलान

पाल्पा तानसेनका केही उत्साही युवाहरू मिलेर वि.सं. १९८३ मा तानसेन ठाडो गल्लीमा रहेको अम्बिकाप्रसाद लाकौलको घरको दलानमा एक वाचनालय स्थापना गरेका थिए जसको नाम 'पुस्तक पढ्ने दलान' राखिएको थियो । संस्थापनको एक वर्षपछि संस्थापकहरूले यसको वार्षिक उत्सव समेत मनाएका थिए तर त्यसपछि सो पुस्तकालय सञ्चालन हुन सकेन । त्यतिखेर गौंडाका तैनाथवालाहरूको स्वीकृति बिना पुस्तकालय खोल्नु र मानिसहरू जमघट गराइ भाषण गर्नु राणा शासन विरोधी क्रियाकलाप मानिन्थ्यो । त्यसकारण पाल्पा गौंडाका तत्कालीन तैनाथवाला जनरल प्रताप शमशेरले पुस्तक पढ्ने दलानका संस्थापकहरूलाई सो पुस्तकालय बन्द गर्नु भन्ने आदेश दिए जसका कारण उक्त पुस्तकालय सञ्चालन हुन सकेन ।[२७]

### धवल पुस्तकालय

पुस्तक पढ्ने दलानमाथि लगाइएको प्रतिबन्धले पाल्पाली युवाहरू केही हतोत्साहित भएतापनि उनीहरूमा पुस्तकालय स्थापना गरी ज्ञानको ज्योति बाल्ने उत्साह समाप्त भएको थिएन । त्यसकारण तानसेनको टक्सार टोलमा रहेको कृष्णप्रसाद राजलवटको घरमा वि.सं. २००३ सालको कोजाग्रत पूर्णिमाको दिनमा 'धवल पुस्तकालय' को स्थापना भयो । वि.सं. २००५ मा मेहलधारा निवासी धनेश्वरादेवी नेपालले आफ्ना पतिको सम्झनामा जग्गा प्रदान गरेपछि त्यही ठाउँमा यो पुस्तकालयको स्थायी भवन निर्माण भयो ।[२८]

यस पुस्तकालयको स्थापनाले पाल्पाली युवाहरूमा शैक्षिक जागरणका साथै राजनैतिक चेतना समेत प्रदान गरेको पाइन्छ ।

### अन्य पुस्तकालयहरू

राणा शासनको पतनपछि जसरी विभिन्न विद्यालयहरू खोल्ने लहर चल्यो त्यसरी नै पुस्तकालय खोल्ने लहर पनि चलेको पाइन्छ । यसै सिलसिलामा वि.सं. २००८ सालमा तानसेनको टक्सार टोलको महाचैत्य विहारमा 'शहीद पद्मजंग लाइब्रेरी' स्थापना गरिएको थियो । आर्थिक समस्याले गर्दा वि.सं. २०१३ मा यो पुस्तकालय बन्द भयो । त्यस्तै तानसेनका उत्साही युवाहरू चेतबहादुर कुँवर, केदारलाल श्रेष्ठ र हरिबहादुर कुँवरको सक्रियतामा वि.सं. २०११ सालमा 'बालसेवा पुस्तकालय' स्थापना गरिएको थियो । साना साना बालबालिकाहरूलाई शिक्षा दिने अभिप्रायले स्थापना भएको यो पुस्तकालय वि.सं. २०१९ सालसम्म सञ्चालन भएर बन्द भयो । यसरी नै डा. महेन्द्रप्रसाद प्रधानले वि.सं. २०१५ मा आफ्नै घरमा स्थापना गरेको 'श्री ५ महेन्द्र वाचनालय' पनि तीन वर्ष मात्र सञ्चालन भएर बन्द भयो ।[२९] यसै प्रकारले तानसेनमा 'नेपाल भारत सांस्कृतिक केन्द्र' द्वारा एक पुस्तकालय स्थापना गरिएको देखिन्छ तर सो पुस्तकालय कहिले स्थापना भयो र कहिलेसम्म सञ्चालन भयो भन्ने कुरा यकिन हुन सकेको छैन । पाल्पाको पूर्वी क्षेत्र हुँगीमा वि.सं. २०१८ सालमा स्थापना भएको 'वीरेन्द्र पुस्तकालय' पनि कहिले सम्म सञ्चालन भयो भन्ने कुरा थाहा हुन सकेको छैन ।[३०]

## ३. पाल्पामा साहित्यको विकास

पाल्पा विभिन्न जातिका मानिसहरूको बसोवास भएको भएतापनि यहाँ संस्कृत र नेपाली भाषामा मात्र साहित्यको विकास भएको पाइन्छ । साहित्यको विकासमा विचार स्वतन्त्रताको प्रमुख स्थान रहने हुनाले प्रजातन्त्रको उदय पूर्व पाल्पामा साहित्यको विकास थोरै मात्रामा भएको देखिन्छ भने प्रजातन्त्रको स्थापना पश्चात यो क्षेत्रमा शिक्षाको विकासमा जुन किसिमको लहर चल्यो त्यसरी नै साहित्यको पनि विकास भएको पाइन्छ । त्यसकारण पाल्पामा भएको साहित्यको विकासलाई यस अध्ययनमा प्रजातन्त्रको उदय पूर्व र प्रजातन्त्रको उदय पश्चात भनी दुई चरणमा वर्गीकरण गरेर वर्णन गरिएको छ ।

### ३.१ प्रजातन्त्रको उदय पूर्व

मध्यकालीन नेपाली साहित्यमा भक्तिधाराको विकास भएको थियो । पाल्पामा प्रजातन्त्रको उदय हुनु भन्दा पूर्व यही भक्तिधारामा नै कविता, गीत, कथा, नाटक रचना

गर्ने गरेको पाइन्छ । यस कार्यको अगुवाई रेसुंगाका सन्त शशीधर स्वामीले (वि.सं. १८०४-१९०६) गरेका हुन भन्ने भनाइ छ । हुनत उनले भाषा र साहित्यको उत्थान गर्ने उद्देश्यले नभएर जोसमनी सन्त परम्पराको प्रचार गर्ने उद्देश्यले केही भजनहरू रचना गरेका थिए तापनि उनका रचनाले नेपाली भाषा र साहित्यको विकासमा टेवा पुऱ्याएको पाइन्छ ।[३१] नेपाली साहित्यमा विकास भएको भक्तिधारालाई पछ्याउँदै साहित्यको श्रीवृद्धि गर्न समर्पित व्यक्तित्व तानसेनका छविलाल नेपाल (वि.सं. १९०५-७९) थिए ।[३२] उनले 'गोपी गीत', 'पुत्र शिक्षा', र 'खड्ग स्तुति' आदि पद्य सङ्ग्रहहरू र फुटकर कविताहरू लेखेको देखिन्छ ।[३३] अर्घाखाँची खिदिमका दधिराम मरासिनीका (वि.सं. १९३९-२०२०) थुप्रै अप्रकाशित कृतिहरू भएतापनि प्रकाशित ग्रन्थ भने 'श्रीरामचरितामृतम' नामक संस्कृत भाषामा लेखिएको खण्डकाव्य हो ।[३४] पाल्पामा कविता विधालाई हुर्काउने र उत्कर्षमा पुऱ्याउने नेपाली साहित्यका केन्द्रीय प्रतिभा माधवप्रसाद देवकोटा (वि.सं १९६०-२०३९) मानिएका छन् ।[३५] शास्त्रीय छन्दमा कविता लेख्ने देवकोटाको कलम संस्कृत र नेपाली दुवै भाषामा समान किसिमले चल्दथ्यो । उनको संस्कृत भाषामा रचित 'भारती वैभवम्' नामक खण्डकाव्यले भारतमा समेत ख्याति कमाएको थियो भने नेपाली भाषामा रचना गरिएका 'हुस्सुपथिक' खण्डकाव्य र 'फूलवारी' कविता सङ्ग्रह पनि चर्चाको शिखरमा पुगेका थिए । देवकोटाका रचनाको आधारभूमि आध्यात्मिक संचेतना रहेको छ तापनि देशप्रेम र युगबोधका कुराहरू पनि उनका रचनाहरूमा पाइन्छ ।[३६] देवकोटा बहुप्रतिभाशाली व्यक्ति थिए । उनले कविता, कथा, निबन्ध र समालोचना आदि विविध विधामा कलम चलाएका थिए । उनको पहिलो कथा वि.सं. १९८६ मा शारदा पत्रिकामा प्रकाशित 'पौराणिक आख्यान' हो । उनले कथासङ्ग्रह प्रकाशित गरेको देखिँदैन । 'शारदा' र 'भारती' पत्रिकामा फुटकर कथा प्रकाशित भएको पाइन्छ ।[३७] उनले समसामयिक विषयमा निबन्ध, प्रबन्ध र समालोचना समेत लेखेका थिए । उनका निबन्धहरूमा आध्यात्मवाद, मानवतावाद, शास्त्रीय विवेचना र व्याख्यात्मक शैली पाइन्छ ।[३८] देवकोटाका समकालीन कविहरूमा पाल्पा देउरालीका मीनप्रसाद नेपाल (वि.सं.१९६७-२०३५) थिए । उनका प्रकाशित कृतिहरू 'राम वन गमन', 'प्रश्नोत्तरी', 'राम गीता सार', 'प्रार्थना भजन सङ्ग्रह' आदि हुन् । उनका रचनाहरूमा पूर्वीय दर्शनको प्रभाव परेको पाइन्छ ।[३९]

नेपाली भाषामा गीति साहित्यको उत्थान गर्नमा पाल्पा चुलीबोझाका बहादुरसिंह बराल (वि.सं.१९४८-२०१९) को महत्वपूर्ण स्थान छ । उनले 'बरालको आँसु', 'अब

त जाउँ कान्छी घर', 'नौतले बाउन्ने ढोका', 'रेली मैं' र 'चुईं चुईं चुईंकने जुत्ता' नामक गीति सङ्ग्रह तयार गरी ती गीत ग्रामोफोनमा रिकर्ड समेत गराएका थिए ।[४०] उनलाई मित्रसेनले (वि.सं.१९५२-२००८) साथ दिएका थिए । बरालले लेखेका गीतहरूमा मित्रसेनले स्वर दिनुका साथै आफूले समेत गीत लेखेका थिए । उनी वि.सं. १९९० मा पाल्पा आएका वखत रचना गरेको 'तानसेन रमाइलो डाँडा बाबुसाहेव तानसेन रमाइलो डाँडा' भन्ने बोलको गीत निकै चर्चित भएको पाइन्छ ।[४१] पाल्पामा नाटक लेखनको परम्परा पनि बहादुरसिंह बरालले नै बसालेका थिए । उनले 'द्रौपदी चीरहरण', 'ध्रुव चरित्र' आदि नाटक लेखेर तानसेनमा मञ्चन गराउनुका साथै ग्रामोफोनमा रिकर्ड समेत गराएका थिए ।[४२]

अम्बिकाप्रसाद लाकौल (वि.सं.१९५८-२०२१) ले अनुवाद गरेका धार्मिक नाटकहरू 'सिद्धार्थ गौतम', 'राजकुमार विश्वन्तर' र सामाजिक नाटकहरू 'अप्टुडेट', ' कञ्जुस सेठ', 'सङ्गतको फल' आदि तानसेनमा मञ्चन भएको पाइन्छ । लाकौलले भारतीय साहित्यकार वकिमचन्द्र चटर्जीका 'जयन्त श्री उदय गृहिणी' र 'दुर्गेस नन्दिनी' तथा प्रेमचन्दका 'बलिदान' र 'सती चिन्ता' नामक उपन्यास पनि नेपाली भाषामा उल्था गरेका थिए तर प्रकाशित हुन सकेनन् । नाटक लेखनको क्षेत्रमा तानसेनका कमलराज रेग्मी पनि देखा पर्दछन । उनले लेखेका धार्मिक नाटकहरू 'चन्द्रहास', र 'शर्मिष्ठा' तथा सामाजिक नाटकहरू 'समाजको भूल', 'दोश्रो विवाह' र 'ठक्कर' तानसेनमा मञ्चन भएका थिए ।[४३] पाल्पामा निबन्ध लेखनको प्रारम्भ वि.सं. १९५६-५७ मा कृष्णप्रसाद लाकौलले 'तिर्थयात्राको डायरी' लेखेर गरेका थिए ।[४४]

### ३.२ प्रजातन्त्रको उदय पश्चात

प्रजातन्त्रको उदय पश्चात पाल्पाको प्रशासनिक क्षेत्रबाट गुल्मी र बाग्लुङ जिल्ला अलग हुन गएको हुनाले सो क्षेत्रको साहित्यक विकास बारे भने यहाँ चर्चा गरिएको छैन । प्रजातन्त्रको उदयपछि नेपाली राजनैतिक क्षेत्रमा आएको विचार स्वतन्त्रताको प्रभाव साहित्यिक क्षेत्रमा पनि पर्न गयो । स्वतन्त्र रूपमा विचार संप्रेषण गर्न पाउने भएपछि साहित्यको फाँट पनि फराकिलो देखिन थाल्यो । प्रजातन्त्रको उदयपछि पाल्पाली साहित्यमा शास्त्रीय रोमान्टिक प्रवृत्तिप्रति उन्मुख हुन चाहने काव्यधारा र प्रगतिवादी काव्यधारा गरी दुई प्रवृत्ति देखा परेको पाइन्छ ।

शास्त्रीय रोमान्टिक काव्यधारा प्रवृत्तिका कविहरू पद्मनाभ शर्मा, उमानाथ

भण्डारी, कुलमणि देवकोटा, कविन्द्रमान सिंह, चुडामणि बन्धु, चेतबहादुर कुँवर आदि हुन् । पद्नाभ शर्माका (वि.सं.१९८३-२०५०) कविता 'उजेली' पत्रिकामा छापिएको पाइन्छ । उनका कवितामा शास्त्रीय काव्यलक्षणको पूर्णत : अनुसरण गरिएको हुन्छ ।[४५] उमानाथ भण्डारीका (वि.सं.१९८२) कवितामा परम्परागत पौराणिक र सामाजिक परिवेशको पृष्ठभूमिमा आध्यात्मिक चिन्तनलाई प्राथमिकता दिएको पाइन्छ । उनका मनगीता, प्रेमगीता, पद्यकुसुम आदि कविता सङ्ग्रह प्रकाशित छन् ।[४६] पाल्पाको साहित्य जगतमा कुलमणि देवकोटाले (वि.सं. १९८५-२०५९) हास्यव्यंग्य धाराको नेतृत्व गर्थे । उनको 'छरिएका फूलहरू' कविता सङ्ग्रहका साथै अन्य फुटकर कविता प्रकाशित छन् ।[४७] कविन्द्रमानसिंह (वि.सं.१९८६) रोमाण्टिक काव्यधारामा कविता र कथा लेख्ने स्वच्छन्दतावादी साहित्यकार हुन् । यिनका 'विरहिणी' कथा सङ्ग्रह र 'पराग' गीति काव्य प्रकाशित छन् ।[४८] शास्त्रीय काव्यधारा प्रवृत्तिका कविताहरूको पंक्तिमा चुडामणि बन्धु (वि.सं. १९९५) र चेतबहादुर कुँवर (वि.सं. १९९७) पनि देखा पर्छन । चुडामणि बन्धुको 'वनवासिनी' खण्डकाव्यमा नारी वेदना र पीडा उजागार गर्न खोजिएको छ ।[४९] चेतबहादुर कुँवरको 'दियालो' कविता सङ्ग्रहमा देशभक्ति र राष्ट्रियताप्रतिको ममता अभिव्यक्त गरिएको पाइन्छ ।[५०] पाल्पालाई गीतिकाव्यको माध्यमबाट चिनाउने चन्द्रप्रसाद अधिकारी (वि.सं. १९८८) का गीतमा ग्रामीण जनजीवनको वर्णन, सामाजिक विकृति र विसङ्गतिप्रति व्यंग्य प्रहार गरेको पाइन्छ । उनका 'वनमुलीको झोपडी', 'गीतमाला', 'कन्या विक्री' र 'कोसेली' गीति सङ्ग्रह र 'स्वदेशमै बस्छु म' कविता सङ्ग्रह प्रकाशित भएको देखिन्छ ।[५१] चीनियालाल बज्राचार्यले सामाजिक विकृति र विसङ्गतिलाई प्रहार गर्दै 'भोक', 'माटो' र 'मिलन' नामक सामाजिक नाटकहरू र 'श्रीकृष्ण अर्जुन युद्ध', 'वरदान' र 'पुष्पाञ्जली' धार्मिक नाटकहरूको रचना गरेका थिए । यी नाटकहरू वि.सं. २००८ सालदेखि २०१३ सालसम्म जनता विद्यालय तानसेनमा मञ्चन भएका थिए ।[५२] पाल्पामा नाटक लेख्ने र खेल्ने परम्परा राणा शासनकालदेखि नै चलेको भएतापनि ती नाटकहरू प्रकाशित भएको पाइन्न । पाल्पाका नाटककारहरू मध्ये चेतबहादुर कुँवरको 'नरहोस् कोही वेकार (एकाङ्की २०२२)' मात्र प्रकाशित भएको पाइन्छ ।[५३]

कथा विधा पाल्पाली परिवेशमा त्यति फस्टाउन सकेको पाइन्न तापनि गुरुप्रसाद मैनाली (वि.सं. १९५७-२०२८) जस्ता आधुनिक शैलीका कथाकारले समेत यसै क्षेत्रमा कथा लेख्ने प्रेरणा पाएका थिए भनिन्छ ।[५४] मैनाली वि.सं. १९८३-८६ सम्म पाल्पा गौंडा अन्तर्गतको बाग्लुङ अदालतमा हाकिम भएको देखिन्छ ।[५५] उनी वि.सं. १९८४ मा तानसेनमा भएको 'पुस्तक पढ्ने दलान' को वार्षिक कार्यक्रममा सम्मिलित

भएको पाइन्छ ।[५६] उनले यसैताक नासो कथा सङ्ग्रहमा प्रकाशित कथाहरू लेखेको हुनाले माथिको भनाइ सत्य साविक हुन्छ।

प्रगतिवादी काव्यधारा प्रवृत्तिमा जगतबहादुर जोशी, चीनियालाल बज्राचार्य, त्रिरत्न बज्राचार्य, रामचन्द्र भट्टराई आदि लागेको पाइन्छ । जगतबहादुर जोशी (वि.सं.१९८७–२०६८) का प्रकाशित ग्रन्थको रूपमा 'नेपालको इतिहास निर्माता' दुइ भाग, 'डम्बरेको टालो', आदि छन् । उनका फुटकर कविता र लेखहरू युगवाणि, पथ प्रदर्शक आदि विभिन्न पत्रिकाहरूमा प्रकाशित भएको पाइन्छ । उनका रचनाहरूमा पाश्चात्य काव्य शैली र प्रगतिवादी काव्यधारालाई अंगालेको पाइन्छ ।चीनियालाल बज्राचार्यका फुटकर कविता, एकाङ्की, नाटक र लेख प्रकाशित भएका थिए । उनका रचनाहरूमा सामाजिक जनजीवनका विषयवस्तुलाई प्रगतिशील धारणाभित्र राखेर व्याख्या गरिएको पाइन्छ । रामचन्द्र भट्टराई (वि.सं.१९९८) प्रगतिवादी काव्यधाराका सशक्त साहित्यकार मानिन्छन् । पाल्पाका अन्य साहित्यकारहरूमा गोपीकृष्ण शर्मा, कृष्णचन्द्र देवकोटा, कृष्णबहादुर राणा, बुद्धिराज काफ्ले, हरिप्रसाद खनाल, भुपेन्द्र के.सी., रीपलाल विश्वकर्मा, इश्वरीप्रसाद आचार्य, योगविक्रम राणा र त्रिरत्न बज्राचार्य देखिन्छन् ।[५७] अयोध्याप्रसाद प्रधानले राणा शासनकालमा नै मगर भाषाको उन्नतिका लागि एस.एम.एम.पि. गुप्ता नामबाट 'मगर कुराको शिक्षा' र 'मगर शब्द सङ्ग्रह' नामक पुस्तकहरू मगर भाषामा लेखेका थिए ।[५८] पाल्पामा अङ्ग्रेजी भाषाप्रति चासो देखाउने विद्वानहरूमध्ये भुपेन्द्रजंग के.सी. (वि.सं.१९७०-२०३८) अग्रपंक्तिमा देखा पर्छन । उनले अङ्ग्रेजी भाषामा लेखेका कविताहरू स-साना पर्चाको रूपमा प्रकाशित गरेर हातहातै वितरण गर्दथे । उनका कवितामा देशभक्ति र समसामयिक घटनाप्रतिको समवेदना पाइन्छ ।[५९]

### ३.२.१ पत्र-पत्रिकाको प्रकाशन

जनसाधारणमा चेतना जगाउनमा पत्र-पत्रिकाको महत्त्वपूर्ण भूमिका हुन्छ । विक्रमको एक्काइसौं शताब्दीको प्रारम्भदेखि नै पाल्पामा पत्र-पत्रिकाको प्रकाशन हुन थालेको भएतापनि राणा शासनको पतनपछि शैक्षिक क्षेत्रमा आएको नवजागरणसँगै यस क्षेत्रमा उलेख्य प्रगति भएको छ । वि.सं. २००७ साल पूर्वका पत्र-पत्रिकाहरू विशेषतः जागरणमुलक भएको पाइन्छ भने प्रजातन्त्रको उदय पश्चातका पत्र-पत्रिका साहित्य, सङ्गीत, कला र राष्ट्रभक्तिलाई टेवा पुऱ्याउने खालका भएको पाइन्छ ।

पाल्पाबाट प्रकाशित पत्र-पत्रिकाहरूलाई साहित्यिक पत्रिका, मुखपत्र र समाचारमूलक भनी वर्गीकरण गर्न सकिन्छ।

**(क) साहित्यिक पत्रिका**

पाल्पामा सर्वप्रथम वि.सं. २००५ सालमा चीनियालाल बज्राचार्यको संयोजकत्वमा 'अध्ययन' नामक हस्तलिखित पत्रिका प्रकाशित भएकोमा दुई अंक प्रकाशित भएपछि स्थानीय प्रशासनद्वारा यसको प्रकाशनमा प्रतिबन्ध लगाइएको देखिन्छ।[१०] त्यसपछि वि.सं. २००६ सालमा जगतबहादुर जोशी लगायतका युवाहरूको सक्रियतामा 'पथ प्रदर्शक' नामक हस्तलिखित पत्रिका प्रकाशन भयो। नेपाली, नेवारी, हिन्दी र अङ्ग्रेजी भाषामा कविता, कथा, नाटक, लेख आदि प्रकाशित हुने यो पत्रिका नौ अंक सम्म मात्र प्रकाशित भएर बन्द भएको देखिन्छ।[११]

प्रजातन्त्रको उदय पश्चात पत्र-पत्रिका प्रकाशनमा पनि जागरण आयो। त्यसको फलस्वरूप वि.सं. २००९ सालमा कुलमणि देवकोटाको सम्पादनमा 'प्रगति' नामक पत्रिका प्रकाशित भयो। हस्तलिखित रूपमा रहेको यो पत्रिका पनि पाँच अंक मात्र प्रकाशित भएर बन्द भएको थियो। त्यस्तै चेतबहादुर कुँवर र हरिबहादुर कुँवरको सम्पादकत्वमा वि.सं. २०१२ सालमा प्रकाशित 'अङ्कुर' नामक हस्तलिखित पत्रिका पनि दश अंक मात्र प्रकाशित भएर बन्द भएको थियो। पाल्पाबाट छापाखानामा मुद्रण गरेर प्रकाशन गरिएको पहिलो पत्रिका 'नयाँ किरण' नामक साहित्यिक पत्रिका थियो। अजम्बरध्वज खातीको सम्पादनमा वि.सं. २०१४ साल आषाढ २४ गतेदेखि प्रकाशित यो पत्रिका स्थानीय लाकौल प्रेसमा छापिएको थियो। यो पत्रिका पनि तीन अंक मात्र प्रकाशित भएर बन्द भयो। यसरी नै वि.सं. २०१४ सालमा चेतबहादुर कुँवर र लक्ष्मीराज रेग्मीको सम्पादकत्वमा 'आशा' नामक पत्रिका प्रकाशित भएको थियो तर सो पत्रिका पनि चार पाँच अंक मात्र प्रकाशित भएर बन्द भएको देखिन्छ। साहित्यिक पत्रिका प्रकाशनको क्रममा वि.सं. २०१९ सालमा धवल पुस्तकालय तानसेनबाट जगतबहादुर जोशीको सम्पादनमा 'धवलागिरि' नामक पत्रिका प्रकाशन भएको पाइन्छ। पाल्पामा विभिन्न पत्रिका प्रकाशन भएतापनि छिटै नै बन्द हुने परम्परालाई तोड्ने मनसाय राखेर प्रकाशित यो पत्रिका झन दोश्रो अंक पनि निस्कन  सकेन।[१२] पाल्पामा साहित्यिक पत्रकारिताको विकास गराउनमा बनारसमा अध्ययनरत पाल्पाली विद्यार्थीहरूले वि.सं. २०१२ सालमा प्रकाशित गरेको 'छात्रदूत' र वि.सं. २०१७ सालमा निकालेको 'उजेली' पत्रिकाको पनि महत्त्वपूर्ण स्थान छ।[१३]

यसरी पाल्पाबाट विभिन्न विधाका साहित्यिक रचनाहरूलाई समेटेर साहित्यिक पत्रिका प्रकाशन हुने क्रम चलेको भएतापनि दिगो रूपमा कुनै पनि पत्रिका प्रकाशित हुन सकेको देखिन्न । त्यसको कारण आर्थिक अभाव र पाठकहरूको कमी रहेको देखिन्छ ।

**(ख) मुखपत्र**

प्रजातन्त्रको स्थापनासँगै धमाधम खुल्दै गएका पाल्पाका शैक्षिक संस्थाहरूले आफ्नो उन्नति र प्रगति जनता सामु प्रष्ट्याउने उद्देश्यले मुखपत्र निकाल्न थालेको पाइन्छ । पाल्पाबाट प्रकाशित मुखपत्रहरूमध्ये जनता माध्यमिक विद्यालय, तानसेनबाट जगतबहादुर जोशीको सक्रियतामा वि.सं. २०१३ सालमा निक्लेको 'उपहार' पत्रिका पहिलो मानिन्छ । यसले हालसम्म पनि निरन्तरता पाएको देखिन्छ । त्यसपछि पाल्पामा रहेको नर्मल स्कूलको परिचय दिने उद्देश्यले वि.सं. २०१४ सालमा 'कोपिला' नामक पत्रिका प्रकाशित भएको थियो । यसै गरी पाल्पामा स्थापना भएको नेपाली साहित्य परिषदको मुखपत्रको रूपमा वि.सं. २०१५ सालमा 'सिर्जना' पत्रिका प्रकाशित भएको थियो । आफ्नो संस्थाका गतिविधिहरू प्रकाशमा ल्याउनुका साथै शिक्षक र विद्यार्थीहरूको प्रतिभा प्रस्फुटन गराउने उद्देश्यले प्रकाशित हुने मुखपत्रहरूमा 'पद्मोदय पाल्पा पब्लिक हाइ स्कूलको मुखपत्र' पनि एक मानिन्छ जुन पत्रिका २०१६ सालदेखि अद्यापिसम्म प्रकाशित हुँदैछ । मुखपत्र प्रकाशित गर्ने संस्थाहरूमा ज्ञानमाला सभा तानसेनको पनि नाम आउँछ जसले वि.सं. २०१३ देखि 'बैशाख पूर्णिमा' नामक पत्रिका प्रकाशन गर्न थालेको थियो । यसै सिलसिलामा मोहन कन्या माध्यमिक विद्यालयले पनि आफ्नो संस्थाको परिचय दिने र विद्यालयका शिक्षक एवं विद्यार्थीहरूको प्रतिभा प्रकाशमा ल्याउने उद्देश्यले वि.सं. २०१८ सालदेखि 'आरती' नामक मुखपत्र प्रकाशित गर्ने गरेको पाइन्छ भने पाल्पामा रहेको एक मात्र त्रिभुवन डिग्री कलेजको छात्र युनियनले आफ्नो मुखपत्रको रूपमा वि.सं. २०१८ सालदेखि नै 'आलोक' पत्रिका प्रकाशन गर्न थालेको देखिन्छ । यसरी नै वि.सं. २०२० सालबाट चेतबहादुर कुँवरको सम्पादकत्वमा विद्यालयका गतिविधि र शिक्षक तथा विद्यार्थीहरूका रचना समावेश गरेर 'महेन्द्र प्रौढ हाई स्कूलको मुखपत्र' प्रकाशित भएको पाइन्छ ।[५४]

**(ग) समाचारमूलक पत्र-पत्रिकाहरू**

राणा शासनको पतनपछि पाल्पा गौंडाको अधिनमा रहेका नौ जिल्लामध्ये गुल्मी, अर्घा, खाँची, इश्मा, मुसिकोट र धुर्कोटका लागि गुल्मी छोटी गौंडा तथा पर्वत

र गलकोटका लागि बाग्लुङ छोटी गौंडा स्थापना गर्ने निधो भएपछि पाल्पाको अधिनमा सानो भू-भाग मात्र रहने भयो । त्यसकारण गुल्मी र बाग्लुङमा अलग्गै गौंडा स्थापना गर्ने कुराको विरोध स्वरूप पाल्पाबाट वि.सं. २००९ सालमा 'संघर्ष' नामक पत्रिका प्रकाशित भएको थियो । त्यसपछि वि.सं. २०१३ सालमा चीनियालाल बज्राचार्य र बुद्धरत्न शाक्यको सम्पादनमा 'युवक' नामक समसामयिक समाचारमूलक बुलेटिन प्रकाशित भएको थियो तर उक्त बुलेटिन दुई अंक मात्र प्रकाशित भएर बन्द भयो । पाल्पाबाट प्रकाशित समाचारमूलक पत्रिकाहरूमा वि.सं. २०१८ सालमा चेतबहादुर कुँवरको सम्पादनमा प्रकाशित 'पाल्पा' नामक पत्रिकाको विशेष स्थान रहेको पाइन्छ । यो पत्रिका एघार अंकसम्म प्रकाशित भएको थियो ।[५५]

## ४. निष्कर्ष

पाल्पामा राणा शासनकालसम्म संस्कृत शिक्षाको केही विकास भएको भएतापनि आम जनताले पढ्न पाउने अवसर पाएका थिएनन् । प्रजातन्त्रको उदयपछि नेपालका अन्य भूभागमा जस्तै पल्पामा पनि शिक्षाको लहर चल्यो जसका कारण आम जनतालाई पनि पढ्न पाउने अवसर प्राप्त भयो ।

शिक्षाको क्षेत्रमा जस्तै पाल्पामा राणा शासनकालदेखि नै साहित्यको क्षेत्रमा पनि विकास भएको पाइन्छ तापनि त्यो संस्कृत प्रभावी मात्र थियो । आधुनिक साहित्यको विकास प्रजातन्त्रको उदय पश्चात मात्र हुन थालेको हो । शिक्षा र साहित्यको विकासमा टेवा पुऱ्याउने उद्देश्यले पाल्पामा पत्र-पत्रिकाको प्रकाशन पनि आरम्भ भएको पाइन्छ तर कुनै पनि पत्रिकाले लामों समयसम्म आफ्नो प्रकाशनलाई निरन्तरता दिन सकेको देखिन्न ।

**टिप्पणी**

१ तुल्सीराम वैद्य र अन्य, **सोशल हिस्ट्री अफ नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स प्रा. लि., सन् १९९३, पृ.२७२ ।

२ गोपीनाथ शर्मा, **नेपालको शैक्षिक इतिहास**, काठमाडौं : लुम्बिनी पुस्तक भण्डार, वि.सं. २०५७, पृ. १३-१४ ।

३ वैद्य र अन्य, **पूर्ववत्**, टि.नं. १, पृ. २९७-९९ ।

४ भेषराज शर्मा, "राणा शासनकालमा पाल्पाको शैक्षिक गतिविधि र त्यसमा संलग्न प्रतिभाहरू", **पाल्पा दर्पण**, अंक २, वि.सं. २०४०, पृ. ८४ ।

५ शर्मा, **पूर्ववत्**, टि.नं. २, पृ. ४८-४९ ।

६ "कम्याण्डरी किताब, १९६९ साल", पहाड पूर्व पश्चिम, सि.नं. ३९३, मू.नं. ५५, राष्ट्रिय

अभिलेखालय, काठमाडौं ।

७ शर्मा, **पूर्ववत्**, टि.नं. २, पृ. ९१ ।

८ हरेराम पन्त, "ढुंगी पाठशाला", **पाल्पा दर्पण**, अंक ३, वि.सं. २०४९, पृ. १११ ।

९ **यो हो पाल्पा**, गृह पञ्चायत मन्त्रालय, योजना, प्रगति तथा तथ्याङ्क महाशाखा, वि.सं. २०२५, पृ.४५ ।

१० गोविन्द मास्के, **सोशल हिस्ट्री अफ नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९६, पृ. १६५ ।

११ इडेन भेन्सीटार्ट, **द गुर्खाज**, (रिप्रिन्ट), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३, पृ. ५९ ।

१२ कृष्णराज अर्याल, **एजुकेशन फर द डेभलपमेन्ट अफ नेपाल**, काठमाण्डू : शान्ति प्रकाशन, सन् १९७०, पृ. २५ ।

१३ मुकुन्द शर्मा पौडयाल, "प्रशंग-श्रद्धा स्मरणको", **पं. जगन्नाथ उपाध्याय : स्मृति ग्रन्थ**, बाग्लुङ : धवलागिरि साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०४९, पृ. ९८-९९ ।

१४ "कम्याण्डरी किताब, १९८२ साल पहाड पश्चिम गौंडा", सि.नं. ५४८, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

१५ शर्मा, **पूर्ववत्**, टि.नं. २, पृ. ८५ ।

१६ उही, पृ. १४० ।

१७ कृष्ण बी.थापा, **मेन आस्पेक्टस् अफ सौशल, इकोनेमिक एण्ड एड्मिनिस्ट्रटिभ हिस्ट्रि अफ मोडर्न नेपाल**, काठमाण्डु : अम्बिका थापा, सन् १९८८, पृ. ८९ ।

१८ उही, पृ. ९० ।

१९ **स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : पद्म पब्लिक नमूना माध्यमिक विद्यालय, वि.सं. २०५४, पृ. ८ ।

२० **आरती : स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : मोहन कन्या माध्यमिक विद्यालय, वि.सं. २०५७, पृ. ३-४ ।

२१ **यो हो पाल्पा**, टि.नं. ९, पृ. ४५ ।

२२ **पाल्पा : स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : भैरवजनता उच्च मा.वि., वि.सं. २०५९, पृ. १-२ ।

२३ **स्वर्ण महोत्सव स्मारिका**, पाल्पा : त्रिभुवन बहुमुखी क्याम्पस, वि.सं. २०६०, पृ. १-३ ।

२४ **यो हो पाल्पा**, टि.नं. ९, पृ. ४३ ।

२५ **महेन्द्रबोधि माध्यमिक विद्यालय स्मारिका**, पाल्पा : वि.सं. २०६०, पृ. १ ।

२६ **यो हो पाल्पा**, टि.नं. ११३, पृ. ४७ ।

२७ भवेश्वर पगेनी, **पाल्पामा प्रजातान्त्रिक आन्दोलनका सय दिन वि.सं. २००७**, पाल्पा : निमा पगेनी, वि.सं. २०४९, पृ. ८-९ ।

२८ जगतबहादुर जोशी, "प्रजातन्त्रोन्मुख पाल्पाको इतिहास", कमलराज रेग्मी र अन्य (सम्पा.), **पाल्पामा २००७ सालको आन्दोलन**, पाल्पा : स्याटर्डे क्लब, वि.सं. २०५३, पृ. ३-४ ।

२९ दीपक बस्याल, "पाल्पाको साहित्यिक रुपरेखा", त्रि.वि., नेपाली केन्द्रीय शिक्षण विभागमा प्रस्तुत स्नातकोत्तर शोधपत्र, वि. सं. २०५६, पृ. २६-२८ ।

३० **यो हो पाल्पा**, टि.नं. ११३, पृ. ४२ ।

३१ जनकलाल शर्मा, **जोसमनी सन्त परम्परा र साहित्य**, (द्वितीय संस्करण), साझा प्रकाशन, वि.सं. २०५२, पृ. ११-१४ ।

३२ माधवप्रसाद देवकोटा, "पाल्पाली कवि छविलाल नेपाल", **श्रीनगर**, संकलन ३, वि.सं. २०२९, पृ. ३-११ ।

३३ कमल दिक्षित, "छविलाल नेपाल", उही, पृ. १३-१६ ।

३४ टीकाराम पन्थी, "लुम्बिनी अञ्चलका संस्कृत कवि र कविता", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अंक २, वि.सं. २०३९, पृ. ९ ।

३५ विनयकुमार कसजू (सम्पा.), **श्री माधवप्रसाद देवकोटाको स्मृति ग्रन्थ**, पाल्पा : अभिनन्दन समारोह समिति, वि.सं. २०४४, पृ. २०-२३ ।

३६ गोपीकृष्ण शर्मा, "पाल्पाको साहित्यिक जगत : एक सर्वेक्षण", **पाल्पा दर्पण**, अंक १, वि.सं. २०३९, पृ.४४-४५ ।

३७ चुडामणि बन्धु, "कवि माधवप्रसाद देवकोटा", **उही**, अंक २, वि.सं. २०४०, पृ. १७ ।

३८ हीरामणि शर्मा, "स्व. माधवप्रसाद देवकोटाका गद्यकारिताको विश्लेषण र मूल्यांकन", **समालोचनाको बाटोमा**, पर्वत : इन्दिरा शर्मा पौडेल, वि.सं. २०४१, पृ. ३०८ ।

३९ कर्णबहादुर बानियाँ र अन्य (सम्पा.), **प्रतिभा**, पाल्पा : वाङमय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०५५, पृ. ३६ ।

४० कालीभक्त पन्त, **हाम्रो सांस्कृतिक इतिहास**, काठमाडौं : लेखक स्वयं, वि.सं. २०४३, पृ.४३-४४ ।

४१ हरिबहादुर कुँवर, "पाल्पाली लोकगीत र यसका प्रतिभाहरू", **पाल्पा दर्पण**, अंक २, वि.सं. २०४०, पृ. ८० ।

४२ पन्त, **पूर्ववत्**, टि.नं. ४०, पृ. ८१ ।

४३ जगतबहादुर जोशी, "सांस्कृतिक जागरणका प्रवाहमा पाल्पा", **पाल्पा दर्पण**, अंक ३, वि.सं. २०४९, पृ. १२-२० ।

४४ विनयकुमार कसजू, "लुम्बिनी अञ्चलमा भाषा र साहित्यको उन्नतिका निम्ति व्यक्तिगत र संस्थागत प्रयासहरू", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अंक २, वि.सं. २०३९, पृ. १०९ ।

४५ शर्मा, **पूर्ववत्**, टि.नं. ३६, पृ. ४८ ।

४६ बस्याल, **पूर्ववत्**, टि.नं. २९, पृ. ७५-७६ ।

४७ शर्मा, **पूर्ववत्**, टि.नं. ३६, पृ. ४६ ।

४८ मथुरादेवी भट्टाई,"नेपाली साहित्यमा पाल्पा जिल्लाको योगदान", **पाल्पा दर्पण**, अंक ४, वि.सं. २०५३, पृ. २९-३० ।

४९ बस्याल, **पूर्ववत्**, टि.नं. २९, पृ. ८१-८२ ।

५० शर्मा, **पूर्ववत्**, टि.नं. ३६, पृ. ४७ ।

५१ भट्टराई, **पूर्ववत्**, टि.नं. ४८, पृ. ३४-३५ ।

५२ जोशी, **पूर्ववत्**, टि.नं. ४३, पृ. २०-२१ ।

५३ गोपीकृष्ण शर्मा, "पाल्पामा शैक्षिक तथा साहित्यिक जागरण", **पाल्पा दर्पण**, अंक ३, वि.सं. २०४९, पृ. ३५ ।

५४ बाग्लुङका साहित्यकार काजी रोशनसँग मिति २०५३।४।१५ मा भएको साक्षात्कारको आधारमा ।

५५ विष्णुप्रसाद शर्मा 'मैत्रेय', **बाग्लुङको ऐतिहासिक रूपरेखा**, बाग्लुङ : धवलागिरि साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०५१, पृ. ३९ ।

५६ माधवप्रसाद देवकोटा, "भाषण गरे वापत जेलको त्रास", **पाल्पा दर्पण**, अंक १, वि.सं. २०३९, पृ. १३१-३२ ।

५७ (क) बस्याल, **पूर्ववत्**, टि.नं. २९, पृ. ८४-८६ र १४९ ।
(ख) शर्मा, **पूर्ववत्**, टि.नं. ३६, पृ. ४५-४९ ।
(ग) भट्टराई, **पूर्ववत्**, टि.नं. ४८, पृ. ३२-३३ ।

५८ जोशी, **पूर्ववत्**, टि.नं. ४३, पृ. १५ ।

५९ सुदिप वागची, "पाल्पामा अङ्ग्रेजी भाषा र साहित्य : एक चिनारी", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अंक २, वि.सं. २०३९, पृ. १५७-५८ ।

६० मेघराज शर्मा, "पाल्पाबाट प्रकाशित पत्र-पत्रिकाहरूको संक्षिप्त विवेचना", **पाल्पा दर्पण**, पहिलो उपहार, वि.सं. २०३९, पृ. ९४ ।

६१ जोशी, **पूर्ववत्**, टि.नं. २८, पृ. १० ।

६२ (क) बस्याल, **पूर्ववत्**, पा.टि.नं. २९, पृ. २५ र ४४-४५ ।
(ख) शर्मा, **पूर्ववत्**, टि.नं. ६०, पृ. ९५ ।

६३ जगतबहादुर जोशी, "पाल्पा जागरणको रूपरेखा विस्मृतिको गर्भबाट", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अंक २, वि.सं. २०३९, पृ. १९१-९२ ।

६४ (क) बस्याल, **पूर्ववत्**, टि.नं. २९, पृ. ४५-५१ ।
(ख) शर्मा, **पूर्ववत्**, पा.टि.नं. ६०, पृ. ९५-९७ ।

६५ **उही**, पृ. ९४-९६ ।

# १३. पाल्पाको प्रभास क्षेत्र : धार्मिक तथा ऐतिहासिक महत्वको स्थल

## १. विषय प्रवेश

वर्तमान नेपालको लुम्बिनी अञ्चलमा पर्ने पाल्पा जिल्ला प्राचीनकालदेखि नै धर्म, संस्कृति र कलाकौशलको केन्द्र भएको पाइन्छ। पाल्पा जिल्लाको सदरमुकाम तानसेन नगरपालिकामा पर्ने प्रभास क्षेत्र त झन् धार्मिक तथा ऐतिहासिक दृष्टिकोणले निकै महत्वपूर्ण स्थल मानिन्छ तापनि खोज अनुसन्धानको अभावमा यस क्षेत्रको महत्व र गरिमा गर्भमै विलीन भएर रहेको छ। त्यसकारण प्रभास क्षेत्र धार्मिक तथा ऐतिहासिक दृष्टिकोणले किन महत्वपूर्ण छ ? भन्ने विषयमा यस लेखमा चर्चा गर्न लागिएको छ।

## २. प्रभास क्षेत्रको नामकरण सम्बन्धी चर्चा

प्रभास क्षेत्र भन्नाले तानसेन नगरपालिकाको वार्ड नं. ११ र १४ मा पर्ने प्रभास, लामडाँडा, सुन्दरगाउँ र बाँसटारी क्षेत्रलाई मानिन्छ। यो क्षेत्रको नाम किन 'प्रभास' रहन गयो भन्ने विषयमा व्यापक चर्चा परिचर्चा भएको पाइन्न तापनि यस बारेमा दुई थरी मत देखा परेका छन्। एकथरी मानिसहरूले तानसेनदेखि परको बास भन्दा भन्दै 'पर्वास' भन्न थालिएको हो भन्ने तर्क गरेका छन्। अर्को मतका पक्षधरका अनुसार यो क्षेत्रको नामकरण भारतको काठियावादमा पर्ने धार्मिक क्षेत्र प्रभाससँग जोडिएको छ। पहिलो तर्क अनुसार तानसेनमा बस्तीको विकास भइसकेपछि मात्र प्रभासमा बस्ती बस्न थालेको देखिन्छ। कतिपय पुराना कागजपत्रको आधारमा विश्लेषण गर्दा तानसेनमा भन्दा पहिले नै प्रभासमा बस्तीको विकास भएको पाइन्छ। त्यसकारण तानसेनभन्दा परको बास भन्ने तर्क अलि नमिल्दो खालको देखिन्छ। दोस्रो तर्कका सम्बन्धमा सुन्दर गाउँका विष्णु प्रसाद पौडेलको भनाइ यस्तो छ- "राजा मणिमुकुन्द सेनले यो ठाउँमा एक शिवालय बनाई त्यसको नजिकमा स्नान गर्नका लागि सानो पोखरी बनाएका थिए। उक्त पोखरीमा भारतको कठियावाद प्रदेशमा रहेको प्रभास क्षेत्रबाट जल ल्याई मिसाएका हुनाले यस क्षेत्रलाई पनि प्रभास क्षेत्र भन्न थालिएको हो।"[१]

मध्यकालमा नेपालका तीर्थयात्रीहरू भारतका काशी, गया, बद्रीनाथ, जगन्नाथ र सोमनाथ जस्ता धार्मिक तीर्थस्थलमा जाने गरेको पाइन्छ। त्यतिखेर उपर्युक्त तीर्थस्थलहरूको ज्यादै महत्व भएकोले ती ठाउँमा पुग्न नसक्ने मानिसहरूका लागि आफ्नै राज्यमा त्यस्ता तीर्थस्थल स्थापना गर्ने परम्परा भएको पाइन्छ। पर्वत राज्यका राजा डिम्बबम मल्ल जगन्नाथका उपासक थिए। उनी भारतको उडिसा प्रान्तमा पर्ने

जगन्नाथ धामको दर्शन गर्न धेरैचोटी त्यहाँ पुगेका थिए । उनी बृद्ध अवस्थामा पुगेपछि उनको शरीर कुजो हुँदै गएको र त्यतिखेर यातायातको सुविधा नभएको कारणले त्यति टाढा जान असंभव देखेपछि उनले आफ्नो राज्यको गाजने भन्ने ठाउँमा भारतको जगन्नाथ धामबाट मूर्ति ल्याई जगन्नाथ मन्दिरको निर्माण गराएका थिए जसलाई 'जगन्नाथ क्षेत्र' भनिन्छ ।[२] त्यस्तै पाल्पाका राजा मणिमुकुन्द सेनले पनि यातायातको असुविधाको कारण भारतको काठियावाद पुगेर सोमनाथको दर्शन गर्न नसक्ने भएपछि त्यहाँको पवित्र जल ल्याएर होलाङदी र कमलपोखरीको दोभानमा बनेको शिवालय नजिक एक पोखरी खन्न लगाई उक्त जल मिसाउन लगाएका हुन भन्ने भनाई छ । प्रभास क्षेत्रको पवित्र जल मिसाइएको क्षेत्र हुनाले यस ठाउँलाई पनि 'प्रभास क्षेत्र' भनिएको हो भन्ने तर्क युक्तिसंगत नै देखिन्छ ।

नेपाली बृहत् शब्दकोशमा पनि प्रभासको अर्थ हिन्दूहरूको एक प्राचीन तीर्थ, सोम तीर्थ, अर्थात् भारतको कठियावाद प्रदेशमा रहेको एक प्राचीन तीर्थस्थल, प्रभास तीर्थ, भन्ने लेखिएको छ ।[३]

माथिका प्रसंगबाट प्रभास क्षेत्रको नामकरण धार्मिक तीर्थस्थलको रूपमा भएको हो भन्ने कुराको उदाहरण पाल्पामा सेनवंशी शासक रुद्रसेनको समयदेखि नै उक्त क्षेत्रमा शिवालय स्थापना गरिनु र उक्त शिवालय अद्यापि विद्यमान रहनु पनि हो ।

## ३. प्रभास क्षेत्रको धार्मिक महत्व

नेपाल विविध धर्म र संस्कृति भएको मुलुक हो तापनि यहाँ हिन्दु धर्मका शैव, बैष्णव र शाक्त संप्रदायको बाहुल्य भएको पाइन्छ । शैव संप्रदायका भक्तजनहरूले शिवालय निर्माण गरी शिव लिङ्ग स्थापना गर्ने परम्परा प्राचीन समयदेखि नै चल्दै आएको पाइन्छ । हिन्दु धर्मग्रन्थ वेद र पुराणमा शिवलाई हिमाल, पहाड र जङ्गलमा विचरण गर्ने, कैलाश पर्वतमा बासस्थान भएका तथा हिमालय पर्वतकी छोरी पार्वतीसँग विवाह सम्बन्ध भएका देवताको रूपमा चित्रण गरिएको छ । त्यसकारण नेपालीहरूका लागि महादेव निकै लोकप्रिय देवता मानिएका छन् । त्यही लोकप्रियका कारण नेपालमा प्राचीन समयदेखि शिवालय निर्माण गर्ने परम्परा चल्दै आएको हो भन्ने विद्वानहरूको भनाइ छ ।[४]

पाल्पामा सेनवंशको शासन स्थापना गर्ने रुद्रसेनले सर्वप्रथम शैव संप्रदायको विकास गराएको देखिन्छ । उनले पाल्पा राज्यको सिमाना रिब्दिकोटदेखि पूर्वतिर विस्तार गर्दै माडीसम्म पुऱ्याएपछि त्यहाँ एक शिवालय स्थापना गरेका थिए भन्ने विष्णु प्रसाद घिमिरेको कथन छ ।[५]

प्रभासको शिवालयमा भेटिएको एक शिलालेखमा पनि रुद्र सेनको नाम देखिएको छ ।[६] त्यसकारण प्रभासमा रुद्रसेनको समयमा नै शिवालय स्थापना भएको देखिन आउँछ । त्यही शिवालयको महिमा बढाउन मणिमुकुन्द सेनले एक पोखरी निर्माण गरी काठियावादको प्रभास क्षेत्रबाट पवित्र जल ल्याई मिसाएको हुनाले यो शिवालय क्षेत्रलाई पनि प्रभास भनिएको हुन सक्छ भन्ने कुरा माथि नै चर्चा भइसकेको छ । आजकल यो शिवालयलाई मणि मुकुन्देश्वर शिवालय भनिन्छ ।[७] यस शिवालयको नाममा रहेको गुठी जग्गालाई पनि मणि मुकुन्देश्वर गुठी भनी लेखिएको छ ।[८] उपर्युक्त तथ्यबाट के स्पष्ट हुन्छ भने रुद्रसेनको समयमा बनेको प्रभास क्षेत्रको शिवालयको महिमा मणिमुकुन्द सेनको समयदेखि निकै नै बढेको थियो ।

सेनवंशको शासनकालमा बनेको उक्त शिवालय जीर्ण भै भत्किएपछि त्यही ठाउँमा तानसेनका ज्ञानेश्वरप्रसाद पाण्डेले वि.सं.१९९४ मा नयाँ शिवालय निर्माण गराएका थिए भन्ने फणीन्द्र प्रसाद पाण्डेयको भनाइ छ ।[९] उनको भनाइ अनुसार त्यतिखेर भारतबाट एक सिद्ध महात्मा पाल्पा आएका थिए र भृगुतुङ्गेश्वर गुफामा बस्दथे । उनले हरेक प्रकारको रोग निको पार्छन् भन्ने प्रचार भएकोले ज्ञानेश्वरप्रसाद पाण्डे आफ्ना छोरा निर्जाप्रसादको खुट्टाको उपचार गर्न उनी कहाँ पुगे । ती सिद्ध महात्मा जसलाई बुलहवाका बाबा भनिन्थ्यो; उनको उपचारबाट आफ्नो छोराको खुट्टा ठिक भएपछि ज्ञानेश्वरले उनलाई उपचार खर्च दिन चाहे । तर ती महात्माले आफूलाई उपचार खर्च दिनु पर्दैन बरू वंशगोपाल मन्दिर जीर्णोद्धार गरिदिनुहोस् भन्ने आग्रह गरे । त्यही आग्रह अनुसार ज्ञानेश्वरले प्रभासको शिवालय र वंशगोपालको नयाँ मन्दिर बनाए । उक्त कुरा वंशगोपाल मन्दिरमा रहेको घण्टको अभिलेखबाट पनि स्पष्ट हुन्छ ।[१०] प्रभास क्षेत्रको महिमा बढाउन वीरशमशेरले पाल्पाको तैनाथवाला हुँदा आँपको बगैंचा निर्माण गराएका थिए भन्ने बुढापाकाहरूको भनाई छ ।[११] यो मन्दिरलाई बाहिरी पर्खालले घेर्ने र मन्दिर जीर्णोद्धार गर्ने काम वि.सं.२०५३ मा गंगाराम नेपालको सक्रियतामा प्रभास क्षेत्रका बासिन्दाले गरेका हुन् भन्ने नारायण गोपाल पाण्डेको भनाइ छ ।[१२]

यो मन्दिर शिखरशैलीमा निर्माण भएको छ । यो मन्दिरमा शिवलिङ्ग; नारायणको मूर्ति, मणिमुकुन्दको चक्रशिला र अन्य केही मूर्ति रहेका छन् । मणिमुकुन्द सेन देवघाटमा अलप भएपछि चक्रमा परिणत भए अनि उनको शरीर देवघाटमै रहन गयो र शीर भने उडेर यहाँ आइपुग्यो भन्ने जनविश्वास छ ।[१३] यस मन्दिरमा रहेको चक्रशिलालाई त्यसको प्रतिक मानिन्छ ।

यो मन्दिरमा शिवरात्रिमा जाग्राम बस्ने र धुनी जगाउने गरिन्छ । शिवरात्रिमा

प्रभास क्षेत्रमा ठूलो मेला लाग्छ । त्यतिखेर उखु, कन्दमूल, सखरकन्द, तरुल, पिडालु र बटुकको व्यापार चल्दछ । आजकाल कृषि प्रदर्शनी गरी कृषकहरूलाई प्रोत्साहन दिने कार्य पनि गरिन्छ । त्यसरी नै तीजमा पनि यहाँ मेला लाग्दछ । तीजमा उपवास बसी शिवको आराधना गरेमा इच्छा पूरा प्राप्त हुन्छ भन्ने जनविश्वास छ । शिवलिङ्गको उपासना, आराधना र पूजा गर्नुको मूल उद्देश्य सृष्टिको निरन्तरतालाई कायम राख्नु हो । सृष्टिको शुरुमा मानिसहरू बासना वा प्रजननको स्वरुप लिङ्गलाई अत्यन्त महत्वपूर्ण मान्दथे भन्ने भनाइ छ ।[१४] शैव मार्गमा शिव र शक्तिको प्रतीकको रुपमा लिङ्ग र योनीको पूजा गर्ने चलन भएको पाइन्छ । त्यसमा मूर्तिकारले अनेकौं मुखाकृति बनाइदिएको हुनाले मुखलिङ्गको झन् बढी महत्व छ । मुखलिङ्गहरू एकमुखे, चतुर्मुखी र पञ्चमुखी पनि हुन्छन् । नेपालको पशुपतिनाथको मन्दिरमा रहेको ज्योतिर्लिङ्ग चतुर्मुखी छ ।[१५] पाल्पाको प्रभास शिवालयमा रहेको शिवालय योनी र जलहरी सहितको छ तर यसमा कुनै मुखाकृति कुँदिएको छैन ।

प्रभास क्षेत्रको अर्को धार्मिक स्थल वंशगोपाल मन्दिर हो । यो मन्दिर मणिमुकुन्द सेनको समयमा निर्माण गरिएको र तानसेनका ज्ञानेश्वरले जीर्ण मन्दिरको ठाउँमा नयाँ मन्दिर बनाएको कुरा माथि नै उल्लेख भइसक्यो । यस मन्दिरमा रहेको चिल्लो र चम्किलो प्रस्तरबाट निर्मित वंशगोपालको मूर्तिले त्यतिबेलाको मूर्तिकलाको परिचय दिन्छ । हिन्दुहरू नारायणलाई जगत्का संरक्षकको रूपमा पूजा, आराधना गर्दछन् । नारायणका अनेक रूपमध्ये वंशगोपाललाई पनि एउटा रूप मानिएको छ । त्यही धारणा अनुसार कृष्णाष्टमी र अन्य पर्वमा यहाँ पूजा हुन्छ ।

## ४. प्रभास क्षेत्रको ऐतिहासिक महत्व

पाल्पाको प्रभास क्षेत्र ऐतिहासिक दृष्टिकोणले पनि अत्यन्त महत्वपूर्ण छ । पाल्पामा शासन गर्ने सेनवंशी राजहरूले प्रभासमा शिवालय र वंशगोपाल मन्दिर निर्माण गर्नुका साथै विर्ता, जागिर र बन्धकीको रूपमा रैतीदुनियाँलाई जग्गा दिंदा प्रभासलाई मुकाम बनाउने गरेको पाइएको छ । ती कागजपत्रहरूमा प्रभासलाई मुकाम भनी लेखिएकोले यो क्षेत्र सेनवंशको शासनकालमा अस्थायी राजधानी थियो भन्ने कुरा ज्ञात हुन्छ ।

पाल्पामा सेन वंशको शासन थियो भन्ने कुराको प्रमाण दिने दुई शिलालेख वि.सं. २०५३ पौषमा प्रभास शिवालयको बाहिरी पर्खाल निर्माण गर्ने सिलसिला जग खन्दा फेला परेका छन् । ती शिलालेख मध्ये एउटा त अस्पष्ट छ; अर्को शिलालेखमा

यस्तो व्यहोरा छ-

"मम शिवाय मनुमिन्द्र गते शाके १४१४ उदैए सू त्रा च

धर्मे ( ण रु दी वि र सेन राजा ) ये "[१६]

यो शिलालेखले रुद्रसेन पाल्पा राज्यका संस्थापक थिए र प्रभासको शिवालय उनको पालामा बनेको थियो भन्ने कुराको जानकारी दिनुका साथै उनले वि.सं. १५४९ भन्दा पहिले नै पाल्पामा आफ्नो राज्य स्थापना गरेका थिए भन्ने कुरा स्पस्ट भएको छ।

प्रभास क्षेत्र सेनकालीन अस्थायी राजधानी थियो भन्ने कुराको प्रमाण दिने थुप्रै कागजपत्रहरू फेला परेका छन् । कुनै कागजपत्र कहाँ बसेर लेखिएको हो भन्ने कुरा जनाउन मुकाम लेख्ने चलन हुन्छ । सेनकालमा जग्गा पजनी गर्ने काम प्रभासमा बसेर गरिन्थ्यो भन्ने कुरा त्यतिबेलाका कागजपत्रले स्पष्ट पारेका छन् ।

गन्धर्व सेनले वि.सं. १७८० मा धनाराम जोइसीलाई कुसुमखोलाको १४० मुरी खेत कुश विर्ता दिंदा लेखिएको कागजमा प्रभास मुकाम लेखिएको छ।[१७] त्यस्तै मुकुन्द सेन द्वितीयले वि.सं. १८२६ मा कृपाराम जैसीलाई बाधाखोक खेत २०० मुरी कुशविर्ता दिंदा लेखिएको कागजमा पनि मुकाम प्रभास उल्लेख गरिएको छ।[१८] महादत्त सेनको समयमा वि.सं.१८३९ मा चिन्तामणि खजाञ्चीलाई कुनसरेको १४० मुरी खेत कुशविर्ता दिंदा भिमिर्भा र बधौन्याको खेतको सट्टा राक्स्याको १२० मुरी खेत कुशविर्ता दिंदा पनि प्रभासमा बसेरै कागज लेखिएको छ।[१९] महादत्त सेनको पालामा वि.सं.१८४३ मा काशीराम जैसीलाई खरिदार पदमा नियुक्त गरी जागिर स्वरुप तेकर खायल १०० मुरी खेत दिंदा, वि.सं. १८४९ मा मनमुकुन्देश्वर लिंगका नाममा रविदासको खेत ३० मुरी गुठी राख्दा र वि.सं. १८५० मा माधौ ढकालका चालीस रुपैयाँ सरकार लागी सम्भौता गर्दा लेखिएको कागजमा पनि प्रभास मुकाम लेखिएको छ।[२०] सेनवंशका अन्तिम राजा पृथ्वीपाल सेनको राज्यकालमा वि.सं. १८५७ मा तुलाराम जैसीलाई रक्साहा खेत मुरी १२० विर्ता सदर गर्दा र नागेश्वर पण्डितलाई वि.सं. १८५८ मा रुवा, धरमपानी एवं सिरटौलीको ४०० मुरी खेत कुशविर्ता दिंदा पनि प्रभासमा बसेर कागज लेखिएको छ।[२१]

उपर्युक्त तथ्यबाट सेनवंशको शासनकालमा प्रभास अस्थायी राजधानी थियो भन्ने कुरा स्पष्ट हुन्छ। सेन वंशको शासन स्थापना गर्ने रुद्रसेनले शुरुमा रिब्दिकोटलाई आफ्नो राजधानी बनाएको र पछि सिलाङ्थोकलाई राजधानी कायम गरेको देखिन्छ जसलाई पुरानोकोट भनेर चिनिन्छ। गन्धर्व सेनदेखि महादत्त सेनसम्मका राजाहरूले गृष्मकालीन राजधानी यही सिलाङ्थोकलाई र शीतकालीन राजधानी बुटवललाई बनाएको पाइन्छ।[२२] महादत्त सेनले वि.सं. १८४२ मा श्रीनगरमा शहर बसालेपछि भने गृष्मकालीन राजधानी

पाल्पाबाट श्रीनगरमा सरेको देखिन्छ ।[२३] पृथ्वीपाल सेनको समयमा वि.सं.१८५८ देखि भने गृष्मकालीन राजधानी श्रीनगरको दक्षिणपूर्वी पाखामा रहेको तानसिङमा सर्दै गएको कुरा तत्कालीन कागजपत्रबाट थाहा हुन्छ ।[२४]

यसरी पाल्पा राज्यको गृष्मकालीन राजधानी रिब्दीकोट, सिलाङथोक (पुरानोकोट) र श्रीनगर हुँदै तानसिङतिर सर्ने क्रम चले पनि शीतकालीन राजधानी भने बुटवल (बटौली)मा नै कायम थियो । त्यस्तै हिउँदमा प्राय : पुस महिनामा प्रभासमा अस्थायी मुकाम बनाएर यो भेकको उठ्तीपुठती र अन्य कामको चाँजो मिलाउने गरेको पाइन्छ ।

माथिको चार्चाबाट के स्पष्ट हुन्छ भने रुद्र सेनको समयदेखि नै जब माडीफाँट पाल्पा राज्यको अधिनमा आयो त्यतिखेरदेखि नै उक्त क्षेत्रको कर तिरो उठाउन प्रभासमा अस्थायी मुकाम कायम हुन गयो । त्यतिखेर कमल पोखरी र होलाङदीको दोभानमा शिवालय स्थापना गरिएकोले उक्त शिवालय र माडीफाँटमा आवतजावत गर्न पायक पर्ने गरी लामडाँडा, कुनसरे र कमल पोखरीको शिरमा रहेको थुम्कामा दरबार निर्माण गरियो । उक्त स्थान हाल सुन्दरगाउँका दधिराम पौडेलको घर पछाडीको माधव भट्टराईको घरनेरको थुम्को हो जसलाई आजकाल 'दरबार थुम्का' भनिन्छ भन्ने स्थानीय बासिन्दाहरूको भनाइ छ ।[२५] यही थुम्कामा सेन राजाहरूको दरबार थियो । केही समय यहीँ बसेर प्रभास, माडी र त्यसको आसापासका जग्गाको रेखदेख र निरीक्षण गर्ने गरिन्थ्यो भन्ने कुरा स्पष्ट हुन्छ ।

## ५. निष्कर्ष

समय, परिस्थिति र मानवका इच्छा, आकांक्षा निरन्तर आइरहने परिवर्तनले कुनै पनि स्थानको महत्वलाई घटाउने र बढाउने गरिरहन्छ । मानव सभ्यताको विकास क्रममा कुनै बेला अग्लाअग्ला पहाडी भूभागको महत्व बढेको पाइन्छ भने कुनै बेला नदी किनार र समथर मैदानी इलाकाको महत्व बढेको पाइन्छ । खास गरेर खाद्यान्नको सहजै आपूर्ति हुने ठाउँ र सामरिक दृष्टिकोणले महत्वपूर्ण स्थानमा मानव सभ्यताको विकास बढी भएको देखिन्छ । यस दृष्टिकोणबाट विचार गर्दा तिनाउ र होलाङदी नदीको आसपासमा रहेका माडी र तेल्घाका उर्वर जमिनमा बढी खाद्यान्न उत्पादन हुने देखेर सेनवंशी राजाहरूले यहाँको जमिन आफ्नो नियन्त्रणमा राख्न प्रभासको एक थुम्कामा दरबार बनाई अस्थायी राजधानी बनाएको देखिन्छ । साथै शिवालयको महिमा बढाउन प्रभास क्षेत्रको जल ल्याई एक पोखरी निर्माण गराउनुका अतिरिक्त वंशगोपालको मन्दिर समेत निर्माण गराएर शैव र वैष्णव संप्रदायको महिमा बढाएको पाइन्छ । सेनवंशको

शासनकालभा स्थापना भएका उक्त मन्दिरहरू कला र संस्कृतिका परिचायक भएर रहेका छन् । तिनको उचित संरक्षण गर्नु हाम्रो कर्तव्य हो । धार्मिक, सांस्कृतिक र ऐतिहासिक महत्व भएको प्रभास क्षेत्रको समुचित विकास, संरक्षण र प्रचार प्रसारमा ध्यान पुऱ्याउन सकेमा पाल्पाको पर्यटन विकासमा निकै टेवा पुग्ने देखिन्छ ।

## टिप्पणी

[१] तानसेन नगरपालिका-१४, सुन्दरगाउँका विष्णुप्रसाद पौडेलसँग २०५५/०९/१०मा लिइएको अन्तरवार्ता ।

[२] ओमकारप्रसाद गौचन, "पर्वते मल्ल राजाहरूको वंशावली", **बुकी**, गुच्छा दुई, वि.सं.२०२६, पृ. ढ ।

[३] बालकृष्ण पोखरेल र अन्य (सम्पा.), **नेपाली बृहत् शब्दकोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं.२०४०, पृ. ८७९ र १३७७ ।

[४] जगदिशचन्द्र रेग्मी, **नेपालको धार्मिक इतिहास**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३९, पृ.४५ ।

[५] विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पदमा घिमिरे, वि.सं. २०४५, पृ. ३१ ।

[६] इश्वरीप्रसाद बस्याल, "पाल्पामा प्राप्त शक सम्बत् १४१४ को शिलालेख", अप्रकाशित लेख ।

[७] तानसेन नगरपालिका-१४, सुन्दरगाउँका ९१ वर्षीय लक्ष्मीप्रसाद पौडेलसँग २०५५/०९/१० मा लिइएको अन्तरवार्ता ।

[८] मालपोत कार्यालय पाल्पाको गुठी फाँटबाट प्राप्त जानकारी ।

[९] तानसेन नगरपालिका-३, का फणिन्द्रप्रसाद पाण्डेयसँग २०५५/०९/१० मा लिइएको अन्तरवार्ता ।

[१०] कर्णबहादुर बानियाँ, "तानसेनका मठ, मन्दिर, चैत्य तथा विहारहरूको कलाकौशल र गुठी व्यवस्था", त्रि.वि. शिक्षाध्यक्षको कार्यालय, कीर्तिपुरमा पेश गरेको अप्रकाशित लघुअनुसन्धान, वि.सं. २०५६, पृ.१४९ ।

[११] तानसेन नगरपालिका-१४, सुन्दरगाउँका ९१ वर्षीय लक्ष्मीप्रसाद पौडेलसँग २०५५/०९/१० मा लिइएको अन्तरवार्ता ।

[१२] तानसेन नगरपालिका-१४, प्रभासका नारायणगोपाल पाण्डेसँग २०५५/०९/१०मा लिइएको अन्तरवार्ता ।

[१३] तानसेन नगरपालिका-१४, सुन्दरगाउँका यज्ञप्रसाद पोखरेलसँग २०५५/०९/१० मा लिइएको अन्तरवार्ता ।

[१४] मोहनप्रसाद खनाल, **नेपाली कला**, काठमाडौं : साझा प्रकाशन, वि.सं. २०५२, पृ. १३ ।

[१५] प्रतापादित्य पाल, **द आर्टस् अफ नेपाल**, भाग १, निदर्ल्याण्डस् : इ.जे. ब्रिल, सन् १९७४,

पृ.८१ ।

[16] खानियाँ, **पूर्ववत्**, टि.नं. १०, पृ. १११ ।

[17] घिमिरे, **पूर्ववत्**, टि.नं. ५, पृ.१८७-८८ ।

[18] उही, पृ.१९५-९६ ।

[19] उही, पृ.२०५-२०७ ।

[20] उही, पृ.२०९, २१५-१७ ।

[21] उही, पृ.२२५-२७ ।

[22] उही, पृ.१८५-२१४ ।

[23] उही, पृ.२१६-२४ ।

[24] उही, पृ.२२८-२९ ।

[25] तानसेन नगरपालिका-१४, सुन्दरगाउँका ९१ वर्षीय लक्ष्मीप्रसाद पौडेलसँग २०५५/०९/१० मा लिइएको अन्तरवार्ता ।

# १४. तानसेन नगरको नामकरण सम्बन्धी चर्चाः एक ऐतिहासिक दृष्टि

## १. विषय प्रवेश

तानसेन नेपालको पश्चिममा पर्ने पाल्पा जिल्लाको सदरमुकाम हो । यो ठाउँ मध्यकालदेखि नै बहुचर्चित रहँदै आएको छ । राणा शासनकालमा यो स्थानलाई नेपालको दोस्रो राजधानीको रूपमा लिइन्थ्यो । त्यतिखेर नेपालको पश्चिमतिरको जङ्गी, निजामती तथा न्याय प्रशासन तानसेनबाटै चल्दथ्यो । आजकाल पनि उद्योग, व्यापार र पर्यटन विकासका दृष्टिले यो स्थानको महत्व बढीरहेको छ । यसरी नेपालको एक बहुचर्चित स्थानको रूपमा रहेको तानसेन नगरको नामकरण कसरी भएहोला भन्ने विषयमा जिज्ञासा लाग्नु स्वभाविकै हो । अत : यस लेखमा तानसेन नगरको नामकरण बारे देखिएका विविध अवधारणाहरूको विवेचना गरी ऐतिहासिक तथ्यको आधारमा वास्तविकता प्रकाशमा ल्याउने प्रयास गरिन्छ ।

## २. केही अवधारणाहरूको चर्चा

'तानसेन' नगरको नामकरण कसरी भयो भन्ने सम्बन्धमा तीन थरी मत देखा परेका छन्-

(१) तानसेन नगरको नामकरण सम्बन्धी पहिलो अवधारणा जनश्रुतिमा आधारित छ । जनश्रुति अनुसार प्राचीन समयमा यस ठाउँमा एउटा ठूलो पोखरी थियो । त्यस पोखरीमा गजगजे हिलो भएको हुनाले आहाल बस्न जाँदा एउटा भैंसी डुब्यो । अनि त्यो भैंसीलाई सिङमा समातेर तानेको हुनाले यस ठाउँको नाम 'सिङ तान' रहन गयो । कालान्तरमा सिङतानबाट 'तान सिङ' र त्यसको अपभ्रंश भइ 'तानसेन' बन्न गएको हो भन्ने यस मतका अनुयायीहरूको भनाइ छ ।

(२) दोस्रो अवधारणा अनुसार 'तानसेन' नगरको नामकरण सेनवंशी प्रख्यात राजा ताम्रसेनको नामबाट भएको हो । मध्यकालमा पाल्पामा सेनवंशी राजाहरूले राज्य गर्दथे । ती राजाहरूमा 'ताम्रसेन' नामका राजा निकै ख्याति प्राप्त थिए । उनकै नामबाट यस ठाउँको नाम 'ताम्रसेन' राखिएको थियो । समय बित्दै जाँदा ताम्रसेन शब्द बिकृत भइ 'तानसेन' बन्न गएको हो भन्ने यस मतका अनुयायीहरूको तर्क छ ।

(३) तेस्रो अवधारणा अनुसार 'तानसेन' नगरको नामकरण मगर शब्द 'टानसिङ'बाट

भएको हो । यस मतका समर्थकहरूको तर्क अनुसार यो मगराँत क्षेत्र हो । यहाँ प्राचीनकालदेखि नै मगरहरूको बस्ती थियो । सेनवंशी राजा रुद्रसेनले पाल्पामा आफ्नो राज्य स्थापना गर्नुभन्दा पहिले र खसहरूले यो क्षेत्रमा आफ्नो प्रभाव जमाउनुभन्दा पहिले यो क्षेत्रमा मगर मुखियाका स-साना 'थुम' राज्यहरू थिए । साथै यस क्षेत्रका धेरैजसो वनपाखा मगरहरूले आवाद गरेको हुनाले यहाँका धेरैजसो ठाउँहरूको नाम मगर भाषाबाट रहन गएका छन् । तानसेन आसपासका क्षेत्रहरू जस्तै- होलाङदी, वर्टुङ, चिर्टुङ, बराङदी आदि नामहरू मगर भाषाबाट रहन गएका छन् । अत : 'टानसिङ' पनि मगर भाषाको शब्द हो भन्ने उनीहरूको तर्क छ ।

## ३. प्रस्तुत अवधारणाहरूको विवेचना

(१) माथि उल्लेखित पहिलो मत केवल जनश्रुतिमा मात्र आधारित छ । यसको समर्थनमा कुनै पनि विद्वानले कलम चलाएको पाइँदैन । साथै प्राचीनकालमा तानसेनको आसपासमा बस्ती नभइ जङ्गल भएको र यस क्षेत्रमा भैंसी पाल्ने समुदायको बसोबास थियो भन्ने कुनै प्रमाण फेला नपरेको हुँदा यो अवधारणा स्वतः काल्पनिक ठहर्न गएको छ ।

(२) दोस्रो मत अर्थात् सेनवंशी राजा ताम्रसेनको नामबाट तानसेनको नाम रहन गएको हो भन्ने तर्क जल्दोबल्दो रूपमा रहेको छ । किनभने यो मतको पक्षमा धेरै विद्वानहरूले कलम चलाएका छन् । अत : यस मतका अनुयायीहरूको तर्कलाई विशेष रूपमा विवेचना गर्नुपर्ने देखिन्छ ।

पाल्पाको परिचय दिने उद्देश्यले प्रकाशित **यो हो पाल्पा** नामक पुस्तकमा 'सेनवंशी राजा ताम्रसेनले श्रीनगर बसांएकोले (राजधानी बनाएकोले) यस नगरको नाम ताम्रसेन रह्यो पछि अपभ्रंश भई तानसेन भयो' भन्ने कुरा उल्लेख गरिएको छ ।[१]

त्यस्तै नेपालको ऐतिहासिक, भौगोलिक, र अन्य विविध विषयमा जानकारी गराउने उद्देश्यले प्रकाशित **मेचीदेखि महाकाली** भन्ने ग्रन्थमा पनि 'मध्यकालीन सेनवंशी राजा ताम्रसेनले बसालेको बस्ती भनी तानसेन कहलिएको...' भन्ने कुरा लेखिएको छ ।[२]

त्यसरी नै नेपालका विभिन्न स्थानहरूको नाम कसरी रहन गयो भन्ने विषयमा जानकारी गराउने उद्देश्यले तयार गरिएको **स्थाननाम कोश** नामक ग्रन्थमा समेत 'ताम्रसेन' भन्ने शब्दलाई नै मूल शब्द मानेर ताम्रसेनबाट नै 'तानसेन' शब्दको उत्पत्ति भएको

कुरा किटान गरिएको छ । उक्त ग्रन्थमा 'सेनवंशी राजा ताम्रसेनले बसालेको बस्ती हुँदा ताम्रसेन कहलिएको र कालान्तरमा अपभ्रंश भई तानसेन रहन गएको हो' भनिएको छ ।[२] विनोद श्रेष्ठले 'तानसेन:एक परिचय' भन्ने लेखमा 'ताम्रसेनको नामबाट तानसेन नगरको नामकरण भएको कुरा इतिहासमा उल्लिखित छ' भनेका छन् ।[४]

योगी नरहरिनाथको भनाइ अनुसार 'मुकुन्दसेन राजाको वंशमा तानसेन नाम भएका राजा थिए । तिनैले मुकुन्दसेनको भैरवस्थानको राजधानीलाई तानसेन श्रीनगरमा सारेका थिए; त्यसकारण तानसेन नाम रहन गएको हो ।'[५] यसरी अधिकांश विद्वानहरूले यो तर्कलाई नै सही मानेको हुनाले यसका विषयमा गम्भीर बहस चलाउनु पर्ने भएको छ ।

पहिलो कुरा सेनवंशी राजाहरूमा ताम्रसेन नाम गरेका राजा थिए कि थिएनन् भन्ने कुराको निक्र्यौल गर्नुपर्ने भएको छ । यस वंशको बारेमा जानकारी दिने शङ्करमान राजवंशीको सम्पादकत्वमा प्रकाशित **सेन-वंशावली** छ । यस वंशावलीमा प्राचीन-सेनवंशावली, भवदत्तकृतसेनवंशावली, गंगाविष्णुकृतसेनवंशावली र सेनवंशावली गरी चारवटा वंशावली छन् । यहाँ दिइएका वंशावलीमा ताम्रसेनको नाम कहींकतै उल्लेख छैन ।[६] त्यस्तै विष्णुप्रसाद घिमिरेले पाल्पाका सेनवंशी राजाहरूको बारेमा अनुसन्धान गरेर **पाल्पा राज्यको इतिहास, भाग १** प्रकाशित गरेका छन् । यस अनुसन्धनात्मक ग्रन्थमा पनि ताम्रसेन नाम गरेका राजाको उल्लेख छैन ।[७] त्यसकारण सेन वंशावलीमा नामनिसान नभएका र अनुसन्धानबाट पनि पत्ता नलागेका राजाको नामबाट तानसेन जस्तो प्रसिद्ध स्थानको नामकरण भए होला भनेर पत्याउन सकिने आधार छैन ।

दोस्रो कुरा पाल्पाका सेनवंशी राजाहरूमा 'मणि मुकुन्द सेन प्रथम' सबैभन्दा लोकप्रीय र प्रख्यात भएको कुरा इतिहासमा उल्लेख छ । त्यति मात्र होइन; पाल्पाको भैरवस्थान मन्दिर, रिडीको हृषिकेश मन्दिर, बुटवलको गढी र देवघाटको मुकुन्देश्वर शिवालय मणि मुकुन्द सेनका कृतिका ज्वलन्त उदाहरणका रूपमा अद्यापि विद्यमान छन् ।[८] यदि ख्याति प्राप्त राजाको नामबाट तानसेनको नामकरण गरिएको भए 'मुकुन्दपुर' राख्नु पर्ने हो । जस्तै कि नवलपरासीको गैंडाकोटनेरको एउटा गाउँको नाम 'मुकुन्दपुर' राखिएको छ ।

तेस्रो कुरा सेनकालका कागजपत्रहरूमा 'तानसिंग' लेखेको पाइन्छ ।[९] यदि ताम्रसेनको नामबाट यस ठाउँको नाम राखिएको भए सेनवंशको शासनकालमा सो शब्दको प्रयोग हुने थिएन ।

उपर्युक्त तथ्यहरूको आधारमा के भन्न सकिन्छ भने तानसेन नगरको नामकरण सेनवंशी राजा 'ताम्रसेन'बाट राखिएको होइन ।

(३) तेस्रो मतका अनुयायीहरूले यो क्षेत्रको आसपासमा प्राचीनकालदेखि नै मगर जातिको बसोबास भएकोले तानसेनमा बस्ती बस्नुभन्दा पहिले नै उनीहरूले यो ठाउँमा दाउराघाँस लिन आउँदा आफ्नो भाषामा यसको नामकरण गरेका थिए भन्ने तर्क पेश गरेका छन् ।

यो अवधारणाका पक्षधरहरूमा संस्कृतका प्रसिद्ध विद्वानहरू माधवप्रसाद देवकोटा र टीकाराम पन्थी पनि छन् । माधवप्रसाद देवकोटाले तानसेनको नामकरण बारे **लेखमाला** नामक ग्रन्थमा यस्तो लेखेका छन्-'यो नगरको पुरानो नाम 'तानसिङ' हो । मगरभाषामा ठूलालाई 'तान' र बस्तीलाई 'सिङ' भनिन्छ । अत : पूरा अर्थ भयो-ठूलो बस्ती ।'[२०]

टीकाराम पन्थीको भनाइ यस्तो छ- 'पाल्पाका समस्त स्थान नाम, गाउँ, वन, नदी, थुम्का आदिका नाम मगराँती भाषामा नै छन् । यसलाई सेनको नामसँग जोडेर आगामी सन्ततिलाई भ्रममा पार्नुपर्ने कुनै आवश्यकता देखिदैन ।'[२१]

कुनै स्थानको नामकरण कसरी हुन्छ भन्ने सन्दर्भमा **स्थाननाम कोश**मा यस्तो लेखिएको छ- 'जनताजनार्दन नै स्थान नामको स्रष्टा हो । त्यसैले स्थाननाम हाम्रो भाषिक तथा सास्कृतिक निधि हो । वास्तवमा भन्ने हो भने जुनसुकै नाम पनि कुनै न कुनै जातजातिको रचनात्मक सिर्जनाको परिचायक हो ।'[२२]

साथै स्थाननामको भाषिक व्याख्या कसरी गर्ने भन्ने विषयमा उक्त पुस्तकमा यस्तो लेखिएको छ- 'नेपालका स्थाननामहरूको स्रोतलाई दुई भागमा विभाजित गर्न सकिन्छ । देशको उत्तरी भेकतिर तिब्बती-बर्मेली भाषा परिवारसँग सम्बद्ध स्थाननामहरू पाइन्छन् भने दक्षिणी भेकतिर चाहीं भारोपेली भाषा परिवारसित सम्बद्ध स्थाननामहरूको प्राचुर्य छ । पहिलो वर्गका स्थाननामहरू किराँती(राई, लिम्बु), मगर, गुरुङ, तामाङ, तिब्बती(सेर्पा, भोटे, सौका), थकाली, नेवारी आदि भाषाहरूमा छन् भने दोस्रो वर्गका स्थाननामहरूको मुहान नेपाली(खस), मैथिली, भोजपुरी, थारू, अवधी, हिन्दी, अरबी र संस्कृत भाषाहरू हुन । प्रथम वर्गमा पर्ने स्थाननामहरूको अन्तमा 'लङ (लुङ)', 'जोङ(जुङ)', 'ला', 'लग्ना', 'दि', 'खु', आदि प्रत्यय रहन्छन् । मोटामोटी रूपमा 'ङ' कारमा अन्त हुने सबै स्थाननामहरू यसै वर्गभित्र पर्दछन् । दोस्रो वर्गका स्थाननामहरूको अन्त्यमा 'टार', 'बेँसी', 'चौर', 'गढी', 'कोट', 'गञ्ज', 'पुर', 'बजार', 'गाउँ', आदि आउँदछन् ।'[२३]

उपर्युक्त भनाइलाई दृष्टिगत गर्दा के स्पष्ट हुन्छ भने 'तानसिङ' मगर भाषाको शब्द हो । किनकि यसको अन्त्यमा 'ङ' कार आएको छ । अर्को कुरा लुम्बिनी, गण्डकी र धवलागिरि भेक बढी मात्रामा मगर जातिको बसोबास भएको क्षेत्र हो । प्राचीनकालदेखि मध्यकालको पुर्वाद्धसम्म यस क्षेत्रमा मगर राजाहरूका 'थुम' राज्यहरू भएकोले यस क्षेत्रलाई 'मगराँत' भनिन्छ । **स्थाननाम कोशमा** भनिए झैं 'कुनै स्थानको नामकरण सम्बन्धी ब्याख्या भाषिक आधारमा' गर्ने हो भने तानसेनको नामकरण मगर भाषाबाट भएको हो भन्ने ठहर गर्नुपर्ने हुन्छ । किनकि तानसेनको आसपासका अधिकांश स्थानहरूका नाम जस्तै-होलाङदी, बराङदी, हाङगादी, बर्टुङ, चिर्टुङ आदि नाम पनि मगर भाषाबाट आएका छन् ।

उपर्युक्त तथ्यहरूको आधारमा के भन्न सकिन्छ भने 'तानसेन्' मगर भाषाको शब्द हो । यो शब्दलाई कसैले 'तानसिङ' भनेका छन् भने कसैले 'टानसिङ' भनेका छन् । त्यस्तै मगर भाषामा यो शब्दको अर्थ के हुन्छ भन्ने विषयमा पनि विद्वानहरूको मत बाझिएको छ । केही विद्वानहरूले 'तानसिङ' को अर्थ 'ठूलो बस्ती' हुन्छ भनेका छन् भने केही विद्वानहरूले 'उत्तरतिरको बस्ती' हुन्छ भनेका छन् । त्यस्तै कसैले 'ठूला-ठूला काठ दाउरा' भन्ने अर्थ लगाएका छन् । मातृ भाषा मगर भएका विद्वानहरूले 'तानसिङ' को अर्थ 'अग्ला-अग्ला सुरिला रूख भएको जङ्गल' हुन्छ भनेका छन् । उनीहरूको विचारमा 'तान्तान्तै' को अर्थ 'अग्लो न अग्लो सुरिलो' र 'सिङ' को अर्थ 'रूख' भन्ने हुन्छ ।[१४] यस विषयमा निर्मल श्रेष्ठले केही फरक मत राख्दै मगर भाषामा 'त' उच्चारण नहुने भएकोले यो शब्द 'तानसिङ' होइन 'टानसिङ' हो भनेका छन् । उनको विचारमा मगर भाषाको 'टानसिङ' शब्दलाई जनजिब्रोले 'तानसिङ' भन्न थालेको हो र त्यसलाई सच्च्याएर विद्वानहरूले 'तानसेन' भन्न थालेका हुन ।[१५]

यसबाट के स्पष्ट हुन्छ भने सेनवंशी राजा महादत्त सेनले वि.सं.१८४२ मा श्रीनगरमा बस्ती बसालेर आफ्नो राजधानी भैरवस्थाननेरको सिलाङथोक पुरानोकोटबाट यस ठाउँमा सार्नुभन्दा पहिले यहाँ जङ्गल थियो । अनि यो जङ्गलमा अग्ला-अग्ला सुरिला रूख भएकोले यस स्थानलाई स्थानीय मगर बासिन्दाले 'तानसिङ' वा 'टानसिङ' भन्न थाले । किनभने मगर भाषामा 'टानसिङ' को अर्थ 'कर्घा बनाउने काठ' भन्ने हुन्छ ।[१६] कर्घा बनाउन सुरिलो र सर्लक्क परेको काठ चाहिन्थ्यो । त्यस्तो काठ यहाँको जङ्गलमा पाइने हुनाले त्यतिखेर यसको आसपासका बसिन्दाले यस स्थानलाई 'टानसिङ' भन्ने गरेको र कालान्तरमा 'तानसिङ' हुँदै 'तानसेन' भन्न थालिएको कुरा ऐतिहासिक दृष्टिले सान्दर्भिक र तथ्यपरक देखिन्छ ।

## ४. निष्कर्ष

तानसेन नगरको नामकरण सम्बन्धमा प्रस्तुत भएका विविध अवधारणाहरूको अध्ययन र विश्लेषणबाट 'तानसिङ' अर्थात् 'टानसिङ' मगर भाषाबाट आएको शब्द हो भन्ने कुरा स्पष्ट हुन्छ। **स्थाननाम कोश**मा दिइएको परिभाषा अनुसार 'जनताजनार्दन नै स्थाननामको स्रष्टा हो।' अर्थात् जुन ठाउँमा जुन जातिको पहिलो बसोबास शुरु भयो त्यहाँका वन, पाखा, जङ्गल, नदी, हिमाल र पहाडका नाम त्यो जातिको भाषाबाट रहनु स्वभाविकै हो। पाल्पा मगरात क्षेत्र हो। मगरले बोल्ने भाषा भोट-बर्मेली परिवारको भाषा हो। **स्थाननाम कोश**मा दिइएको परिभाषा अनुसार भोट-बर्मेली परिवारबाट आएको शब्दको अन्त्यमा 'ङ' कार हुन्छ। 'तानसिङ' अथवा 'टानसिङ' शब्दको अन्त्यमा 'ङ' कार आएको छ। त्यसकारण यो शब्दलाई मगर भाषाको शब्द हो भन्ने ठहर गर्न सकिन्छ। मगर भाषामा यसको अर्थ 'अग्ला-अग्ला सुरिला रूख भएको जङ्गल' अर्थात् 'कर्पा बनाउने काठका रूख भएको जङ्गल' भन्ने हुन्छ। यसबाट के निष्कर्षमा पुग्न सकिन्छ भने तानसेनमा बस्ती बस्नुभन्दा पहिले यहाँ कर्पा बनाउने काठका रूख भएको जङ्गल थियो। त्यसकारण यसको आसपासका बासिन्दाले यो ठाउँलाई 'कर्पा बनाउने काठ पाइने जङ्गल' भनेर 'टानसिङ' भन्दथे। सेनवंशी राजा महादत्त सेनले तानसेनको सिरानमा रहेको डाँडामा बस्ती बसालेर 'श्रीनगर' नाम दिइ भैरवस्थान नजिक सिलाङथोक पुरानोकोटमा रहेको आफ्नो राजधानी सोही नगरमा सारेपछि त्यसको आसपासमा बस्ती विस्तार हुन थाल्यो। साथै यो क्षेत्रमा मगर र खस भाषाको समिश्रण हुन गएपछि श्रीनगरको दक्षिणी पाखामा रहेको यो स्थानलाई 'तानसिङ' भन्न थालियो। त्यसै भएर सेनकालीन कागजमा यसको नाम 'तानसिंग' लेखिएको छ। यो 'तानसिङ' भन्ने शब्दलाई विद्वानहरूले 'तानसेन' बनाइ दिए। त्यसकारण अहिले पनि साधारण जनताले यो ठाउँलाई 'तानसिङ' भन्दछन् तर लिखित रूपमा चाहे साहित्य होस वा सामान्य पर्चा जहाँ पनि 'तानसेन' लेख्ने गरेको पाइन्छ।

## टिप्पणी

[१] **यो हो पाल्पा**, श्री ५ को सरकार, गृहपञ्चायत मन्त्रालय, योजना, प्रगति तथा तथ्याङ्क शाखा, वि.सं. २०२५, पृ.१७।

[२] **मेचीदेखि महाकाली**, भाग ३, काठमाडौं : श्री ५ को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, वि.सं. २०३१, पृ.७७८।

[३] कृष्णप्रकाश श्रेष्ठ(सम्पा.), **स्थाननाम कोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा

प्रतिष्ठान, वि.सं. २०४४, पृ.५६ ।

४ विनोद श्रेष्ठ, "तानसेन : एक परिचय", **श्रीनगर**, अङ्क १, वि.सं. २०२९, पृ. ३ ।

५ योगी नरहरिनाथ, **हाम्रो देशदर्शन**, स्वयं प्रकाशित, वि.सं. २०३२, पृ. ३३ ।

६ शङ्करमान राजवंशी(सम्पा.), **सेनवंशावली**, काठमाडौं : श्री ५ को सरकार, पुरातत्व विभाग, वीर पुस्तकालय, वि.सं. २०२०, पृ. १-४० ।

७ विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास**, भाग १, चितवन : पद्मा घिमिरे, वि.सं. २०४५, पृ. ३० ।

८ उही, पृ. ३८ ।

९ उही, पृ. २२८-२९ ।

१० माधवप्रसाद देवकोटा, **लेखमाला**, स्वयं प्रकाशित, वि.सं. २०३८, पृ.१०२ ।

११ टीकाराम पन्थी, **केही जनश्रुतिहरू**, गुल्मी : किरण पुस्तकालय, वि.सं. २०४२, पृ.२४ ।

१२ श्रेष्ठ, **पूर्ववत्**, टिप्पणी नं. ३, पृ. ग ।

१३ उही, पृ. घ ।

१४ लोकबहादुर थापा मगर र विष्णुकुमार पल्ली मगरसँग मिति २०५१/०४/१७ मा लिइएको अन्तर्वार्ता ।

१५ निर्मल श्रेष्ठ, "टानसिङ तानसिङ तानसेन", **पाल्पा दर्शन**, वि.सं.२०६१, पृ.६९-७२ ।

१६ हर्षबहादुर बुडा मगर(सम्पा.), **मगर-रोमन-नेपाली-लिम्बु-अङ्ग्रेजी संक्षिप्त शब्दकोश**, काठमाडौं : पुष्पावती बुडा मगर, वि.सं.२०५०, पृ.३१ ।

# सन्दर्भ-सामग्री


## अप्रकाशित सामग्री

**मालपोत कार्यालय, पाल्पाका सामग्री –**

"९५ सालमा खडा भयाको १० वर्खे मोठ लम्बरी किताप", (वि.सं. १९९५ सालमा पाल्पा जिल्लाका मौजा अनुसारको पाखो जग्गाको तिरो असुल गर्न तयार गरिएको लगत किताब । यो किताबका दुई भाग छन् ।)

"पाल्पा तीन सौंचाको सवाल", (श्री ३ महाराज र कमाण्डर इन चिफले पाल्पा तीनसौंचा तहबिल अड्डाका हाकिम, कारिन्दाका नाममा वि.सं. १९९२-२००६ सालसम्म जारी गरेका सनद सवालहरूको सङ्कलन)

"पाल्पा माल सवाल", (श्री ३ महाराज र कमाण्डर इन चिफबाट पाल्पा माल अड्डाका हाकिम, कारिन्दाको नाममा जारी गरिएका वि.सं. १९९१-२००७ सालसम्मका सवालहरूको सङ्कलन)

**राष्ट्रिय अभिलेखालय, काठमाडौंका सामग्री–**

पाल्पाको प्रशासनिक, आर्थिक र सामाजिक स्थितिसँग सम्बन्धित चिठीपत्र, ताम्रपत्र, लालमोहर, सनद र सवालहरूको माइक्रोफिल्म : रिल नं. 'बी' उजिरसिंह थापाले तयार गरेको ऐनको मस्यौदा । रिल नं.'डि एन ए',राष्ट्रिय अभिलेखालयमा सुरक्षित चिठीपत्र, लालमोहर, सनद र सवाल । रिल नं.'ई' रिसर्च सेन्टरबाट (रेग्मी रिसर्च प्रोजेक्ट) प्राप्त मालपोत विभाग, लगत फाँटका कागजपत्रहरूको नक्कल । रिल नं.'के' गुठी संस्थानबाट प्राप्त चिठीपत्र, लालमोहर, सनद र सवाल ।

राणा शासनकालमा जागिरदारहरूको नियुक्ति र थमौतीको विवरण लेखिएको "कम्याण्डरी किताब", पहाड पूर्व-पश्चिम गौंडा ।

**नेपाली सेनाको जंगी अड्डा पुस्तकालय, काठमाडौंका सामग्री –**

"जंगी कामको खटनपटनका लागि जारी गरिएका खड्ग निशान रुक्का, सनद, सवाल र चिठीपत्रहरूको नक्कल किताब", तीन भाग ।

**व्यक्तिगत सङ्कलनमा रहेका कागजपत्र-**

पाल्पा जिल्ला तानसेन नगरपालिका-३ का द्वारिकाप्रसाद शर्माको सङ्कलनमा रहेको "पाल्पा गोर्खेकोटका लछिन थापाले बुद्धिधर उपाध्यायसँग ऋण लिंदा हलगोरु धितो राखेको वि.सं. १९२८ आषाढ शुदी ११ को कागज", ।

पाल्पा जिल्ला मस्याम गा.वि.स.-१ का रामेश्वर श्रेष्ठको सङ्कलनमा रहेको "पाल्पा गौंडाका तैनाथवाला लेफ्टीनेन्ट जनरल वीर शमशेर जङ्ग राणाले पाल्पा माझटोल बस्ने विष्णुसिं, भाजु नरसिंलाई वि.सं. १९३३ मा सेर्मा, साउने फागु माफी गरि दिएको कागज",

पाल्पा जिल्ला तानसेन नगरपालिका-६, वसन्तपुरका निर्मल श्रेष्ठको सङ्कलनमा रहेका कागज-

"बुटौल चौतारा बजार महसुल अड्डाको वि.सं. १९९३ वैशाखको रसिद", ।

"पाल्पा तानसेनका चौधरी ज्योति नारायण श्रेष्ठले बसन्तपुरका गोपी नारानबाट घरगन्दी रकम बुझिलिएको वि.सं. १९९० साल भाद्र ७ गतेको रसिद",।

## विद्यावारिधि शोधप्रबन्ध

**नेपाली**

जी.सी., सूर्यबहादुर, "पाल्पाको मगर सँस्कृति" त्रि.वि.मानविकी तथा सामाजिकशास्त्र संकाय डीनको कार्यालय कीर्तिपुरमा पेश गरेको शोधप्रबन्ध, वि.सं.२०६७ ।

## स्नातकोत्तर शोधपत्र

**नेपाली**

बस्याल, दिपक, "पाल्पाको साहित्यिक रूपरेखा", त्रिभुवन विश्वविद्यालय, नेपाली केन्द्रीय शिक्षण विभागमा प्रस्तुत स्नातकोत्तर शोधपत्र, वि.सं. २०५६ ।

## लघु-अनुसन्धान

**अङ्ग्रेजी**

थापा, शंकर, "सम आस्पेक्ट्स् अफ मुस्लिम माइनरिटी इन नेपाल", ए रिसर्च समिटेड टु रिसर्च डिभिजन अफ टि.यू., सन् १९९७ ।

**नेपाली**

उदय चित्रकार, सुलोचना, "तानसेनका बौद्ध धर्मावलम्बी नेवारहरूको संस्कृति", त्रि.वि., मानविकी तथा सामाजिक शास्त्र संकाय डीनको कार्यालयमा पेश गरेको लघु-शोधपत्र, वि.सं. २०५७ ।

बानियाँ, कर्णबहादुर, "तानसेनका मठ, मन्दिर, चैत्य तथा विहारहरूको कलाकौशल र गुठी व्यवस्था", त्रि.वि. शिक्षाध्यक्षको कार्यालय, अनुसन्धान महाशाखामा पेश गरेको लघु-शोधपत्र, वि.सं. २०५६ ।

श्रेष्ठ, टेकबहादुर, "गलकोट, अर्घा, खाँची तथा पैयुँ राज्यको ऐतिहासिक रूपरेखा", नेपाल र एशियाली अनुसन्धान केन्द्र, कीर्तिपुरमा पेश गरेको शोधपत्र, वि.सं. २०४० ।

**विविध**

"रिपोर्ट अन रिअर्गनाइजेसन अफ डिस्ट्रीक्ट एडमिनिस्ट्रेशन इन नेपाल, सन् १९५६", सेन्ट्रल लाइब्रेरी अफ टि.यू. ।

**रेग्मी रिसर्च सेरिज**, वर्ष १०, नं. ६, सन् १९७८ ।

वर्ष १८, नं. १२, सन् १९८६ ।

**प्रकाशित सामग्री**

**अङ्ग्रेजी पुस्तकहरू**

अधिकारी, कृष्णकान्त, **नेपाल अण्डर जंगबहादुर १८४६-१८७७**, भोलुम १, काठमाण्डु : बुकु, सन् १९८४ ।

अधिकारी, सूर्यमणि, **द खस किंगडम**, जयपुर : निराला पब्लिकेशन्स, सन् १९८८ ।

अग्रवाल, हेमनारायण, **द एड्मिनिस्ट्रेटिभ सिस्टम अफ नेपाल फ्रम ट्रेडिशन टु मोडर्निटी**, न्यू दिल्ली : विकास पब्लिशिङ हाउस, सन् १९७६ ।

अर्याल, कृष्णराज, **एजुकेशन फर द डेभलपमेन्ट अफ नेपाल**, काठमाण्डु : शान्ति प्रकाशन, सन् १९७० ।

एट्किन्सन, इडविन टि., **कुमाउ हिल्स**, दिल्ली : कस्मो पब्लिकेशन्स, सन् १९७४ ।

बज्राचार्य, भद्ररत्न, **बहादुर शाह द रिजेन्ट अफ नेपाल (सन् १७८५-१७९४)**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९२ ।

बज्राचार्य, धनबज्र र कमलप्रकाश मल्ल, **द गोपालराजवंशावली**, काठमाण्डु : नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स, सन् १९८५ ।

बाँस्कोटा, पुरुषोत्तम, **द गोरखा कनेक्सन**, जयपुर : निराला पब्लिकेशन, सन् १९९४ ।

विष्ट, डोरबहादुर, **पिपुल अफ नेपाल**, (फस्ट एडिसन), काठमाण्डु : डिपार्टमेन्ट अफ पब्लिसिटी, मिनिष्ट्री अफ इन्फर्मेसन एण्ड ब्रोडकास्टीङ, हिज म्याजेस्टीज गभर्नमेन्ट अफ नेपाल, सन् १९६७ ।

बुडा मगर, हर्षबहादुर(सम्पा.), **मगर-रोमन-नेपाली-लिम्बु-अङ्ग्रेजी संक्षिप्त शब्दकोश**,

काठमाडौँ : पुष्पावती बुडा मगर, वि.सं.२०५० ।
चौधरी, के.सी., **एङ्लो-नेप्लिज रिलेशन्स फ्रम द अर्लिस्ट टाइम्स् अफ ब्रिटिश रुल इन इण्डिया टिल द गोर्खा वार**, कलकत्ता : मोडर्न बुक एजेन्सी, सन् १९६० ।
फुरर-हेमण्डर्फ, क्रिस्टोफ भान, **हिमालयन ट्रेडर्स : लाइफ इन हाइल्याण्ड नेपाल**, लण्डन : जोन मुरे, सन् १९७५ ।
जिमलेट, जी.एच.डी., **नेपाल एण्ड द नेप्लिज**,(रिप्रिन्ट), दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३ ।
ग्रियर्सन,जी.ए., **लिङ्ग्वुएस्टिक सर्भे अफ इण्डिया**, भोलुम १९,पार्ट ४, कलकत्ता : सन् १९१६ ।
हेमिल्टन, फ्रान्सिस बुचानन्, **एन एकाउन्ट अफ द किंगडम अफ नेपाल एण्ड अफ द टेरिटरिज एनेक्सड् टु दिस डोमिनियन बाइ द हाउस अफ गोरखा**, (रिप्रिन्ट), न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिस, सन् १९८६ ।
हेइडे, सुसाने भान्डोर, **द थकालिज अफ नर्थ वेस्टर्न नेपाल**, काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९८८ ।
हड्सन, ब्रेन हुटन, **एस्सेज अन द ल्याङ्गेज, लिटेरेचर एण्ड रिलिजन अफ नेपाल एण्ड तिब्बत**, पार्ट -२, (रिप्रिन्ट), न्यू दिल्ली : मंजुश्री पब्लिशिङ हाउस, सन् १९७२ ।
__________, **मिसैलेनियस एस्सेज रिलेटिङ टु इण्डियन सब्जेक्टस्**, भोलुम -२, (रिप्रिन्ट), न्यू दिल्ली : एशियन एजुकेशनल सर्भिस, सन् १९९२ ।
हण्टर, विलियम विल्सन, **द इण्डियन इम्पायर, इट्स् पिपुल, हिस्ट्री एण्ड प्रोडक्ट्स**, लण्डन : डब्लु.एम.एलेन एण्ड कं.लि., सन् १८९३ ।
हुसेन, असद्, **ब्रिटिस इण्डियाज रिलेसन विथ द किंगडम अफ नेपाल, १८५७-१९४७**, लण्डन : जर्ज एलेन एण्ड अनविन लि., सन् १९७० ।
इश्वरी प्रसाद, **द लाइफ एण्ड टाइम्स अफ महाराज जुद्ध शमशेर जङ्गबहादुर राणा अफ नेपाल**, न्यू दिल्ली : आशिष पब्लिसिङ हाउस, सन् १९७५ ।
ल्याण्डन, पर्सिवल, **नेपाल**, भोलुम १-२, (रिप्रिन्ट), काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९७६ ।
मजुमदार, आ.सी. एण्ड एट.अल., **एन एड्भान्स्ड हिस्ट्री अफ इण्डिया**, मद्रास : एस.जी. वासानी फर म्याकमिलन इण्डिया लिमिटेड, सन् १९८८ ।
मल्ल, के.एम., **नेपाल : जनरल जोग्राफीकल एकाउन्ट**, काठमाण्डु : धर्मोदय सभा,

फोर्थ वर्ल्ड बुद्धिस्ट कन्फरेन्स, मिति नभएको ।

मानन्धर, त्रिरत्न, **सम आस्पेक्टस् अफ राणा रूल इन नेपाल**, काठमाण्डु : पूर्णदेवी मानन्धर, सन् १९८३ ।

मास्के, गोविन्द, **सोशल हिस्ट्री अफ नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९६ ।

मोरिस, सी.जे., **द गोर्खाज : एन इथ्नोलोजी**, (रिप्रिन्ट), दिल्ली : लो प्राइस पब्लिकेशन्स, सन् १९३३ ।

नेपाली, गोपालसिंह, **द नेवार्स : एन इथ्नो-सोशोलोजिकल स्टडी अफ हिमालयन कम्यूनिटी**, बम्बई : यूनाइटेड एशिया पब्लिकेशन्स, सन् १९६५ ।

पन्त, महेशराज एण्ड शर्मा, ऐश्वर्यधर, **द टु अर्लिस्ट कपर प्लेट इन्स्क्रीप्सन फ्रम नेपाल**, काठमाण्डु : नेपाल रिसर्च सेन्टर, सन् १९७७ ।

पाल, प्रतापादित्य, **द आर्टस् अफ नेपाल**, भाग १, निदर्ल्याण्डस् : इ.जे. ब्रिल, सन् १९७४ ।

रमाकान्त, **इण्डो-नेप्लिज रिलेशन्स १८१६-१८७७**, दिल्ली : एस. चन्द एण्ड कं., सन. १९६८ ।

रामेश, एस. र बृन्दा रामेश, **कुमाउँ ज्वेल्स अफ हिमालयज**, न्यू दिल्ली : यु बी एस पब्लिशर्स डिस्ट्रीब्यूटर्स लि., सन् २००१ ।

राठौर, कमलराजसिंह, **द ब्रिटिस एण्ड द ब्रेभ**, जयपुर : निराला पब्लिकेशन, सन् १९८५ ।

रेग्मी, डी.आर. **मोडर्न नेपाल**, भोलुम -१, (सेकेन्ड एडिसन), कलकत्ता : फर्मा के.एल. मुखोपाध्याय, सन् १९७५ ।

रेग्मी, महेश सी., **ल्याण्ड टेन्यूर एण्ड टेक्सेशन इन नेपाल**, (रिप्रिन्ट), काठमाण्डु : रत्न पुस्तक भण्डार, सन् १९७८ ।

__________, **एन इकोनोमिक हिस्ट्री अफ नेपाल १८४६-१९०१**, वाराणसी : नाथ पब्लिशिङ हाउस, सन् १९८८ ।

सतिश कुमार, **राणा पोलिटी इन नेपाल : ओरिजिन एण्ड ग्रोथ**, बम्बई : एशिया पब्लिशिङ हाउस, सन् १९६७ ।

सरकार, जदुनाथ, **मुगल एडमिनिस्ट्रेशन**, (फोर्थ एडिशन), कलकत्ता : एम.सी. सरकार एण्ड सन्स लि., सन् १९५२ ।

सेभर, एड्रियान, **नेपाल अण्डर द राणाज**, न्यू दिल्ली : अक्सफोर्ड एण्ड आई बी एच

पब्लिशिङ कं. प्रा.लि., सन् १९९२ ।

श्रेष्ठ, मंगलकृष्ण, **पब्लिक एड्मिनिस्ट्रेशन इन नेपाल**, काठमाण्डु : एजुकेशनल इन्टरप्राइजेज प्रा.लि., सन् १९७५ ।

श्रेष्ठ, तुल्सीनारायण, **नेप्लिज एड्मिनिस्ट्रेशन ए हिस्ट्रीकल पर्सपेक्टीभ**, काठमाण्डु : रिनो पब्लिकेशन्स्, सन् १९८९ ।

सिद्धिका, समिमा, **मुस्लिमस् अफ नेपाल**, काठमाण्डु : गजला सिद्धिका, सन् १९९३ ।

सिन्हा, सी.पी.एन., **मिथिला अण्डर द कर्णाटज्**, पटना : जानकी प्रकाशन, सन् १९७९ ।

स्कट, जोहन एण्ड गोर्डन मार्शल, (सम्पा.), **अक्सफोर्ड डिक्सनरी अफसोशियोलोजी**, न्यू योर्क : अक्सफोर्ड यूनिभर्सिटी प्रेस, सन् २००५ ।

स्टीलर, लुड्विग एफ., **द राइज अफ द हाउस अफ गोर्खा**, (सेकेन्ड एडिसन), पटना : जेसुइट सोशाइटी, सन् १९७५ ।

थापा, कृष्ण बि., **मेन आस्पेक्ट्स अफ सोशल, इकोनोमिक एण्ड एड्मिनिस्ट्रेटिभ हिस्ट्री अफ मोडर्न नेपाल**, काठमाण्डु : अम्बिका थापा, सन् १९८८ ।

**द न्यू इन्साइक्लोपेडिया ब्रिटानिका**, भोलुम ३ र ६, सिकागो : इन्साइक्लोपेडिया ब्रिटानिका इन्क, सन् १९७५ ।

वैद्य, तुलसीराम, **पृथ्वी नारायण शाह : द फाउण्डर अफ मोडर्न नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स्, सन् १९९३ ।

वैद्य, तुलसीराम एण्ड त्रिरत्न मानन्धर, **क्राइम एण्ड पनिसमेन्ट इन नेपाल : ए हिस्ट्रीकल पर्सपेक्टिभ**, काठमाण्डु : बिनी वैद्य एण्ड पूर्णदेवी मानन्धर, सन् १९८५ ।

वैद्य, टी.आर. एण्ड एट.अल., **सोशल हिस्ट्री अफ नेपाल**, न्यू दिल्ली : अनमोल पब्लिकेशन्स्, सन् १९९३ ।

भेन्सीटार्ट, इडेन, **द गुर्खाज**, (रिप्रिन्ट), न्यू दिल्ली : अनमोल पब्लिकेशन्स, सन् १९९३ ।

**नेपाली पुस्तकहरू**

अधिकारी, सूर्यमणि, **तनहुँ राज्यको इतिहास**, चितवन : चन्द्रप्रभा प्रकाशन, वि.सं. २०५५ ।

__________, **पश्चिम नेपालको खश अधिराज्य**, काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५ ।

__________, **नेपाली भाषाको इतिहास**, काठमाडौं : भुँडीपुराण प्रकाशन, वि. सं. २०५६ ।

आचार्य, बाबुराम, **नेपालको सङ्क्षिप्त वृत्तान्त**, (प्रथम संस्करण), काठमाडौँ : प्रमोद शमशेर र नीर विक्रम प्यासी, वि.सं. २०२२ ।

__________, **श्री ५ बडा महाराजाधिराज पृथ्वी नारायण शाहको सङ्क्षिप्त जीवनी**, भाग १-४, काठमाडौँ : श्री ५ महाराजाधिराजका प्रमुख संवाद सचिवालय, वि.सं.२०२४-२०२६ ।

उपाध्याय, रामजीप्रसाद, **नेपालको इतिहास अर्थात दिग्दर्शन**, बनारस : होमनाथ केदारनाथ, सन् १९५० ।

उपाध्याय रेग्मी, चूडामणि, **नेपाली भाषाको उत्पत्ति**, काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०४७ ।

कसजू, विनयकुमार (सम्पा.), **श्री माधवप्रसाद देवकोटाको स्मृति ग्रन्थ**, पाल्पा : अभिनन्दन समारोह समिति, वि.सं. २०४४ ।

के.सी. सुरेन्द्र, **नेपालको कुटनीतिक इतिहास**, ताप्लेजुङ : सविता प्रकाशन, वि.सं.२०४६ ।

क्षेत्री, नारायणप्रसाद, **मुस्ताङ दिग्दर्शन**, काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०४४ ।

खनाल, मोहनप्रसाद, **मध्यकालीन अभिलेख**, काठमाडौँ : लेखक स्वयं, वि.सं. २०३० ।

__________, **नेपाली कला**, काठमाडौँ : साझा प्रकाशन, वि.सं. २०५२ ।

**खनिज परिचय**, काठमाडौँ : श्री ५को सरकार,उद्योग वाणिज्य मन्त्रालय,खानी विभाग, वि.सं.२०१९ ।

गुरुङ, जगमान, **गुरुङ जाति तथा संस्कृति**, कास्की : लेखक स्वयं, वि.सं. २०३४ ।

घिमिरे, विष्णुप्रसाद, **पाल्पा राज्यको इतिहास**, भाग- १, चितवन : पद्मा घिमिरे, वि.सं. २०४५ ।

चटौत, आर.डी."प्रभास", **डोट्याली बृहत् शब्दकोश**, काठमाडौँ : बेलु–विश्व स्मृति प्रतिष्ठान, वि.सं. २०५८ ।

चौधरी, दिपक, **नेपालको मधेसी समाज**, काठमाडौँ : रत्न पुस्तक भण्डार, वि.सं. २०६५ ।

**जिल्ला प्रशासन दिग्दर्शन**, श्री ५ को सरकार, राष्ट्रिय निर्देशन मन्त्रालय, प्रचार तथा प्रसार विभाग, वि.सं.२०१८ ।

दाहाल, डिल्लीराम (सम्पा.), **नेपालका केही पिछडिएका जातिहरूको सामाजिक-आर्थिक अध्ययन**, काठमाडौँ : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५६ ।

देवकोटा, ग्रृष्मबहादुर, **नेपालको राजनैतिक दर्पण**, भाग १-२, (द्वितीय आवृत्ति),

काठमाडौं : अर्जुनबहादुर देवकोटा, वि.सं. २०३५-२०३६ ।

देवकोटा, माधवप्रसाद, **लेखमाला**, स्वयं प्रकाशित, वि.सं.२०३८ ।

नेपाली, चित्तरञ्जन, **श्री ५ रणबहादुर शाह**, काठमाडौं : श्रीमती मेरी राजभण्डारी, वि.सं. २०२० ।

__________, **जनरल भीमसेन थापा र तत्कालीन नेपाल**, (तेस्रो संस्करण), काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०३५ ।

पंगेनी, भवेश्वर, **पाल्पामा प्रजातान्त्रिक आन्दोलनका सय दिन वि.सं. २००७**, पाल्पा : निमा पंगेनी, वि.सं. २०४९ ।

पन्त, कालीभक्त, **हाम्रो साँस्कृतिक इतिहास**, काठमाडौं : लेखक स्वयं, वि.सं. २०४३ ।

पन्त, दिनेशराज, **गोरखाको इतिहास**, भाग -१, काठमाडौं : लेखक स्वयं, वि.सं. २०४१ ।

पन्त, नयराज र अरू (सम्पा.), **श्री ५ पृथ्वी नारायण शाहको उपदेश**, १-५ खण्ड, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०२५-२०२८ ।

पन्थी, टीकाराम, **केही जनश्रुतिहरू**, गुल्मी : किरण पुस्तकालय, वि.सं. २०४२ ।

पोखरेल, बालकृष्ण, **नेपाली भाषा र साहित्य**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं. २०२५ ।

__________, **पाँच सय बर्ष**, (तेश्रो पटक), ललितपुर : साझा प्रकाशन, वि.सं. २०५० ।

__________, **खस जातिको इतिहास**, विराटनगर : उदात्त अनुसन्धान अड्डी, वि.सं. २०५५ ।

पोखरेल, बालकृष्ण र अन्य (सम्पा.), **नेपाली वृहत् शब्दकोश**, (प्रथम संस्करण), काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४० ।

बज्राचार्य, धनबज्र (सम्पा.) **पण्डित सुन्दरानन्द विरचित त्रिरत्न सौन्दर्य गाथा**, काठमाडौं : नेपाल साँस्कृतिक परिषद, वि.सं. २०१९ ।

__________, **लिच्छवीकालका अभिलेख**, (द्वितीय संस्करण), काठमाडौं : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३ ।

बज्राचार्य, धनबज्र र ज्ञानमणि नेपाल, (सम्पा.), **ऐतिहासिक पत्र सङ्ग्रह**, भाग -१, काठमाडौं : नेपाल साँस्कृतिक परिषद, वि.सं. २०१४ ।

बज्राचार्य, धनबज्र र अन्य (सम्पा.), **इतिहास संशोधनको प्रमाण प्रमेय**, पहिलो भाग, ललितपुर : जगदम्बा प्रकाशन, वि.सं. २०१९ ।

बन्धु, चुडामणि, **नेपाली भाषाको उत्पत्ति**,(पाँचौं संस्करण), काठमाडौं : साझा प्रकाशन, वि.सं. २०५२ ।

__________, **नेपाली साहित्यको इतिहास**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०६० ।

बराल मगर, केशरजंग, **पाल्पा, तनहुँ र स्यांजाका मगरहरूको संस्कृति**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०५० ।

बानियाँ, कर्णबहादुर, **पाल्पाको भगवती जात्रा**, तानसेन : श्रेष्ठ पुस्तक भण्डार, वि.सं. २०५३ ।

बानियाँ क्षत्री, कर्णबहादुर, **पाल्पा गौंडा : एक ऐतिहासिक अध्ययन**, काठमाडौं : फूलचोकी पब्लिकेशन एण्ड डिष्ट्रिब्यूटर्स प्रा.लि., वि.सं.२०६३ ।

बानियाँ, कर्णबहादुर र अन्य (सम्पा.), **प्रतिभा**, पाल्पा : वाङमय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०५५ ।

बिष्ट, सोमध्वज, **शाही नेपाली सेनाको इतिहास**, काठमाडौं : नारायणजंग शाह र नरेन्द्रमानसिंह बस्न्यात, वि.सं. २०२० ।

भण्डारी, ढुण्डीराज, **नेपालको आलोचनात्मक इतिहास**, खण्ड २, नेपाल : प्रकाश प्रकाशन, वि.सं. २०२७ ।

मल्ल, खड्गमान, **नेपालको भूगोल**, (आठौं संस्करण), नेपाल : नेपाली भाषा प्रकाशिनी समिति, वि.सं. २०१० ।

**मेचीदेखि महाकाली**, भाग ३ र ४, श्री ५ को सरकार संचार मन्त्रालय,सूचना विभाग, वि.सं.२०३१ ।

योगी, नरहरिनाथ, **इतिहास प्रकाश**, अङ्क १, काठमाडौं : इतिहास प्रकाश मण्डल, वि.सं. २०१२ ।

__________, **इतिहास प्रकाश**, अङ्क २, भाग १, काठमाडौं : इतिहास प्रकाशक संघ, वि.सं. २०१३ ।

__________, **इतिहास प्रकाशमा सन्धिपत्र सङ्ग्रह**, भाग १, दाङ : आध्यात्मिक सम्मेलन, वि.सं. २०२२ ।

__________, **हाम्रो देशदर्शन**, स्वयं प्रकाशित, वि.सं. २०३२ ।

__________, **देवभूमि भारत एवं आध्यात्मिक नेपाल**, काठमाडौं : वि. सं. २०३८ ।

**यो हो पाल्पा**, काठमाडौं : गृह पंचायत मन्त्रालय, योजना, प्रगति तथा तथ्याङ्क शाखा, वि.सं. २०२५ ।

राजभण्डारी, काजी रोशन (सम्पा.), **पं.जगन्नाथ उपाध्याय : स्मृति ग्रन्थ**, बाग्लुङ : धवलागिरी साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०४९ ।

राजवंशी, शंकरमान (सम्पा.), **पुरातत्व पत्र सङ्ग्रह**, भाग -२, काठमाडौं : पुरातत्व र संस्कृति विभाग, वि.सं. २०१८ ।

__________, **सेन बंशावली**, काठमाडौं : श्री ५ को सरकार, पुरातत्व र संस्कृति विभाग, वि.सं. २०२० ।

__________, **शाहकालीन ऐतिहासिक चिठीपत्र सङ्ग्रह**, भाग -१, श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, वीर पुस्तकालय, वि.सं. २०२३ ।

रेग्मी, कमलराज र अन्य (सम्पा.), **पाल्पामा २००७ सालको आन्दोलन**, पाल्पा : स्यार्टेड क्लब, वि.सं. २०५३ ।

रेग्मी, जगदीशचन्द्र,**नेपालको धार्मिक इतिहास**, काठमाडौं : रत्न पुस्तक भण्डार, वि.सं.२०३९ ।

__________,**लिच्छवी इतिहास**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३ ।

लंसाल, देवीप्रसाद (सम्पा.), **भाषा बंशावली**, भाग -२, (प्रथम संस्करण), श्री ५ को सरकार, शिक्षा मन्त्रालय, पुरातत्व विभाग, नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३ ।

वैद्य, तुलसीराम र त्रिरत्न मानन्धर, **आधुनिक नेपालको प्रशासनिक इतिहास (सन् १७६८-१९५१)**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३ ।

वैद्य, तुलसीराम र भद्ररत्न बज्राचार्य, **मध्यकालीक नेपालको प्रशासनिक इतिहास** (८७९-१७६९ ई.), कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं. २०५५ ।

शर्मा, गोपीनाथ, **नेपालको शैक्षिक इतिहास**, (परिमार्जित संस्करण) काठमाडौं : लुम्बिनी पुस्तक भण्डार, वि.सं. २०५७ ।

शर्मा, जनकलाल, **हाम्रो समाज : एक अध्ययन**, (द्वितीय संस्करण), काठमाडौं : साझा प्रकाशन, वि.सं. २०४९ ।

__________, **जोसमनी सन्त परम्परा र साहित्य**, (द्वितीय संस्करण), काठमाडौं : साझा प्रकाशन, वि.सं. २०५२ ।

शर्मा, डिल्लीराज, **नेपालको किल्ला वास्तुकला**, काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५५,।

__________, **गण्डकीप्रस्रवण क्षेत्रको सांस्कृतिक सम्पदा : कला र वास्तुकला**, काठमाडौं : नेपाल र एसियाली अनुसन्धान केन्द, वि.सं. २०६० ।
शर्मा 'मैत्रेय', विष्णुप्रसाद, **बाग्लुङको ऐतिहासिक रूपरेखा**, बाग्लुङ : धवलागिरी साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०५१ ।
शर्मा, शरदचन्द्र, **नेपाल र यसका निवासी : परिचयात्मक विवरण**, (दोश्रो संस्करण), काठमाडौं : श्री ५ को सरकार, संचार मन्त्रालय, मुद्रण तथा प्रकाशन विभाग, वि.सं. २०४५ ।
शर्मा, हीरामणि, **समालोचनाको बाटोमा**, पर्वत : इन्दिरा शर्मा पौडेल, वि.सं. २०४१ ।
शिवाकोटी, गोपाल, **राजनीतिक शब्दकोश**, काठमाडौं : पैरवी प्रकाशन, २०६७ ।
श्रेष्ठ, कृष्णप्रकाश (सम्पा.), **स्थाननाम कोश**, काठमाडौं : नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४४ ।
श्रेष्ठ, टेकबहादुर, **पर्वत राज्यको ऐतिहासिक रुपरेखा**, कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान
केन्द्र, वि.सं. २०५९ ।
सेन, सूब, **पालपाली सेन (पालपादेखि पुरकोटसम्म)**, काठमाडौं : खड्ग सेन ओली, वि.सं. २०५९ ।

**हिन्दी**

वर्मा, धीरेन्द्र, **हिंदीभाषा का इतिहास**, इलाहावाद : हिन्दुस्तानी एकेडेमी, सन् १९८८ ।

**ऐन, सवालहरू**

**नेपालको संविधान** २०१९, (छैठौं संस्करण), श्री ५ को सरकार, कानून तथा न्याय मन्त्रायल, कानून किताब व्यवस्था समिति, वि.सं. २०३५ ।
**नेपाल गजेट**,
२००८ साल फागुन २० गते ।
२००९ साल फागुन ५ गते ।
२०१० साल आषाढ २ गते ।
२०१२ साल मार्ग २ गते ।
२०१७ साल जेष्ठ २ गते ।
२०१७ साल भाद्र १४ गते ।
२०२२ साल चैत्र १० गते ।
२०३२ साल मार्ग २६ गते ।
**मुलुकी ऐन**, (वि.सं. १९४३ देखि १९६२ सम्मको संशोधन समावेश गरिएको) ने.भा.नं.

५६३, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

**मुलुकी ऐन**, (वि.सं. १९४५), ने.भा.नं. ५३९, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

**मुलुकी ऐन**, (वि.सं. १९८०), ने.भा.नं. १३९, राष्ट्रिय अभिलेखालय, काठमाडौं ।

**मुलुकी ऐन**, (वि.सं. १९८४), ने.भा.नं. १४०, राष्ट्रियू अभिलेखालय, काठमाडौं ।

**मुलुकी ऐन**, भाग १, काठमाडौं : गोरखापत्र छापाखाना, वि.सं. २०१२ ।

**मुलुकी ऐन**, श्री ५ को सरकार, कानून, न्याय तथा संसदीय व्यवस्था मन्त्रालय, कानून किताब व्यवस्था समिति, वि.सं. २०५१ ।

**श्री ५ सुरेन्द्र विक्रम शाह देवका शासनकालमा बनेको मुलुकी ऐन**, काठमाडौं : श्री ५ को सरकार, कानून तथा न्याय मन्त्रालय, कानून किताब व्यवस्था समिति, वि.सं. २०२२ ।

**लेख, रचनाहरू**

**अङ्ग्रेजी**

अधिकारी, कृष्णकान्त, "ए ब्रिफ सर्भे अफ द अर्गनाइजेशन एण्ड स्ट्रक्चर अफ नेपाली ल कोर्टस् डुरिङ द थर्ड क्वाटर अफ द नाइन्टीन्थ सेञ्चुरी", **कन्ट्रीव्यूशन टु नेप्लिज स्टडीज**, भोलुम ६, नं. २, सन् १९७९ ।

___________, "द स्टाटस्, पावर्स एण्ड फङ्क्सन्स अफ राजा एण्ड रजौटा डुरिङ द नाइन्टिन्थ सेञ्चुरी नेपाल इन द लाइट अफ कन्टेम्पोरेरी डकुमेन्ट्स्", **कन्ट्रिब्यूसन टु नेप्लिज स्टडिज**, भो. ८, न..१, सन् १९८० ।

एड्वार्डस्, डेनियल डब्लु. "दौडाहा (इन्स्पेक्सन टूर) सिस्टम अण्डर द राणाज", **कन्ट्रीब्यूसन टु नेप्लिज स्टडिज**, भोलुम ३, नं. २, सन् १९७६ ।

एड्वार्डस्, डन, "द रिलेशन बिटविन काठमाण्डु एण्ड पाल्पा इन द राणा पिरियड", **कैलाश**, भोलुम ४, नं. १, सन् १९७६ ।

गौचन, सुरेन्द्र एण्ड भिन्डिङ, माइकेल, "द हिस्ट्री अफ द थकाली एकोर्डिङ टु द थकाली ट्रेडिशन", **कैलाश**, भोलुम ५, नं. २, सन् १९७७ ।

**नेपाली**

आचार्य, बाबुराम, "गोरखा विजयकालका घटना", **पूर्णिमा**, वर्ष ७, अङ्क ३, पूर्णाङ्क २७, वि.सं.२०२९ ।

कसजू, विनयकुमार, "लुम्बिनी अञ्चलमा भाषा र साहित्यको उन्नतिका निम्ति व्यक्तिगत र संस्थागत प्रयासहरू", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अङ्क २, वि.सं. २०३९ ।

कुँवर, हरिबहादुर, "पाल्पाली लोकगीत र यसका प्रतिभाहरू", **पाल्पा दर्पण**, अङ्क २,

वि.सं. २०४० ।
खनाल, रेवतीरमण, "नेपालको कानूनी इतिहासमा प्रधानन्यायालयको भूमिका", **न्यायदूत**, नं. २२, वि.सं. २०३४ ।
जोशी, जगतबहादुर, "पाल्पा जागरणको रूपरेखा विस्मृतिको गर्भबाट", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अङ्क २, वि.सं. २०३९ ।
____________, "साँस्कृतिक जागरणका प्रवाहमा पाल्पा", **पाल्पा दर्पण**, अङ्क ३, वि.सं. २०४९ ।
____________, "प्रजातन्त्रोन्मुख पाल्पाको इतिहास", कमलराज रेग्मी र अन्य (सम्पा.), **पाल्पामा २००७ सालको आन्दोलन**, पाल्पा : स्याटर्डे क्लब, वि.सं. २०५३ ।
तेवारी, रामजी, "वि.सं. १८४३ मा भएका केही मुख्य घटना", **पूर्णिमा**, वर्ष १, अङ्क २, पूर्णाङ्क २, वि.सं. २०२१ ।
दिक्षित, कमल, "छविलाल नेपाल", **श्रीनगर**, सङ्कलन ३, वि.सं. २०२९ ।
देवकोटा, माधवप्रसाद, "पाल्पाली कवि छविलाल नेपाल", **श्रीनगर**, सङ्कलन ३, वि.सं. २०२९ ।
____________, "भाषण गरे वापत जेलको त्रास", **पाल्पा दर्पण**, अङ्क १, वि.सं. २०३९ ।
पंगेनी, भवेश्वर, "काजी अमरसिंह थापा र पाल्पा विजयका घटना", **पाल्पा दर्पण**, अङ्क ३, वि.सं. २०४९ ।
पन्त, दिनेशराज, "आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति", **पूर्णिमा**, वर्ष २, अङ्क २, पूर्णाङ्क ६, वि.सं. २०२२ ।
पन्त, महेशराज, "नेपालसँग वजीर अली काण्डको सम्बन्ध", **पूर्णिमा**, वर्ष ६, अंक ४, पूर्णाङ्क २४, वि.सं.२०२६ ।
____________, "पाल्पा राज्यको नेपाल अधिराज्य र अवधसँग सम्बन्ध", **पूर्णिमा**, वर्ष ७, अंक १, पूर्णाङ्क २५, वि.सं.२०२८ ।
____________, "वि.सं. १८७१ कार्तिक २३ गतेका १७ वटा लालमोहर", **पूर्णिमा**, वर्ष २४, अङ्क ३, पूर्णाङ्क ९५, वि.सं. २०५५ ।
पन्त, महेशराज र दिनेशराज पन्त, "नेपाल खाल्डोमा पाल्पाली राजा मुकुन्द सेनको हमला", **पूर्णिमा**,
वर्ष १२, अंक १, पूर्णाङ्क ४५, वि.सं. २०३७ ।
पन्त, हरेराम, "हुंगी पाठशाला", **पाल्पा दर्पण**, अङ्क ३, वि.सं. २०४९ ।
पन्थी, टिकाराम, "लुम्बिनी अञ्चलका संस्कृत कवि र कविता", **हाम्रो पुरुषार्थ**, वर्ष ९,

अङ्क २, वि.सं. २०३९ ।
प्रधान, विश्व, "नेपालमा खानीको सम्भाव्यता" **प्रज्ञा**, वर्ष ५, अङ्क १, पूर्णाङ्क १५, वि.सं. २०३२ ।
बन्धु, चूडामणि, " कवि माधवप्रसाद देवकोटा", **पाल्पा दर्पण**, अंक १, वि.सं. २०३९ ।
बागची, सुदिप, "पाल्पामा अङ्ग्रेजी भाषा र साहित्य : एक चिनारी", **हाम्रो पुरुषार्थ**, वर्ष ९, अङ्क २, वि.सं. २०३९ ।
भट्टराई, मथुरा, "नेपाली साहित्यमा पाल्पा जिल्लाको योगदान", **पाल्पा दर्पण**, अङ्क ४, वि.सं. २०५३ ।
भण्डारी, देवीप्रसाद (सम्पा.),"ऐ.शि.बाबुराम आचार्यले रचना गर्नु भएको नेपालको संक्षिप्त इतिहास", **पूर्णिमा**, वर्ष १६, अङ्क ४, पूर्णाङ्क ४६, वि.सं. २०४१ ।
मल्ल, मोहनबहादुर, "पर्वतको इतिहास", **प्राचीन नेपाल**, सङ्ख्या १६ वि.सं. २०२८ ।
शर्मा, गोपीकृष्ण, "पाल्पाको साहित्यिक जगतः एक सर्वेक्षण", **पाल्पा दर्पण**, अङ्क १, वि.सं. २०३९ ।
____________, "पाल्पामा शैक्षिक तथा साहित्यि जागरण", **पाल्पा दर्पण**, अङ्क ३, वि.सं. २०४९ ।
शर्मा पौड्याल, मुकुन्द, "प्रसंग-श्रद्धा स्मरणको", **पं.जगन्नाथ उपाध्याय : स्मृति ग्रन्थ**, बाग्लुङ : धवलागिरी साहित्य पुरस्कार प्रतिष्ठान, वि.सं. २०४९ ।
शर्मा, भेषराज, "राणा शासनकालमा पाल्पाको शैक्षिक गतिविधि र त्यसमा संलग्न प्रतिभाहरू", **पाल्पा दर्पण**, अङ्क २, वि.सं. २०४० ।
शर्मा, मेघराज, "पाल्पाबाट प्रकाशित पत्र-पत्रिकाहरूको संक्षिप्त विवेचना", **पाल्पा दर्पण**, अङ्क १, वि.सं. २०३९ ।
शर्मा, हीरामणि, "स्व. माधवप्रसाद देवकोटाको गद्यकारिताको विश्लेषण र मूल्यांकन", **समालोचनाको बाटोमा**, पर्वत : इन्दिरा शर्मा पौडेल, वि.सं. २०४१ ।
शाक्य, छत्रराज, "पाल्पामा बुद्ध धर्म : एक संक्षिप्त विवरण", **सत्य**, वर्ष ७, अङ्क ३४, वि.सं. २०४६ ।
श्रेष्ठ, नारायणप्रसाद, "पाल्पाको सम्झना गर्दा", **मधुपर्क**, वर्ष १७, अङ्क १, वि.सं. २०४१ ।
श्रेष्ठ, निर्मल, "टानसिङ तानसिङ तानसेन", **पाल्पा दर्शन**, वि.सं.२०६१ ।
श्रेष्ठ,मंगलकृष्ण "जिल्ला प्रशासनको नयाँ योजना", **प्रशासन**, वर्ष ६, अङ्क ३, पूर्णाङ्क १३, वि.सं. २०३२ ।
श्रेष्ठ, रामेश्वर, "नेपालको एकीकरण अभियानमा बाकुम गढीको युद्ध", **प्राज्ञिक प्रवाह**,

वि.सं.२०६१ ।
श्रेष्ठ, विनोद, "तानसेन : एक परिचय", **श्रीनगर**, अङ्क १, वि.सं.२०२९ ।

**पत्र-पत्रिकाहरू**

**अङ्ग्रेजी**

**कन्ट्रीब्यूशन टु नेप्लिज स्टडीज,**
भोलुम ३, नं. २, सन् १९७६ ।
भोलुम ६, नं. २, सन् १९७९ ।
भोलुम ८, नं. १, सन् १९८० ।
**कैलाश,** भोलुम ४, नं. १, सन् १९७६ ।
भोलुम ५, नं. २, सन् १९७७ ।

**नेपाली**

**अभिलेख,** वर्ष १०, अङ्क १०, वि.सं. २०४९ ।
**गोरखापत्र,**
१९६७ साल आषाढ १४ गते ।
२०१८ साल कार्तिक १६ देखि मार्ग १ गते सम्म ।
२०२० साल ज्येष्ठ २ गते ।
२०२० साल भाद्र १ गते ।
२०२० साल कार्तिक १३ गते ।
२०२२ साल पौष ६ गते ।
**न्यायदूत,** नं. २२, वि.सं. २०३४ ।
**पाल्पा दर्पण,**
अङ्क १, वि.सं. २०३९ ।
अङ्क २, वि.सं. २०४० ।
अङ्क ३, वि.सं. २०४९ ।
अङ्क ४, वि.सं. २०५३ ।
**पाल्पा दर्शन,** वि.सं. २०६१ ।
**पूर्णिमा,** वर्ष १, अङ्क २, पूर्णाङ्क २, वि.सं. २०२१ ।
वर्ष २, अङ्क २, पूर्णाङ्क ६, वि.सं. २०२२ ।
वर्ष ५, अङ्क ४, पूर्णाङ्क २०, वि.सं. २०२५ ।
वर्ष ६, अङ्क ४, पूर्णाङ्क २४, वि.सं. २०२६ ।

वर्ष ७, अङ्क १, पूर्णाङ्क २५, वि.सं. २०२८ ।
वर्ष ७, अङ्क ३, पूर्णाङ्क २७, वि.सं. २०२९ ।
वर्ष १२, अङ्क १, पूर्णाङ्क ४५, वि.सं. २०३७ ।
वर्ष १६, अङ्क ४, पूर्णाङ्क ६४, वि.सं. २०४१ ।
वर्ष २४, अङ्क ३, पूर्णाङ्क ९५, वि.सं. २०५५ ।

**प्रज्ञा**, वर्ष ५, अङ्क १, पूर्णाङ्क १५, वि.सं. २०३२ ।

**प्रशासन**, वर्ष ६, अङ्क ३, पूर्णाङ्क १३, वि.सं. २०३२ ।

**प्राचीन नेपाल**, सङ्ख्या १६, वि.सं. २०२८ ।

**प्राज्ञिक प्रवाह**, वि.सं. २०६१ ।

**बुकी**, गुच्छा २, वि.सं. २०२६ ।

**मधुपर्क**, वर्ष १७, अङ्क १, वि.सं. २०४१ ।

**श्रीनगर**, सङ्कलन १, वि.सं. २०२९ ।
सङ्कलन ३, वि.सं. २०२९ ।

**सत्य**, वर्ष ७, अङ्क ३४, वि.सं. २०४६ ।

**स्मारिका**,

आरती : **स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : मोहन कन्या माध्यमिक विद्यालय, वि.सं.२०५७ ।

पाल्पा : **स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : भैरवजनता उच्च मा.वि., वि.सं. २०५९ ।

**महेन्द्रवोधि माध्यमिक विद्यालय स्मारिका**, वि.सं. २०६० ।

**स्वर्ण जयन्ती स्मारिका**, पाल्पा : पद्य पब्लिक नमूना माध्यमिक विद्यालय, वि.सं. २०५४ ।

**स्वर्ण महोत्सव स्मारिका**, पाल्पा : त्रिभुवन बहुमुखी क्याम्पस, वि.सं. २०६०, वि.सं.२०६० ।

**हाम्रो पुरुषार्थ**, वर्ष ९, अङ्क २, वि.सं. २०३९ ।

http : / / : en / Wikipedia.org



## लेखक परिचय

नाम : कर्णबहादुर बानियाँ
जन्मस्थान : म्याग्दी जिल्ला, पुलाचौर गा.वि.स., भीरमुनि
जन्म मिति : २०१२ / ०२/११
शिक्षा : विद्यावारिधि (इतिहास), स्नातक (कानुन)
पेशा : शिक्षण
शिक्षण सेवा : (क) प्राध्यापनः २०४४ देखि हालसम्म
(ख) मा.वि. स्तरमा शिक्षण १५ वर्ष

**प्रकाशित कृति :**

इतिहास र सँस्कृतिः

(१) पाल्पाको भगवती जात्रा (२०५३)
(२) बानियाँ वंशको नालीबेली (२०६२)
(३) पाल्पा गौंडाः एक ऐतिहासिक अध्ययन (२०६३)
(४) नेपालको इतिहासमा उजिरसिंह थापाको योगदान (२०७०)

बालकथा सङ्ग्रहः

(१) अटेरी चल्लो (२०४४)
(२) एक अनौठो जङ्गल (२०४९)
(३) चकलेटको पोको (२०६२)

कविता सङ्ग्रहः

(१) मनका तरङ्गहरू

पुरस्कारः

(१) धवलागिरी साहित्य पुरस्कार (२०४४)
(२) सुकदेवसुकमाया लामिछाने बालसाहित्य पुरस्कार (२०६५)
(३) नेपाल विद्याभूषण 'क' (२०६६)
(४) त्रि.वि.विशिष्ट सेवा पुरस्कार (२०६७)


9 789937 268257